रावण कृतः

# अर्क प्रकाशः

(रावणले लेखेको आयुर्वेद ग्रन्थ)



सङ्कलन एवं भावानुवादः मोहन प्रसाद सापकोटा

भाषा : संस्कृत-नेपाली

## दुई शब्द

अर्क भन्नाले फलफूल, अनाज आदि उसिनेर बाफको रूपमा निकालेको रस वा पसिनालाई बुझाउँदछ । रक्सी, मदिरा, अत्तर, अरिष्ट आदि यसका अनेक नाम हुन्छन् । त्रेता युगमा लङ्काका राजा रावणद्वारा लेखिएको हो भनी बताइने यो पुस्तकमा भगवान् शिवबाट सिकिएका आयुर्वेद सम्बन्धी कुरा रावणले आफ्नी पत्नी मन्दोदरीलाई बताइएको विवरण पाइन्छ ।

आयुर्वेदमा उपचारका विभिन्न विधि हुन्छन् । त्यसमध्ये अर्कको प्रयोग गरेर उपचार गर्ने एउटा विधि हो । अनेक थरी प्राकृतिक कुरालाई ओखतीका लागि मदिरा बनाउने पद्धतिको प्रारम्भिक विकास यही हिमाली क्षेत्रमा भएको थियो । मानव मात्रको कल्याणका लागि बताइएका यस्ता ज्ञान लोप हुँदै गए तर चप्पल कुवाएर मदिरा बनाई खुवाएर मानिस मार्ने खालका कुरा हामीले सिक्दै गयौं । यस पुस्तकमा अनाज, मासु, फलफूल आदि अनेक कुराबाट अर्क कसरी बनाउने र त्यसले के फाइदा गर्दछ भन्ने कुरा बताइएका छन् ।

भावानुवादका क्रममा कतिपय प्राचीन शब्दहरु सोचे जसरी अनुवाद गर्न सकिएन । व्याख्या गर्दा ग्रन्थ लामो हुने हुनाले अन्य आयुर्वेदका ग्रन्थको सहयोग लिई यसमा व्याख्या समेत गरिएको छैन । तर पनि सम्भव भएसम्म सरलीकरण गर्ने प्रयाश भने गरेको छु ।

मैले यो पुस्तक तयार पार्न सामाजिक सञ्जालमा उपलब्ध भएका कृष्णलालको भाषाटिका सहितको एक पुस्तक, पं.किसनलाल शर्माको असली प्राचीन रावण संहिता र एक नाम उल्लेख नभएको शोधग्रन्थको सहयोग लिएको छु । अनुवादका लागि पं.कुलचन्द्र शर्माको अमरकोश, नेपाली बृहद् शब्दकोश, के.एन.स्वामीको अनलाइन शब्दकोश, आयुर्वेद विश्वकोष, शब्दकल्पद्रुम र वाचस्पत्यं को सहयोग लिएँ ।



अन्धाधुन्ध रूपमा अर्कको प्रयोग र उत्पादन भइरहेको वर्तमान समयमा शरीरलाई फाइदा गर्ने किसिमले अर्कको प्रयोग गर्न एक हजार श्लोकको यो पुस्तकले सबैलाई सहयोग गर्नेछ भन्ने विश्वास लिएको छु । विद्यार्थी भएकाले यस पुस्तकमा अनजानमा भएका भूलहरु सुधार्न विद्वत्वर्गबाट सहयोगको अपेक्षा गर्दछु । सबैतिर लामो अर्थ लेख्न सम्भव नभएकोले सजिलोका लागि केही शब्दका अर्थ पुस्तकको अन्तिममा दिइएका छन् ।

-sapkotamps731@gmail.com
मितिः २०७९ ।०१।२१।०४

# अर्कप्रकाशमा रहेका विषयवस्तु

# ॥ श्री : ॥
# ॥ अर्कप्रकाशः ॥
# ॥ प्रथमं शतकम् ॥

## ॥ अथ मङ्गलाचरणम् ॥

**औषधीपतिनेत्राय पद्मिनीपतिमूर्तये ।**
**कालकालाय नीलाय पार्वतीपतये नमः ॥१॥**

औषधीका मालिक चन्द्रमा नै जसका आँखा छन् (जसका शिरमा चन्द्रमा छन्), जसको चन्द्रमा समान रूप छ, जो कालका पनि काल हुन् यस्ता नीलकण्ठ पार्वतीपति श्रीशिवलाई म नमस्कार गर्दछु ।

## ग्रन्थको इतिहास



**गर्भपारपरिक्रान्ता कन्या मन्दोदरी तथा ।**
**रावणं परिपप्रच्छ पूजान्ते तुष्टमानसम ॥२॥**

(पञ्चकन्यामा गणना गरिने) मन्दोदरी नामक कन्या (रावणकी पत्नी) ले गर्भको बोझले दुखी भई पूजाआजा सकेर प्रसन्न मनले आफ्ना स्वामी रावणलाई सोध्न लागिन् ।

## मन्दोदर्युवाच

**स्वामिन्दैत्यसुराराध्य चतुर्वेदविशारद ।**
**सदाऽणिमाद्याप्तकाम भुवनत्रयपालक ॥३॥**
**इदं शुक्रमवोघन्ते यदारभ्योदरे स्थितम् ।**
**तदारभ्य न शक्नोमि वक्तुं वक्तुमना मनाक् ॥४॥**

**दुःखं रोगश्च कालश्च त्वत्प्रसादान्मनागपि ।**
**रक्षोगणान्नस्पृशन्ति त्वेषां पीडा कथं मम ॥५॥**
**उपायं ब्रूहि मे नाथ गर्भिण्याहि यथोचितम् ।**
**यथा विवर्धते गर्भो जायते च बलं मम ॥६॥**

हे स्वामि ! हजुर दैत्य तथा देवताहरूबाट आराधना गर्न योग्य, चारै वेदका बारेमा पूर्णरूपमा जानकार, अणिमा आदि गरिएका आठ सिद्धिले परिपूर्ण, कामवान तथा तीन वटै लोकलाई पालन गर्ने हुनुहुन्छ । जबदेखि हजुरको कहिल्यै खेर नजाने वा विफल नहुने (अमोघ) बीर्य गर्भरूपमा मेरो पेटमा स्थिर भएर बस्यो, तबदेखि बोल्न मन हुँदाहुँदै पनि मलाई कुरा गर्न नै मन लाग्दैन । कुरा गरीहाले पनि सारा शरीरमा पीडा हुन थाल्दछ । हजुर जोसँग सन्तुष्ट हुनु हुन्छ त्यसलाई दुःख, रोग, काल र राक्षसगणले पनि छुन सक्दैनन् (यस्ता पति हुँदाहुँदै पनि) मलाई साधारण आईमाईलाई जस्तो दुःख किन भइरहेछ ? म गर्भवतीका लागि यस्तो कुनै उपाय बताउनु होस् जसले मेरो गर्भका साथै मेरो पनि बल बढोस् ।



**रावण उवाच**

**एकदा हि मया पृष्टा पार्वती प्रीतमानसा ।**
**उमे ते हि जगन्मातस्तव देहोद्भवाः सुताः ॥७॥**
**कथन्न हि गणेशाद्याः सदृशास्तव बालकाः ।**
**तिष्ठन्ति नानुरूपास्ते कारणं ब्रूहि मे शिवे ॥८॥**

रावणले भने-हे प्रिये ! एकपटक मैले पनि प्रसन्न भएकी पार्वतीसँग सोधेको थिएँ कि हे उमा ! हे जगदम्बिका ! हजुरका शरीरबाट उत्पन्न गणेश आदि पुत्र हजुरजस्ता किन छैनन् ? रुप र तेजमा पनि ती हजुरका अगाडि टिक्न सक्दैनन् । हे शिवे ! मलाई यसको कारण बताउनु होस् ।

## श्रीदेव्युवाच

**कामिनोऽनङ्गनाशाय जायन्ते बालकाः सुत ।**
**भार्याऽपि वृद्धा भवति तरुण्यपि सुते सति ।।९।।**
**एवं सदाशिवं रन्तुं सदैवाहं कुमारिका ।**
**गणेशस्कन्दनन्द्याद्याः कल्पिता मानसाः सुताः ।।१०।।**

पार्वतीले भन्नु भयो- हे पुत्र ! कामी पुरुषहरूबाट तिनका कामवासना शान्त वा नष्ट गर्दा जुन सन्तानलाई जन्माइने गरिन्छ, त्यस्ता सन्तान जन्माएपछि तरुनी नै भए पनि स्त्री चाँडै बूढी जस्ती देखिन्छे । म सधैं शिव-सेवामा समर्पित हुँदाहुँदै पनि कुमारी भइरहने गर्दछु । गणेश, कुमार, नन्दी आदि मेरा जुन् छोराहरू छन् ती मेरा मनले कल्पना गरेर उत्पन्न भएका (सङ्कल्पबाट उत्पन्न वा मानस पुत्र) हुन्,
(मेरो गर्भबाट उत्पन्न भएका होइनन्) ।

## रावण उवाच



**नमस्तुभ्यं मया किं हि संसाराकृष्टचेतसा ।**
**विवाहन्न करिष्यामि प्रत्युत स्यां कुमारकः ।।११।।**

(यो सुनेर) रावणले भने- म हजुरलाई नमस्कार गर्दछु । म संसारी जीवबाट यस्तो कुरा (कल्पनाबाट सन्तान जन्माउने) हुन सक्दैन, अब म बिहे नै नगरी कुमार भएर बस्दछु ।

**इति मद्वचनं श्रुत्वा पार्वती वाक्यमब्रवीत् ।**
**निर्विण्णे भव मा पुत्र कुरु राज्यं चिरं स्थिरम् ।।१२।।**
**मयासहकृतेर्ष्येयं विष्णुपत्न्यतिचञ्चला ।**
**त्वया गृहे समाने या स्थाप्या वै बन्धनेऽरि वत् ।।१३।।**
**तयोन्मत्ताः सुराः सर्वे निर्जेतव्या महाबलाः ।**
**मम प्रकृतिदेस्थ रोमभ्यः शतशोऽभवन् ।।१४।।**

**ओषध्यस्तद्बलादेव त्वं विश्वं जय बालक ।**
**इत्युक्त्वा माम कथय पार्वती महिमानकम् ॥१५॥**

मेरा यस्ता कुरा सुनेपछि पार्वतीले भन्न भयो- हे पुत्र ! मनमा उदासी नलेराऊ, तिमी लामो समयसम्म स्थिर रहने राज्य भोगी मसँग इर्ष्या गर्ने अती चञ्चले विष्णुकी पत्नी लक्ष्मीलाई समाती आफ्नो घरमा लेराउनू र शत्रुलाई जसरी बन्दी बनाएर राख्नू । तिनका कारण महाबलशाली देवता अती उन्मत्त भइरहेका छन्, तिनलाई तिमीले जित्नू । मेरा शरीरमा रहेका स्वाभाविक रौँहरुबाट सैयौँ औषधी उत्पन्न भएका छन् । यसैले हे बाबु ! तिमी यी औषधी (र ती लक्ष्मीका) प्रभावले मात्रै यो सारा विश्वलाई जित । यसो भन्दै पार्वतीले फेरी मलाई औषधीका कल्प (प्रयोग विधि) का बारेमा बताउनु भएको थियो ।

**दिव्यौषधीनां प्रकल्पः कथितः प्रीतया तया ।**
**तमहं सम्प्रवक्ष्यामि श्रृणुष्वावहिता प्रिये ॥१६॥**



हे प्रिये ! पार्वतीले मलाई बताउनु भएका जेजस्ता दिव्य औषधीहरूका कल्प (वा महिमा) छन् ती म तिमीलाई बताउँदछु, साबधान भई सुन ।

## औषधीका प्रकार

**औषध्यः पञ्चधाख्याता लतागुल्माश्चशाखिनः ।**
**पादपाः प्रसराश्चेति तेषां वक्ष्यामि लक्षणम् ॥१७॥**

औषधी पाँच प्रकारका हुन्छन्- लहरेदार, बुट्यान (गुल्म), हाँगादार, ठूला रुख र पृथ्वीमा फैलने । अब म यिनका लक्षणका बारेमा भन्दछु ।

## लहरा र वृक्ष

**गुडूच्याद्यालताः प्रोक्ता गुल्माः पर्प्पटकादयः ।**
**आम्राद्याः शाखिनो ज्ञेया वटाश्वत्थादिपादपाः ॥१८॥**

गुर्जो आदिलाई लहरेदार भनिन्छ । न्याउली (पर्पटक) आदिलाई बुट्टयान, आँप आदिलाई हाँगादार र बर, पीपल आदिलाई ठूला वृक्ष भनिन्छ ।

## प्रसर र औषधीका प्रयोग हुने पाँच अङ्ग

**कण्टकार्यादकाः सर्वाः प्रसरा इतिकीर्त्तिताः ।**
**तासां पञ्चैव चाङ्गानि प्रवलानि यथा क्रमम् ॥१९॥**

यसैगरी कण्टकारी (ठूलो बिही) जस्ता सबै खालकालाई पृथ्वीमा फैलने (प्रसर) भनिन्छ । यी सबै औषधिका पाँच अङ्ग हुन्छन् र यी क्रमशः शक्तिशाली हुन्छन् ।

**पत्रं पुष्पं वल्कलञ्च फलं मूलं क्रमेण च ।**
**अनुक्ते बलमेतेषामुष्णमङ्गे ययोचितम् ॥२०॥**



पात, फूल, बोक्रा, फल र जरा-यी औषधीका पाँच अङ्ग हुन् र यी क्रमशः शक्तिशाली हुन्छन् ।

## कुन औषधीको कुन भाग प्रयोग गर्ने

**तालीसादेस्तु पत्राणि सुमनोधातकी मुखात् ।**
**न्यग्रोधादेस्त्वचो ग्राह्याः फलस्यात्त्रिफलादितः ॥२१॥**
**पञ्चाङ्गुलादेर्मूलानि ह्यनुक्तेपरिकल्पयेत् ।**
**खदिरासनकादीनां सारोपि परिगृह्यते ॥२२॥**

औषधीका लागि सुनपाती (तालीसपत्र) आदिको पात ग्रहण गर्नू । धयैंरो आदिको फूल ग्रहण गर्नू । बर आदिको बोक्रा ग्रहण गर्नू । त्रिफला आदिको फल ग्रहण गर्नू र अँडिर आदिको जरा ग्रहण गर्नू । खयर, विजयसाल आदिको सार (रस वा खोटो) ग्रहण गर्नू । यसरी यो भाग प्रयोग गर्ने भनी विधि नलेखिएको अवस्थामा यी सबै औषधीको यसरी नै प्रयोग गर्नु पर्दछ ।

## द्रव्यको परिभाषा

**रसोगुणस्तथावीर्यं विपाकः शक्तिरेव च ।**
**पञ्चानां यः समाहारस्तद् द्रव्यमिति कीर्त्यते ॥२३॥**

जुन कुरामा छ रसमध्ये कुनै न कुनै स्वादको रस हुन्छ, कुनै न कुनै गुण हुन्छ, केही न केही तागत दिन्छ, जो पाक्दछ र जसले केही न केही बल दिन्छ त्यसलाई 'द्रव्य' भनिन्छ ।

## छ रस

**स्वाद्वम्लौलवणस्तिक्तः कटुकश्चकषायकः ।**
**अमी षट्च रसाः ख्याता निर्बलोऽत्र परः परः ॥२४॥**

गुलियो, अमिलो, नुनिलो, तितो, पिरो र टर्रो यी छ रस हुन् र
यी क्रमशः कम बलिया (निर्बल) हुन्छन् ।

## गुलियो रसका गुण

**मधुरः पिच्छिलः शीतो धातुस्तन्यबलप्रदः ।**
**चक्षुष्योवातपित्तादीन् कुर्यात्त्वक्स्थ्यो मलक्रिमीन् ॥२५॥**

गुलियो रसमा चिप्लोपन र शीतलता हुन्छ । यसले धातु बढाउँदछ । आमाको दूध सरह बलदायक हुन्छ । यो आँखाका लागि लाभकारी हुनुका साथै वातविकार र पित्तविकार नाशक हुन्छ । यसलाई छालामा राख्दा मल र कीरा उत्पन्न हुने गर्दछ ।

## अमिलो रसका गुण

**अम्लोष्णान्तर्बहिः शीतो रुच्यः पित्तकफास्रदः ।**
**विबन्धानाहदृष्टिघ्नो दन्ताक्षिभ्रूनिकोचनः ॥२६॥**

अमिलो रसले भित्र गर्मी र बाहिर ठण्डी गर्दछ । यो रुची, पित्त, कफ र रगत वर्धक हुन्छ । यसले मलमूत्रको रोकिने रोग (विबन्ध) र खाएपिएको कुरा जस्ताका तस्तै पेटभित्र बसेर मलमूत्र रोक्ने रोग (आनाह) निको पार्नुका साथै दृष्टिलाई कमजोर समेत बनाउँदछ । यो रस दाँत, आँखा र आँखीभुइँका लागि पनि हानिकारक हुन्छ ।

## नुनिलो रसका गुण

**लवणः शोधनो रुच्यः पाचनः कफपित्तहा ।**
**प्रायो वातहरः कायशैथिल्यमृदुकारकः ॥२७॥**

नुनिलो रसले प्रशोधन (शोधन) को कार्य गर्दछ । यो रुचि जगाउने, पाचक तथा कफविकार र पित्तविकार नाशक हुन्छ । यसले वायुविकार नाश गर्नुका साथै शरीरलाई शिथिल समेत पार्दछ । यो रसले शरीरलाई केही कोमल पनि बनाउँदछ ।

## तितो रसका गुण



**तिक्तः शीतस्तृषामूर्च्छाज्वरपित्तकफाञ्जयेत् ।**
**रुच्यः स्वयमरोचिष्णुः कण्ठस्तन्यास्थिरोधकः ॥२८॥**

तितो रस शीतल हुनाको साथै तिर्खा, बेहोसी, जरो, पित्त र कफ नाशक हुन्छ । यो रुखो हुन्छ र रुची बढाउँदछ तर यो आफैँमा भने अरुचीकर हुन्छ । यसले घाँटी र छातीका हाडलाई (बढ्नबाट) रोक्दछ ।

## पिरो रसका गुण

**कटुरूक्षास्तन्यभेदः श्लेष्मकण्डूविषापहः ।**
**वातपित्तकफाग्नेयः शोषिपाचनरोचकः ॥२९॥**

पिरो रस रुखो हुन्छ । यसले दूध फुटाउँदछ र मल आदि खुकुलो बनाउँदछ । कफ, लुतो र विषको असर यसले नाश गर्दछ । तर यसले वात र पित्त उत्पन्न गर्दछ । यो अग्नि समान

गुणको हुन्छ र सुकाउने काम गर्दछ । यसका साथै यो रसले पाचनशक्ति बढाउने र रुचि जगाउने कार्य पनि गर्दछ ।

## टर्रो रसका गुण

**कषायोरोपणोग्राही स्तम्भनः शोधनोहिमः ।**
**कफशोणितपित्तघ्नो जिह्वा जाड्यकरो लघुः ॥३०॥**

टर्रो रसले घाउ भर्ने गर्दछ र दिसा रोक्दछ । यसले अङ्गको लाटोपन नाश गर्दछ, धातुलाई प्रशोधन गर्नुका साथै शीतवीर्यको हुन्छ । यो रसले कफ, रगत र पित्त सम्बन्धी विकार नाश गर्दछ । यसले जिभ्रोलाई लट्याउँदछ तर पचाउन हलुका हुन्छ ।

## पञ्च महाभूतका गुण

**गुरुस्निग्धस्तीक्ष्णरूक्षैलघुरेतेगुणाः स्मृताः ।**

**पञ्चभूतेषु तिष्ठन्ति आधिक्यादुपलक्षयेत् ॥३१॥**
**गुरुर्वातहरः पुष्टिश्लेष्मप्रकृच्चिरपाचकः ।**
**स्निग्धोवातहरः श्लेष्माकटिमूर्द्धबलापहः ॥३२॥**
**तीक्ष्णम्पित्तकरं प्रोक्तं लेखनं कफवातकृत् ।**
**रुक्षं समीरणकरं परं कफहरं मतम् ॥३३॥**
**लघुपथ्यपरम्भोक्तं कफघ्नं चिरपाकि च ।**
**पृथिव्यादि गुणाधिक्याद् गुणं द्रव्ये प्रकल्पयेत् ॥३४॥**

गह्रौंपना, चिल्लोपना, तिक्खरता, रुखोपना र हलुकोपना यी पाँच गुण हुन् र यी गुण पृथ्वी आदि गरिएका पञ्चमहाभूतमा रहन्छन् । यिनलाई विशेषरूपले चिन्नू । यी पाँचमध्ये गह्रौंपनाले वातदोष ठिक गर्दछ, पुष्टिदायक हुनुका साथै कफ बढाउँदछ तथा अन्न आदिलाई ढिलो गरी पचाउँदछ । चिल्लोपनाले वात नाश गर्नुका साथै कफ बढाउँदछ । यसले बल र वीर्यलाई समेत बढाउँदछ । तिक्खरताले पित्त बढाउने, मल खुलाउने तथा कफ र वात नाश गर्ने कार्य गर्दछ । रुखोपनाले वायु बढाउनुका साथै तिब्ररूपले कफ नाश गर्दछ ।

हलुकापनमा पथ्य, कफनाशक र चाँडो पचाउने गुण हुन्छ । यसरी पृथ्वी आदि पञ्चमहाभूतको मात्राको आधारमा द्रव्यमा पनि यस्तै गुणको कल्पना गर्नू ।

## वीर्य (तेज)

**उष्णं शीतंद्विधावीर्यतत्कालाद्युपलक्षयेत् ।**
**स्थलादयितयोर्योगादयोगान्मध्यमन्तु तत् ।।३५।।**

गर्मी गर्ने र ठण्डी गर्ने गरी दुई किसिमका वीर्य हुन्छन् । यी दुईको समय र शक्ति विचार गर्नू । स्थान अनुसार पनि यिनको योग बलियो हुने गर्दछ । योग नहुँदा बराबर वा कम बलियो हुने गर्दछ ।

## स्थान अनुसारका औषधीका गुण

**सर्वजाङ्गलसम्भूतं प्रायोभवतिपित्तहृत् ।**
**आनूपसम्भवं सर्वं प्रायः कफकरं स्मृतम् ।।३६।।**
**तत्कालोष्णं दक्षिणजं परिणामे तु शीतलम् ।**
**धनदाशा समुद्भूतं विपरीत तयास्मृतम् ।।३७।।**
**अन्तर्बेदि भवं सर्व यथोक्त गुणमादिशेत् ।**
**विपाकस्तु त्रिधा प्रोक्तः स्वाद्वम्लकटुकात्मकः ।।३८।।**

जङ्गलमा हुने प्रायः सबै औषधीले पित्तदोष नाश गर्दछन् भने सिमसार क्षेत्रमा हुने प्रायः सबै औषधीले कफ बढाउने गर्दछन् । दक्षिण देशमा उत्पन्न हुने औषधी आलो छँदा गर्मी गर्ने र पछि ठण्डी गर्ने गुणका हुन्छन् भने उत्तर देशका औषधीमा यसको ठीक उल्टो गुण हुन्छ । मध्य देशमा उब्जने औषधीमा जे बताइएको छ त्यही गुण हुन्छ । यसको पचेपछिको रसको स्वाद गुलियो, अमिलो र पिरो गरी तीन किसिमको हुन्छ ।

# रस र पचेपछिको रस

क्रमाद्धीनबलोज्ञेयो मधुरोमधुरः कटुः ।
पचत्यम्लोम्लमितरे रसाः कटुकपाकिनः ॥३९॥
श्लेष्मकृन्मधुरः पाके वातपित्तहरा मतः ।
अम्लस्तु कुरुते पित्तं वातश्लेष्मगदापहः ॥४०॥
कटुः करोति पवनं कफपित्तञ्च नाशयेत् ।
विशेष एव रसतो विपाकानां प्रदर्शितः ॥४१॥

गुलियो, अमिलो र पिरो यी रस क्रमशः कम फलदायक हुन्छन् । गुलियो रस पचेपछि पिरो हुन्छ, अमिलो रस पचेपछि अमिलो नै हुन्छ भने बाँकी चार रस पनि पचेपछि पिरो हुने गर्दछन् । गुलियो रस पचेपछि यसले कफ उत्पन्न गराउँदछ र वात एवं पित्तलाई नाश गर्दछ । अमिलो रस पचेपछि यसले पित्त उत्पन्न गराउँदछ र वात एवं कफलाई नाश गर्दछ । पिरो रस पचेपछि यसले वात उत्पन्न गर्दछ र कफ एवं पित्तलाई नाश गर्दछ । यसरी रस पचेर बन्ने रसका बारेमा विशेष तरिकाले बताइयो ।

## प्रभावको परिभाषा र व्याख्या

रसादि साम्ये यत्कर्माविशिष्टन्तु प्रभावजम् ।
दन्ती रसेन तुल्याऽपि चित्रकस्य विरेचति ॥४२॥
मधुना चाथ मृद्वीका घृतं क्षीरेण दीपनम् ।
प्रभावस्तु यथा धात्री लकुचस्य रसादिभिः ॥४३॥
समापि कुरुते दोष त्रितयस्य विनाशनम् ।
क्वचित्तु केवलं द्रव्य कर्म कुर्यात्स्वभावतः ॥४४॥
ज्वरन्हरन्ति शिरोबद्धा सहदेवी जटा यथा ।
धृतानि वारियेल्लोहं पुष्यार्के कोलमूलिका ॥४५॥

रस आदि समान हुँदा द्रव्यले गर्ने विशेष कार्यलाई “प्रभाव” भनिन्छ । जस्तै अजयपाल

(दन्ती) वृक्ष र चितु वा चिराइतो (?, चित्रक) को रस मिसाएपछि यो दिसा लगाउने (विरेचक) औषधी बन्न पुग्दछ । महसँग दाख र दूधसँग घिउ मिसाउँदा त्यो पाचकाग्नि बाल्ने (दीपन) गुणको हुन पुग्दछ । अमला र कटहरको रस समान गुणका हुन्छन् तर पनि अमलाले त्रिदोष नाश गर्दछ, यो अमलाको प्राकृतिक गुण हो । एकै खाले औषधी पनि स्वभाव अनुसार कार्य गर्ने गुणका हुन्छन् । सहदेवी (महाबला, सुनटिकी, दँयालो, कालो भृङ्गराज, सर्पको काफल र प्रियङ्गु मध्ये ?) को जरा टाउकामा बाँध्नाले जसरी जरो निको हुन्छ त्यसरी नै पुष्य नक्षत्रमा कोलमूलिका (बयर, चाभो ?) को जरा धारण गर्नाले  शस्त्र बाधा हट्दछ ।

## द्रव्यको प्रयोग विधि र गुण

**द्रव्यकल्पः पञ्चधा स्यात् कल्क चूर्ण रसन्तथा ।**
**तैलमर्कं क्रमाज्ज्ञेयं यथोत्तर गुणम्प्रिये ॥४६॥**
**पृथक्द्वन्दे सन्निपाते सङ्करेऽसाध्य रोगिणि ।**
**क्रमादेते प्रयोक्तव्याः कालमग्निं निरीक्ष्य च ॥४७॥**
**आद्ये गुणे गुणाः सर्वे द्वितीये ह्यल्पतः स्मृताः ।**
**तृतीये शीघ्रकारित्वं चतुर्थो न हि दोषकृत् ॥४८॥**

हे मन्दोदरी ! द्रव्यको कल्प (प्रयोग विधि) पाँच किसिमको हुन्छ-बोक्रो, धुलो, रस, तेल र अर्क । यी क्रमशः गुनिला हुन्छन् । अलग अलग दोषमा, दुई दोष मिलेको अवस्थामा, सन्निपातमा, तीन दोष मिलेर लाग्ने रोगमा र असाध्य रोगमा यी द्रव्य क्रमशः दिइने गरिन्छ । तर, यी द्रव्य दिँदा समय र रोगीको पाचनशक्ति हेरेर मात्र दिनु पर्दछ । यिनमा पहिलो अर्थात् बोक्रामा सबै गुण हुन्छ, दोश्रो अर्थात् धुलोमा बोक्राको तुलनामा केही कम गुण हुन्छ, तेश्रो अर्थात् रसले चाँडै असर देखाउँदछ भने चौथो अर्थात् तेलले कुनै दोष गर्दैन ।

## अर्कका गुण

**पञ्चमं दोषरहितं गुणसङ्घ प्रकाशकम् ।**
**पञ्चमस्य तु मामर्थ्य स्वयं पञ्चाननोऽब्रवीत् ॥४९॥**

**वर्षाणान्तु सहस्रेण कथितोऽहर्निशं मया ।**
**सम्पूर्णतान्न जायेत कल्पोऽर्कस्य दशानन ॥५०॥**

पाँचौं अर्थात् अर्क दोषरहीत हुनाको साथै गुणका समूहलाई प्रकाशित गर्ने खालको हुन्छ । यसको प्रभावका बारेमा स्वयं भगवान् शिवले मलाई भन्नु भएको थियो कि “हे रावण ! हजारौं वर्षसम्म रातोदिन यो अर्क-कल्प (अर्क बनाउने वा पिउने विधि)का बारेमा वर्णन गर्दा पनि सकिएन”।

## पुरुष र स्त्रीले अर्क पिउने समय

**पुम्वारेपुरुषर्क्षे च दिवार्को यस्तु निर्मितः ।**
**रमणीषु प्रदातव्यो विलोमात्पुंसि योजयेत् ॥५१॥**

पुरुष बार, पुरुष नक्षत्र र दिनमा बनाइएको अर्क स्त्रीलाई पिउन दिनू तथा यसको विपरित समयमा बनाइएको अर्क पुरुषलाई पिउन दिनू ।



## अर्क निकाल्न प्रयोग हुने माटोका भाँडाका लागि माटो बनाउने विधि

**लोहचूर्णषष्टिकं गैरिकञ्च भ्रष्टमृत्तिका ।**
**मृत्तिकास्थि भवं चूर्ण काचकङ्कसजं रजः ॥५२॥**
**एतानि समभागानि सर्वतुल्या च मृत्तिका ।**
**भ्रंशनीया पञ्चमूत्रैर्गवाश्वमहिषोद्भवैः ॥५३॥**
**गजाजसम्भवाभ्याञ्च सहितं तद्विशोषयेत् ।**
**यावद्गन्ध विनाशः स्यात्तावत्सम्मर्दयेच्चताः ॥५४॥**

फलामको धुलो, फिटकिरी (कसैकसैले सठिया धानको चामल भनी अर्थ लगाएका छन्), गेरु (घर, कोठा र प्रायः जोगीका लुगा आदि रङ्गाउन प्रयोग गरिने फुस्रो रातो रङको खनिज वा रछाहा पहेँल्चो माटो), अगेनु वा भट्टीको माटो, साधारण माटो, हाडको धुलो,

काँच वा सिसाको धुलो, कसज (कसीस : फलामको विकार मानिने एक उपधातु) को धुलो : यी सबै बराबर मात्रा लिई त्यसमा यति नै माटो मिलाउनू र फेरी यसमा पाँच थरी जनावर गाई, घोडा, भैंसी, हात्ती र बाख्राको मूत्र मिसाउनू । त्यसपछि यसलाई घाममा सुकाउनू । जबसम्म गन्ध हराउँदैन तबसम्म मुछिरहनू ।

## अर्क निकाल्न प्रयोग गरिने भाँडा र अर्क यन्त्र बनाउने विधि

लघुहस्तैः कुलालैस्तु कुर्याद्यन्त्रं सुनिर्मलम् ।
यथेष्टां स्थालिकां कुर्यात्यङ्गुलं प्रान्तसारिकाम् ॥५५॥
पृथुब्रध्नोदराकारां द्व्यङ्गुलासन्धिवेष्टितम् ।
सारिकान्ते तु परिधि त्र्यङ्गुलोत्सेधशोभिताम् ॥५६॥
विनिर्मायाथ सार्य्यन्ते यथा शिल्पविनिर्मितम् ।
छिद्रं कृत्वा नलं दद्याद्गजशुण्डासमं सुधीः ॥५७॥
सारिकापरिधेरन्तस्तस्य कुर्यात्पिधानकम् ।

अर्द्धनिम्बुफलसमं परिधिस्तस्य चान्ततः ॥५८॥
वेदाङ्गुलं मस्तकोर्ध्वं कार्य्यतो यस्य धारणे ।
समर्थां तस्य नलकां कुर्य्यात्तोय बिमोचनम् ॥५९॥
तस्यैवान्तरतो लेप्या घनाजीर्णास्थिमृत्तिका ।
अथवा श्वेतकाचञ्च सर्वदोषापनुत्तये ॥६०॥

यसपछि हलुका हात हुने कुम्हाले मार्फत निर्मल (अर्क) यन्त्र बनाउन लगाउनू ।औषधीको मात्रा अनुसार जति अर्क निकाल्नु पर्ने हो त्यति नै चौडा र करिब तीन अमल अग्लो मुख (किनारा) भएको थाल बनाउनू । गोलो सूर्यमण्डल जस्तो आकारको त्यो यन्त्रको पेट होस्, यसको मुखमा बिर्कोले छोप्न मिल्ने किसिमले पातलो दुई अमलको बिट होस्, त्यसपछि किनारा तीन अमल तल दबेको बिर्को बनाउनू । यस्तो बिर्कोको परिधि (घेरा) यन्त्रको मुखको परिधिभन्दा कम हुनुपर्दछ जसले गर्दा त्यो बिर्को यन्त्रको मुखको भित्र छिरेर राम्ररी टम्म मिलेर अड्कियोस् । यसपछि यो जोर्नीमा दुई अमल बाक्लो माटो दलेर राम्ररी बन्द गर्नू । यसरी विधिपूर्वक भाँडा बनाएपछि, त्यो बिर्कोको बीच भागमा प्वाल

पारी हात्तीको सुँड जती लामो पाइप (नल) हाल्नू । (यस्तो पाइप बाँस वा तामाको प्रयोग गर्न सकिन्छ) । माख्लो बिर्कोको आकार आधा निबुवाको आकार जत्रो हुनु पर्दछ । यसको छेउ (वा मुख) तलतिर फर्केको हुनुपर्दछ । यसमा बनाइएको प्वालमा जडान गरिने पाइप तीन अमल भित्र धसिएको हुनु पर्दछ । यसपछि त्यो यन्त्रको चार अमल अग्लो टाउको जसमा पानी हालिन्छ, त्यसमा पानी हालेर भर्नू । अनि दुवै भाँडामा लेप दलेर राम्ररी जोर्नी टाल्नू । माथिल्लो बिर्कोको बीचमा बनाइएको एउटा प्वालमा तीन अमल भित्र घुसाएर जडिएको पाइप मार्फत पानी राम्ररी बाहिर निस्किन सकोस् । जोर्नीको भित्री भागमा गलेका हाड र माटोको बाक्लो लेप दल्नू अथवा सबै खाले दोष हटाउनका लागि सेतो सिसाले बेर्नू ।

## जीर्णास्थि मृत्तिका र त्यसका भाँडा बनाउने विधि

**अथ वक्ष्ये तु जीर्णास्थि मृत्तिका करणं प्रिये ।**
**शिलाजतुस्थले कुर्य्याद्दीर्घगर्त्तमनोहरम् ॥६१॥**
**निक्षिपेत्तत्र नानास्थि सञ्चयं द्विचतुष्पदाम् ।**
**स्वर्जिक्षारं महाक्षारं मृत्क्षारं लवणानि च ॥६२॥**
**गन्धकोष्णजलं क्षेप्प्यं नानामूत्राणि तत्र च ।**
**एवं कृत्वा मास षट्कं दद्यात्पाषाणमृत्तिकाम् ॥६३॥**
**पङ्कास्थ्यूर्ध्वतदूर्ध्वतु कुर्य्याद्वह्निष्टिकाः शुभाः ।**
**त्रिवर्षाज्जायते सर्वमेकीभूतंद्रवन्मयम् ॥६४॥**

हे प्रिये ! अब म जीर्णास्थि मृत्तिका बनाउने विधि बताउँदछु । जहाँबाट शिलाजित निस्कन्छ त्यहाँ (अर्थात् पर्वतमा) एउटा गहिरो खाडल खन्नू । त्यसमा दुई खुट्टे र चार खुट्टे जीवका हाड हाल्नू । त्यसमाथि स्वर्जिक्षार (सोडा), महाक्षार र मृत्तिकाक्षार तथा पाँच प्रकारका नुन अनि गन्धक, तातो पानी र अनेक जीवका मूत्र हाल्नू । यसरी भरिएको खाल्डोमा छ महिना पछि ढुङ्गाको धुलो हाल्नू । यसपछि त्यो लेदोमाथि आगो बाली त्यसमाथि ईँटाले चिनि दिनू । यसो गर्दा खाल्डो भित्र हालिएका सबै कुरा तीन वर्षमा पातलो (मिहीन र धूलो) माटो बन्न जान्छ ।

## जीर्णास्थि मृत्तिकाका भाँडाको फाइदा

ततो निष्पिष्य चच्चूर्णं कृत्वा पात्राणि निर्मयेत् ।
प्रशस्तं भोजनन्तत्र सूचयेद्दूषणं द्रुतम् ॥६५॥
महाविषस्य संयोगात्तस्य भङ्गः प्रजायते ।
सूची विषादि संयोगात्तस्यस्फोटा भवन्ति हि ॥६६॥
तत्राक्षिप्तं क्षुद्र विषं पात्रं कृष्णं करोति च ।
एवं ज्ञात्वा तत्र दद्यान्नकदाचिद्विषादिकम् ॥६७॥

यसपछि त्यो धुलोलाई खाल्डोबाट बाहिर निकाली पिँध्नू र त्यसले भाँडाकुँडा बनाउनू । यस्तो भाँडामा खाना खानु उत्तम हुन्छ, खानामा कुनै विष-विकार भए तुरुन्त थाहा हुन्छ । भोजनमा महाविष हालिएको रहेछ भने त्यो भाँडो तुरुन्त फुट्दछ । विषाक्त पदार्थ हालिएको छ भने त्यो भाँडामा फोका निस्कन्छन् । सामान्य खालको विष मिसाइएको छ भने त्यो भाँडो कालो हुन्छ । यस्तो जानी त्यो भाँडामा कहिल्यै विष पर्न नदिनू ।



## अर्क निकाल्ने भाँडा

विषादीनामर्क सिद्धौ कुर्यात्पात्रन्तु लोहजम् ।
स्वर्णजं रौप्यकं वापि कुर्यात्पात्रमकल्मषम् ॥६८॥
अथवा ताम्रजं वापि ह्यन्तर्वंगविलेपनम् ।
पात्रन्तु बुद्ध्या कुर्वीत कषायो न भवेद्रसः ॥६९॥

विषादिको अर्क निकाल्नु छ भने फलामको भाँडा प्रयोग गर्नू । अथवा सुन वा चाँदीको बनाउनू । तर यो दोषरहित हुनु पर्दछ । नभए तामाको भाँडामा बनाउनू । बुद्धि लगाएर बनाउनू ता कि अर्क टर्रो वा तमतमाइलो नहोस् ।

## अर्क के के को निस्कन्छ ?

द्रव्यान्तरस्य संयोगादर्कतैलञ्च गुर्विण ।
सर्वेषां निःसरत्येवं पाषाणस्य तु किं पुनः ॥७०॥

अरु कुरा मिसाएपछि गह्रौं भन्दा पनि गह्रौं पत्थरको समेत अर्क निस्कन्छ भने अरु पदार्थको तेल (अर्क) निस्कनुमा के आश्चर्य भो र ! ।

## आगो बिनाको अर्क

**अनग्न्यर्कस्तथातैलं गन्धतैलादि सम्भवम् ।**
**वेधकं सर्वधातूनां देहस्यापि च पुष्टिदम् ॥७१॥**

आगो (ताप)को प्रयोग नगरी निकालिने अर्क वा तेल मानिसका लागि खासै लाभदायक हुँदैन । किन कि आगो बिनाको अर्क र गन्धकको तेलले धातुलाई भेदन गर्दछ तर शरीरलाई पुष्ट भने गर्दछ ।

## अर्क विज्ञ

**यस्तैलकरणे दक्षश्चार्क निस्सारणे पटुः ।**
**तस्य सेवा भवेन्नित्यं रोगैश्च न स बाध्यते ॥७२॥**

जो तेल निकाल्न र अर्क बनाउन निपुण छ उ सधैं सेवित हुन्छ, कहिल्यै रोगी हुँदैन ।

## अर्क निकाल्न लाग्ने समय

**कुत्सितार्करतयामेस्याद् द्वियामाभ्यान्तु मध्यमः ।**
**त्रिभिर्यामैर्भवेच्छ्रेष्ठ अर्कोमित गुणप्रदः ॥७३॥**

एक प्रहर (समय लगाएर) मा निस्कने अर्क निकृष्ट हुन्छ । दुई प्रहरमा निस्कने अर्क मध्यम तथा तीन प्रहरमा निस्कने अर्क उत्तम र असंख्य गुणकारी हुन्छ ।

## उत्तम अर्क

**द्रव्यादिधिक सौगन्ध्यं यस्मिन्नर्के प्रदृश्यते ।**
**जीर्णास्थिपात्रसङ्क्षिप्तो द्रव्यवर्णः प्रदृश्यते ॥७४॥**
**शङ्खकुन्देन्दुधवलोन्यथापात्रान्तरस्थितः ।**
**जिह्वोपरिगतः स्वादुं दद्याद्द्रव्य भवन्तु यः ॥७५॥**
**तमेवार्कं विजानीयादन्यस्तु स्याद्दरादिवत् ।**

जुन अर्कद्रव्यबाट धेरै बास्ना आउँदछ; जुन अर्कद्रव्यको रङ्ग जिर्णास्थिले बनाइएको भाँडामा हाल्दा पनि जस्ताको तस्तै रहन्छ; जुन अर्कद्रव्य शङ्ख, कुन्दपुष्प वा चन्द्रमा जस्तै सेतो हुन्छ र जुन् अर्कद्रव्य अरु भाँडामा हालेर खाँदा पनि जेबाट त्यो अर्क बनाइएको त्यही कुराको स्वाद जिभ्रोलाई दिने खालको हुन्छ, त्यो अर्कद्रव्य उत्तम हुन्छ । बाँकी सबै खाले अर्क (सामान्य) रसादि सरह हुन् ।



## दुर्गन्धी अर्क

**कृत्वा सुगन्धिमेतस्य ह्यर्कपुष्पादिभिः सुधीः ॥७६॥**
**गुणाय पश्चात्सेवेत त्वन्यथापगुणो भवेत् ।**
**दुर्गन्धं भक्षयेदर्कं यदि मोहात्कचञ्चन ॥७७॥**
**तदास्य जायते ग्लानिर्वान्तामालस्यकन्तथा ।**

जुन अर्कबाट दुर्गन्ध आउँदछ त्यसमा आँक आदिको फूल हाली सुगन्धित बनाई अनि मात्र फाइदा लिनका लागि पिउने गर्नू, नत्र यसले बेफाइदा गर्दछ । दुर्गन्धी अर्क भुक्किएर वा मोहमा परी कसैले पिए उसलाई ग्लानि, बान्ता र आलस्यता हुन्छ ।

## दूषित अर्कको असर हटाउने अर्क

**तद्दोषस्य विनाशाय कुर्याद्वान्तिमतन्द्रितः ॥७८॥**
**दीपोद्भव प्रसूनानाम्पिवेदथ पलं जलम् ।**
**चामेल्यार्क फलं वापि ससितं मालती भवम् ॥७९॥**

दूषित अर्क पिएर हुने असर ठिक गर्न पिइएको अर्क साबधानीपूर्वक बान्ता गराउनु पर्दछ । यसका लागि उसलाई चम्पा फूलको अर्क एक पल वा चमेलीको फूल अथवा मालतीको अर्कमा चिनी मिसाएर पियाउनु पर्दछ ।

## अर्क निकाल्न बालिने आगो

**अर्कनिष्कासनार्थाय क्रमाद्देयाषडग्नयः ।**
**धूमाग्निश्चैवमन्दाग्निर्दीपाग्निर्मध्यमस्तथा ॥८०॥**
**खराग्निश्च भटाग्निश्च तेषां वक्ष्यामि लक्षणम् ।**
**विज्वालो यो धूमशिखो धूमाग्निः स उदाहृतः ॥८१॥**
**द्वाभ्यां तस्य चतुर्थाभ्यां योग्निर्दीपाग्निरुच्यते ।**
**चतुरंशेन तेनैव मन्दाग्निः स प्रकीर्त्तितः ॥८२॥**
**अर्द्धीकृताभ्यां द्वाभ्यान्तु मध्यमाग्निरुदाहृतः ।**
**अर्द्धैस्तैः पञ्चभिः प्रोक्तः खराग्निः सर्वकर्म्मसु ॥८३॥**

**मस्तकावधिपात्रस्य चतुर्दिक्षु क्रमेण च ।**
**प्रसरन्ति यदा ज्वालाः स भटाग्निरुदीरितः ॥८४॥**

अर्क निकाल्नका लागि क्रमैले छ प्रकारले आगो बाल्नु पर्दछ । तिनको नाम धूमाग्नि, मन्दाग्नि, दीपाग्नि, मध्याग्नि, खराग्नि र भटाग्नि हुन् । अब म यि अग्निका लक्षण बताउँदछु । आगो बाल्दा ज्वाला ननिस्की माथिमाथिसम्म धुवाँ मात्र जाने गर्दछ भने त्यसलाई 'धूमाग्नि' भनिन्छ । उपरोक्त धूमाग्निलाई दोब्बर वा चौबर गर्दा निस्कने बत्ती (दियो) को जस्तो ज्वाला निस्कने अग्निलाई 'दीपाग्नि' भनिन्छ । दीपाग्निको चौगुना ज्वाला निस्कने अग्निलाई 'मन्दाग्नि' भनिन्छ । दीपाग्नि र मन्दाग्नि मिलाउँदा जति हुन्छ त्यसको आधा ज्वाला निस्कने अग्निलाई 'मध्यमाग्नि' भनिन्छ । मध्यमाग्निभन्दा पाँच गुना बढी ज्वाला निस्कने अग्निलाई सबै कार्यमा 'खराग्नि' भनिन्छ । अगेनामा बसालिएको भाँडाको चारैतिरबाट मुखमुखसम्म ज्वाला पुग्ने गरी दन्कने अग्निलाई 'भटाग्नि' भनिन्छ ।

## अर्क बनाउन आगो बाल्ने समय

**द्वियामं सार्द्धयामञ्च यामैकं द्विमुहूर्त्तकम् ।**
**मुहूर्तमात्रमित्येवमर्कार्थे वह्नयः स्मृताः ॥८५॥**

दुई याम (करिब छ घण्टा), आधा याम (करिब डेढ घण्टा), एक याम (करिब तीन घण्टा), दुई मुहूर्त (एक घण्टा छत्तीस मिनेट) र एक मुहूर्त (अठचालीस मिनेट) अर्क बनाउन आगो बाल्ने समय हुन्छ ।

## अर्क निकाल्न बालिने दाउरा

**ससारमति शुष्कं यं मुष्टिमध्ये समेष्यति ।**
**तत्काष्ठं ग्राह्य मित्याहुः खदिरादि समुद्भवम् ॥८६॥**



खँदिलो, सुकेको र मुठीमा अटाउने खालका खयर आदिका दाउरा अर्क बनाउन बाल्नु पर्दछ ।

## अर्क बनाउने भाँडा

**जीर्णास्थिपात्रे गृह्णीयादर्क वा काचसम्भवे ।**
**पाषाणस्थे वा पात्रेह्य भावे मृन्मये न्यसेत् ॥८७॥**

जीर्णास्थि (पूर्व वर्णित) ले बनेको भाँडामा अथवा सिसाको भाँडामा अथवा ढुङ्गाका भाँडामा अर्क बनाउनू । यिमध्ये कुनै पनि भाँडा उपलब्ध नभए साधारण माटाको भाँडा प्रयोग गर्नू ।

## अर्कपान विधि

**पिबेदर्कमनिर्वापं पीत्वा ताम्बूलभक्षणम् ।**
**कुर्य्यादभुक्त ताम्बूले लवङ्गं भक्षयुत्तु च ॥८८॥**

बीचमा नरोकिई प्रेमपूर्वक अर्क पिउनू र त्यसपछि पान चपाउनू । पान खान निषेध गरिएको अवस्थामा ल्वाङ्ग चपाउनू ।

## अर्क पिउने अधिकार

**ये ये द्रव्यगुणाः प्रोक्ताः सर्वे तेऽर्क समाश्रितः ।**
**सवेतार्कं श्रिये तस्माद्राजा परमधार्मिकः ॥८९॥**

जे द्रव्यको अर्क बनाइन्छ त्यो द्रव्यको गुण त्यसबाट बनाइने अर्कमा हुन्छ । यसैले अतिधार्मिक राजा तथा अरुहरूले पनि आफ्नो कल्याणका लागि अर्क पिउने गर्नू ।



## अर्कको प्रयोग

**मर्दनादिषु सर्वत्र द्रव्यं तैलं प्रयोजयेत् ।**
**अर्क एव प्रयोक्तव्यो भक्षणे न तु मर्दने ॥९०॥**

सबै खाले मालिसमा द्रव्यबाट निकालिएको तेलको प्रयोग गर्नू । तर अकलाई पिउन मात्र प्रयोग गर्नू शरीरमा दल्न प्रयोग नगर्नू ।

## अर्कपानका नियम

**स्वस्थेन रोगिणा वापि याचिनोर्कश्च येन वा ।**
**ज्ञात्वा तल्लक्षणं दद्यादन्यथा ब्रह्महा भवेत् ॥९१॥**

यदि कुनै स्वस्थ वा रोगी व्यक्तिले अर्क पिउने चाहना गर्दछ भने वैद्यले पहिले देश, काल र रोगीको पाचनशक्ति विचार गरेर मात्र उसलाई अर्क पिउन दिनू नत्र त्यो वैद्यलाई ब्रह्महत्याको पाप लाग्दछ (अर्थात् पिउनेलाई हानी गर्दछ) ।

## रोगीको दूतको परीक्षा विधि

**वर्णस्वराणां प्रमितिन्दूतोक्तानां हि कारयेत् ।**
**एकयुक्तां द्विगुणितो त्रिभिर्भागं समाहरेत् ॥९२॥**
**एकशेषे गुणश्शीघ्रं द्विशेषे वर्द्धते गदः ।**
**त्रिशेषे मरणं वाच्यं स्वार्थं याचयतेथवा ॥९३॥**
**अर्क तदेतद्विज्ञाय दद्याद्योग्यन्न चान्यथा ।**
**गदिना तु यदा दूतः प्रेषितस्तद्विचारयेत् ॥९४॥**

वैद्यले रोगीको दूत आएर जे भन्दछ, ती अक्षरलाई स्वर सहित गणना गर्नू । जति हुन्छ त्यसमा एक जोडेर दुईले गुन्नु अनि तीनले भाग गर्नू । शेष एक बाँकी रहे रोगीलाई दिइने औषधी वा गरिने उपचार प्रभावकारी हुन्छ । शेष दुई बचे रोग बढ्दछ वा ढिलो निको हुन्छ । तीन शेष रहे (असम्भव) रोगीको मृत्यु हुन्छ । यी कुरा विचार गरेर मात्र रोगी वा पिउन चाहनेलाई अर्क दिनू नत्र हानी हुन्छ । रोगीले पठाएको दूतले जे भन्दछ त्यसमाथि तल उल्लेखित कुरा थप विचार गर्नू ।



**नपुंसकान्त्यैरूनास्तु स्वरा एकादश प्रिये ।**
**वर्णास्तत्सङ्ख्यकाले ख्याकचटाद्यास्तु तत्स्थले ॥९५॥**
**एकादश सुकोष्ठेषु क्रमादङ्कांश्च विन्यसेत् ।**
**रसास्त्रयो द्वयं भेदाः पर्वता मृतवः कृताः ॥९६॥**
**वह्नयः पेथिवी शून्यं चन्द्रमाश्च ह्यतिक्रमात् ।**
**विहाय जीवदूतस्य नामाक्षर सुयोजनम् ॥९७॥**
**एकमेवातुरे युक्त्वाद्वयोरष्टावशेषितम् ।**
**कृत्वाङ्कयोगं गदिनोधिकशेषे शुभं भवेत् ॥९८॥**

**समशेषे दीर्घरोगो न्यूनशेषे तदामृति ।
एतद्विचार्य दातव्य मन्यदप्योषधं बुधैः ॥९९॥**

हे प्रिया ! नपुंसक अक्षर बुझाउने जुन स्वर वर्ण हुन्छन् तिनमा अन्तिमलाई छाडी केवल एघार वटा स्वर हुन्छन् । यी क, च, ट, त, प, य, श, क्ष, त्र, ज्ञ र अनुस्वार (ँ) यी एघार वर्णलाई लेख्नू । त्यसको तल वर्गका दुई अक्षर पूरा लेख्नू । यिनलाई क्रमशः एक एक कोठामा लेख्नू । त्यसपछि ६।३।२।४।५।६।३।१।०।१। यी अङ्कलाई लेखी अन्तमा दूतले जे जे अक्षर बोल्दछ त्यसलाई छाडी दूतको नामका अक्षर स्वर सहित जोड्नू । त्यसमा रोगको नामका अक्षर संख्या जोड्नू । फेरी यी दुबैमा एक जोड्नू र आठले भाग गर्नू । कति शेष रहन्छ त्यसलाई विचार गर्नू । धेरै शेष रहे शुभ हुन्छ भनी जान्नू । दुबैतिरको अङ्क बराबर भए रोगले च्यापेको छ भनी जान्नू । रोगतिरको अङ्क कम भए रोगी मर्दछ भनी जान्नू । यो चक्रलाई वा अन्य ग्रन्थमा भएका चक्रलाई हेरी वैद्यले दूतलाई औषधी दिनू । (मैले यसलाई बुझिने गरी व्याख्या गर्न जानिन वा बुझिन) ।

**चक्रद्वयं तु योऽज्ञात्वादद्यादर्कविमोहितः ।
जायते तर्ह्यपयशास्तत्र चापि मृतेसति ॥१००॥**



यसरी दुई चक्र बिचार नगरी जुन मूर्ख वैद्य विरामीलाई औषधी दिन्छ उसले यो लोक र परलोक दुवैतिर अबजस पाउँदछ ।

आतुरोद्धार चक्रम्

| १ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ | ९ | १० | ११ | शिर्षक |
|---|---|---|---|---|---|---|---|---|---|---|---|
| अ | इ | उ | ऋ | ॡ | ए | ऐ | ओ | औ | अं | अः | स्वर |
| क | च | ट | त | प | य | श | क्ष | त्र | ज्ञ | ँ | वर्ण |
| ख | छ | ठ | थ | फ | र | ष | ० | ० | ० | ० | ,, |
| ग | ज | ड | द | ब | ल | स | ० | ० | ० | ० | ,, |
| घ | झ | ढ | ध | भ | व | ह | ० | ० | ० | ० | ,, |
| ङ | ञ | ण | न | म | ० | ० | ० | ० | ० | ० | ,, |
| ६ | ३ | २ | ४ | ८ | ६ | ४ | ३ | १ | ० | १ | अङ्क |

**इति रावण कृते अर्कप्रकाशे प्रथमः शतकः**

**रावण लिखित अर्कप्रकाश अन्तर्गत पहिलो शतकको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो**

# ॥ अथ द्वितीयं शतकम् ॥
# अर्क निकाल्ने विधि

**अथातः सम्प्रवक्ष्यामि ह्यर्कनः सारणं प्रिये ।**
**पञ्चप्रकारद्रव्यस्य कुर्यान्निष्कासनं बुधः ॥१॥**

हे प्रिया ! अब म अर्क निकाल्ने विधिका बारेमा बताउँदछु । बुद्धिमानले पाँच प्रकारका द्रव्यबाट अर्क निकाल्नु उचित हुन्छ ।

## द्रव्यका किसिम

**अत्यन्तकठिनश्चाद्यं कठिनश्च द्वितीयकम् ।**
**आर्द्रं तृतीयक्लिन्नन्तु चतुर्थमिति निर्दिशेत् ॥२॥**
**पञ्चमन्तु द्रव द्रव्यं तेषां विधिरथोच्यते ।**



द्रव्यहरू अति साह्रो, साह्रो, गिलो, भिजेको र तरल गरी पाँच प्रकारका हुन्छन् । अब यी पाँच प्रकारका द्रव्यको अर्क निकाल्ने विधिका बारेमा बताउँदछु ।

## अति साह्रो द्रव्यको अर्क निकाल्ने विधि

**बुसवच्चूर्णयेद् द्रव्यमत्यन्तकठिनन्तु वै ॥३॥**
**द्विगुणं निक्षिपेत्तोये छायायां स्थापयेत्तु तत् ।**
**यावच्छुष्कं भवेत्तोयं द्रव्यंस्याच्छिथिलन्तथा ॥४॥**
**ततः पुनः क्षिपेत्तोयोम्पूर्वद्रव्यं समं भिषक् ।**
**कृत्वाष्टप्रहरैस्तप्तं सूर्यचन्द्रकरैरलम् ॥५॥**
**सम्पूज्य गणपं सूर्यं भैरवं कुलदेवताम् ।**
**निक्षिपेदर्कयन्त्रे तच्छित्त्वास्यार्क समाहरेत् ॥६॥**

अति साह्रो द्रव्यलाई कुटेर मसिनो धुलो बनाउनू । जति हुन्छ त्यसमा दुई गुना पानी मिसाउनू । जबसम्म पानी सुक्दैन तबसम्म यसलाई ओभ्रेलमा राख्नू । जब पानी सुक्दछ र गाढा देखिन्छ तब पहिले धुलो हुँदा यो जति थियो त्यसमा त्यति नै पानी फेरी हाल्नू । त्यसपछि यसलाई आठ प्रहरसम्म दिनमा घाममा र रातमा जुनको उज्यालोमा वा बाहिर राख्नू । त्यसपछि गणेश, सूर्य, भैरव र कुलदेवतालाई पूजा गरी त्यसलाई पुनः कुटेर अर्क निकाल्ने यन्त्रमा हाली अर्क निकाल्नू ।

## अति साह्रा द्रव्य

**वर्षाधिकन्तु यद्द्रव्यमत्यन्तकठिनं च यत् ।**
**चन्दनादीनि सर्वाणि ह्यत्यन्तकठिनानि हि ॥७॥**

एक वर्षभन्दा पुराना र चन्दन आदि द्रव्य अति साह्रा द्रव्य हुन् ।



## अर्क निकाल्ने द्रव्य छान्दा ध्यान दिनुपर्ने कुरा

**कीटैर्भुक्तं घुणैर्भुक्तं यच्च गन्धविवर्जितम् ।**
**रहितञ्च रसेनाऽपि नार्ककर्मणि योजयेत् ॥८॥**
**यथाऽर्के संस्थितं द्रव्यं कुर्य्याद्वोक्तुस्तथा वपुः ।**
**अर्क तरुणभैषज्यं तस्मात्संयोजयेत्प्रिये ॥९॥**

किराले खाएको, घुन लागेको, बास्ना नआउने र रस नभएको द्रव्यलाई अर्क निकाल्न प्रयोग नगर्नू । जस्तो द्रव्य अर्क बनाउन हालिन्छ, त्यो पिउने मानिसको शरीर पनि त्यस्तै हुन्छ । अर्थात् द्रव्य उत्तम भए तुरुन्त फाइदा दिन्छ । यसैले अर्क बनाउँदा ताजा द्रव्य नै प्रयोग गर्नु पर्दछ ।

## साह्रो द्रव्यको अर्क निकाल्ने विधि

यवान्यजाजीत्रिकटुभूनिम्बादिकमौषधम् ।
ज्ञेयं तत्कठिनं द्रव्यं तदर्कस्य विधिं श्रृणु ॥१०॥
द्विगुणन्निक्षिपेत्तोयन्द्रव्ये हि कठिने प्रिये ।
अष्टप्रहरकन्तञ्च कुर्य्यात्पर्य्यामेककम् ॥११॥
रक्षेद्द्रव्यं द्विगुणितं दृष्ट्वा देशन्तु कालकम् ।
पश्चाद्दत्त्वार्कयन्त्रे तदर्क निष्कासयेच्छनैः ॥१२॥

ज्वानु (यवानी), जीरा (अजाजी), सुठो-मरिच-पिप्ला (त्रिकटु), चिराइतो (भूनिम्ब) आदि साह्रा द्रव्य हुन् । अब यी द्रव्यको अर्क बताउने विधि बताउँदछु । हे प्रिया ! यदि कुनै साह्रो द्रव्यको अर्क निकाल्नु छ भने त्यसमा दुई गुना पानी हालेर पहिले बताइए जस्तै आठ प्रहरसम्म घाम र जुनमा राख्नू । अथवा देश र समय हेरी आठ प्रहर घाममा र आठ प्रहर जुनमा राख्नू । त्यसपछि अर्क निकाल्ने यन्त्रमा राखी बिस्तारै बिस्तारै अर्क निकाल्नू ।



## गिलो द्रव्य

आर्द्रं द्रव्यं द्विधा प्रोक्तं सरसं निरसन्तथा ।
सदुग्धं गुप्तरसकं द्विधा नीरसमुच्यते ॥१३॥
वास्तुकं सार्षपं शाकं निर्गुड्येरण्डमार्कवम् ।
धत्तूराद्यमिदं सर्वमार्द्रं सरसमुच्यते ॥१४॥

गिला द्रव्य रस सहितका र रस नभएका अथवा दूध आउने र अर्को रस लुकेका गरी दुई किसिमका हुन्छन् । रस लुकेका द्रव्य पनि दुई किसिमका हुन्छन् । बेथे वा पुनर्नवा, सर्सिउँको साग, सिमाली, अँडिर, सेतो भृङ्गराज झार (मार्कव) र धतुरो आदि सबै दूध आउने खालका द्रव्य हुन् ।

## गिलो द्रव्यको अर्क निकाल्ने विधि

**एषां नालाँश्चूर्णयित्वा विंशांशं निक्षिपेज्जलम् ।**
**मुहूर्तमुष्णे सँस्थाप्य ग्राह्योऽर्को विबुधोत्तमैः ॥१५॥**

यी द्रव्यका डाँठलाई धुलो बनाई बीस भाग पानीमा भिजाउनू र दुई घडी घाममा राख्नू । यसपछि अर्क निकाल्ने यन्त्रमा भरी बुद्धिमानले अर्क निकाल्नू ।

## पातको अर्क निकाल्ने विधि

**पत्राणि च शतांशेन तुल्यतोयेन सेचयेत् ।**
**दद्याद्धटीमर्कंकरे ततोऽर्कं कलयेच्छनैः ॥१६॥**

पातको अर्क निकाल्ने हो पातलाई सय भाग पानीमा भिजाउनू । एक घडीसम्म घाममा सुकाउनू र अर्क यन्त्रमा हाली बिस्तारै अर्क निकाल्नू ।



## रस लुकेका द्रव्यको अर्क निकाल्ने विधि

**वटाश्वत्थकरीराद्यमार्द्रद्रव्यन्तु नीरसम् ॥१७॥**
**विंशांशं निक्षिपेत्तोयं यामं घर्मञ्च धारयेत् ।**
**ततो निष्कासयेदर्कं क्रमबृद्ध्यग्निनोक्तवत् ॥१८॥**

बर, पीपल, करील आदि द्रव्य लुकेको रस हुने रसिला द्रव्य हुन् । यसमा बीसौं भाग पानी हाली एक प्रहरसम्म घाममा राख्नू र त्यसपछि अर्क निकाल्ने यन्त्रमा हाली अर्क निकाल्नू ।

## दूधिला द्रव्यको तीक्ष्ण-अर्क निकाल्ने विधि

सदुग्धन्तु द्विधा प्रोक्तं मृदुतीक्ष्णमितिक्रमात् ।
सातलावज्रसेहुण्डशौरिण्याद्यास्तुतीक्ष्णकाः ॥१९॥
खण्डानि तेषां कृत्वाऽथ निक्षिपेदुष्णके जले ।
दिनत्रये तु निष्कास्य तोयन्दद्याच्चकुट्टयेत् ॥२०॥
यावन्न दृश्यते दुग्धं दद्यात्तोयं दशांशकम् ।
शनैर्निष्कासयेदर्कं स तु तीक्ष्णमर्कसंज्ञकः ॥२१॥

दूधिला द्रव्य दुई किसिमका हुन्छन् : नरम र तिक्खर । हात्तीकाने (बोट), सुगन्धवाल, सिउँडी, शौरिणी (?) आदि तिक्खर दूधिला द्रव्य हुन् । यिनलाई टुक्रा टुक्रा पारी तातो पानीमा हाल्नू । तीन दिनपछि निकाली नयाँ पानीमा हाल्नू र जबसम्म दूध आउन बन्द हुँदैन तबसम्म कुट्नू । यसपछि दशौं भाग पानीमा मिलाई अर्क निकाल्नू । यसलाई 'तीक्ष्णार्क' भनिन्छ ।



दुग्धिकार्क क्षीरिण्याद्या मृदुदुग्धाः प्रकीर्त्तिताः ।
जले चतुर्गुणे दद्यात्तान् घर्मेविनिवेशयेत् ॥२२॥
यावज्जलस्योष्णता स्यात्ततो यन्त्रे विनिक्षिपेत् ।
शनैनिष्कासये दर्कं ततोर्को मृदुसंज्ञकः ॥२३॥

रुदिलो, आँक, दूधे थाकल (क्षीरिणी) आदि नरम खालका दूध आउने द्रव्य हुन् । यिनलाई चौबर पानीमा हाली घाममा राख्नू र पानीमा तातोपना हुँदै अर्क यन्त्रमा हाल्नू । अनि बिस्तारै बिस्तारै अर्क निकाल्नू । यसलाई 'मृदु अर्क' भनिन्छ ।

## फलफूलको अर्क निकाल्ने विधि

खण्डीकृत्वैव चाम्राणां फलानां मृदुपाकिनाम् ।
सरसानां च गृह्णीयादर्कन्तोयेन वर्जितः ॥२४॥

काष्ठौदुम्बरिकादी नामाम्राणाञ्चार्कभागिनाम् ।
कृत्वा स्वल्पानि खण्डानि अशीत्यंशं प्रदापयेत् ॥२५॥
पृथक्पृथक् चतुर्वारं स्वर्जिक्षारञ्च सैन्धवम् ।
दत्त्वा विमर्दयेत्सर्वं चत्वारिंशांशकञ्जलम् ॥२६॥
क्षिप्त्वा तत्कलशे घर्मे यामार्द्धेनोष्णता भवेत् ।
ततो यन्त्रे हितद्दत्त्वा गृहणीया दर्कमुत्तमम् ॥२७॥
अतिपक्वफलानान्तु वितोयंश्चार्कमाहरेत् ।

रसिला र कमला काँचा फलफूलको पानी नमिसाई ससाना टुक्रा बनाई अर्क निकाल्नू । डुम्री, आँप आदि कडा खालका काँचा फलफूललाई ससाना टुक्रा पारी काट्नू । अस्सी भाग पानी हाली त्यसमा बेग्लाबेग्लै सज्जीखार (धुने वा सफा गर्ने काममा प्रयोग गरिने प्रसिद्ध क्षार पदार्थ) र सिधेनुन हाली बेस्सरी मोल्नू । त्यसपछि चालीसौं भाग पानी मिसाई आधा प्रहरसम्म घाममा राख्नू । जब पानी तात्दछ तब अर्क यन्त्रमा हाली अर्क निकाल्नू । धेरै पाकेका फलफूलको अर्क निकाल्दा पानी नहाली निकाल्नू ।



## फूल र लप्सीको अर्क निकाल्ने विधि

पुष्पार्कार्थं षोडशांशजलं पुष्पेषु चार्पयत् ॥२८॥
बहुवार फलादीनि चिल्लिकादीनि यानि च ।
प्रक्षेप्यान्युदकेतानि चुचूलत्वस्य शान्तये ॥२९॥
ततश्चत्वारिंशदंशं जलं दत्त्वा समाहरेत् ।

फूलको अर्क निकाल्नु छ भने फूललाई सोह्र गुना पानी हाली अर्क यन्त्रमा हालेर अर्क निकाल्नू । लौसी (बहुवार) आदि फलफूलको अर्क निकाल्नु छ भने पहिला त्यसको चिप्लोपना हटाउनु पर्दछ । यसका लागि अस्सी गुना पानीमा हाली घाममा राख्नू, जब चिप्लोपना हट्दछ तब चालीस गुना पानी हालेर अर्क निकाल्नू ।

## तरल द्रव्यको अर्क निकाल्ने विधि

**तेषामर्कमथ द्रवद्रव्यार्कोपाय उच्यते ॥३०॥**
**द्रवद्रव्युत्क्षेपणेशात्त्यै त्युते वास कल्पना ।**

अब तरल द्रव्यको अर्क निकाल्ने विधि बताइन्छ । यस्ता द्रव्यको माथितिर हुत्याउने वा बान्ता गराउन खोज्ने वा उम्लिन खोज्ने गुणलाई रोक्ने विधि पहिले बताइन्छ ।

**विधानानि विचित्राणि तेषामन्तो न विद्यते ॥३१॥**
**शतपत्र प्रसूनैर्वा जात्युत्यैर्मालती भवैः ।**
**पारिजातैः केतकिजैर्वापिधानं समाचरेत् ॥३२॥**

यस्तो रोक्ने (आच्छादन) विधि अनेक थरीको हुन्छ । यसको कुनै सीमा छैन । जस्तै कमल, चमेली, मालती, पारिजात, क्यात्तुके आदि फूलले छोप्न सकिन्छ ।



**दुग्धे दध्न्यथवा तक्रे क्षौद्रन्तैले च सर्पिषि ।**
**मूत्रादौ देहतोये च चम्बेल्यादि पिधानकम् ॥३३॥**

दूध, दही, तक्र, मासुको रस, तेल, घिउ, मूत्र र पसिना जस्ता वस्तु भए चमेलीको फूलले छोप्नू ।

**कान्तयाससत्वस्य कृतं पात्रमनुत्तमम् ।**
**निष्कासयेदेवमर्क द्रवद्रव्यस्य नान्यथा ॥३४॥**

कान्तिसार फलाम र किट मिसाएर बनाइएको उत्तम भाँडामा तरल द्रव्यको अर्क निकाल्नू र कुनै भाँडामा राख्नू ।

कान्तिसार फलाम :-यस्तो फलामे भाँडा जसमा राखेको पानीमा तेल पर्दा फैलिँदैन, तातेको भाँडामा फुराएको हिङमा गन्ध आउँदैन, नीमको रस पर्दा गुलियो बन्दछ, दूध तताउँदा उम्लेर जाँदैन, पानी राखेर चना भिजाउँदा कालो हुन जान्छ, यस्तो गुण भएको फलामलाई “कान्तिसारलौह” भनिन्छ ।

## विकार रोक्ने उपाय

**अथ स्तम्भकं द्रव्यं दध्नो हि नवनीतकम् ।**
**दृढ बिल्वो जलस्योक्तो मधूच्छिष्टन्तु सर्पिषः ॥३५॥**
**गोकण्टकस्तु दुग्धस्य तथा मद्यस्य कीचकम् ।**

दहीले गर्ने विकारलाई नौनीले रोक्दछ, पानीले गर्ने विकारलाई बेलले रोक्दछ, घिउले गर्ने विकारलाई महले रोक्दछ, दुधले गर्ने विकारलाई गोखरुले रोक्दछ भने मद्यले गर्ने विकारलाई वंशलोचनले (कीचक, बाँसको सार) नाश गर्दछ ।



**तैलस्य तस्य पिण्याकं सर्व घृत समन्वितम् ॥३६॥**
**यन्त्रे दत्त्वा द्रवद्रव्यं यथा स्थाली निवेशनम् ।**

तेलको विकार पिनाले रोक्दछ । यी द्रव्यलाई घिउसँग मिसाएर अर्क यन्त्रमा राख्नू र ती तरल द्रव्यलाई अरु भाँडामा राख्नू ।

**तथा स्थलं स्थापयित्त्वा द्रव्यैयन्त्रं प्रपूरयेत् ॥३७॥**
**आच्छाद्यं सारिकैः पूर्णं स्थालीं कुर्य्यादधोमुखीम् ।**
**तथाचाकर्षितः सर्वोद्रवः फेणं परित्यजेत् ॥३८॥**

पातलो हुनाले चुहिएर नझरोस् भनेर छुट्टै थाली आदिमा हालेर अर्क यन्त्रमा राख्नु भनिएको हो । यसपछि त्यसको मुख अर्को थालीले छोपी राम्ररी टाल्नू, जसले गर्दा अर्क निकाल्ने समयमा तरल पदार्थको फिँज उठेर बाहिरतिर जाँदैन ।

## दुर्गन्धित द्रव्यको अर्क सुगन्धित बनाउने विधि

**दुर्गन्धियो भवेदर्कस्तं कुर्य्याद्रुच गन्धकम् ।**
**सर्वेषामेव मांसानां दुर्गन्धानाञ्च सर्वशः ॥३९॥**
**घृताभ्यक्ता हिङ्गुजीरमेथिकाराजिकाकृतः ।**
**नवीनायां हण्डिकायां दद्याद्धूपं पुनः पुनः ॥४०॥**
**तत्र दद्यात्तदर्कं तु यथा दुर्गन्धता व्रजेत् ।**
**तथा पुनः पुनः कार्यं जायते गन्धवारणम् ॥४१॥**
**आयाति रोचको गन्धः स भवेद्वह्निदीपनः ।**

दुर्गन्धित मासु आदिका अर्क दुर्गन्धित हुन्छ । यसलाई सुगन्धित बनाउनु पर्ने हुन्छ । घिउमा मोलिएका हिङ, जीरा, मेथी र रायोको धुलालाई एउटा नयाँ हाँडीमा राखेर पटकपटक गन्ध नहटेसम्म अर्कलाई धूप दिनू । यसरी धूप दिँदा अर्कको गन्ध हट्दै गई बिस्तारै बास्ना आउन थाल्दछ । यस्तो अर्कले जठराग्निलाई तिव्ररूपमा बाल्दछ ।



**सर्वेष्वर्क प्रयोगेषु गन्ध पाषाण वासना ॥४२॥**
**अर्काणान्तु प्रदातव्या ते भवन्त्यर्क सम्भवाः ।**

सबै खालका अर्कमा गन्धकको बास्ना दिनु उचित हुन्छ, यसले अर्कलाई सूर्यसमान चम्किलो बनाउँदछ ।

**सर्वत्र वातरोगेषु महिषाक्षादि वासना ॥४३॥**
**सर्वेषु पित्तरोगेषु चन्दनादिक वासनाम् ।**
**सर्वेषु कफरोगेषु जटामांस्यादि वासनाम् ॥४४॥**

सबै प्रकारका वातरोग नाश गर्ने अर्कमा महिषाक्षादि गणका, पित्तरोग नाश गर्ने अर्कमा चन्दनादि गणका र कफ रोग नाश गर्ने अर्कमा जटामसी आदि गणको बास्ना दिनु पर्दछ ।

**महिषाक्षस्तथारालं निर्यासः सर्जकस्य च ।**
**कृष्णागुरुलवङ्गञ्च महिषाक्षादि पञ्चकम् ।।४५।।**

गोकुल धूप (माहिषाक्ष), सालधूप (राल), विजयसालको गुँद (वा रुखको चोप वा खोटो), कालो धूपी र ल्वाङ्ग : यिनलाई महिषाक्षादि गण भनिन्छ ।

**चन्दनञ्च तथोशीरं कपूरो गन्ध वाकुची ।**
**एला कचूरिणी धूली सप्तैते चन्दनादयः ।।४६।।**

चन्दन, खस, कपूर, गनाउने खालको बकुची, अलैंची, कचूरिणी (?) र क्यात्तुकेको फूल (धूलीपुष्पी) : यिनलाई चन्दनादि गण भनिन्छ ।

**जटामांसी नखं पत्री, लवङ्गं तगरं रसः ।**
**शिलाया गन्धपाषाण सप्तमां स्यादिका अमी ।।४७।।**



जटामसी, नखी नामक सुगन्धित द्रव्य, तेजपात, ल्वाङ, तगर, शिलाजित र गन्धक : यी जटामसी गणका द्रव्य हुन् ।

**वासयेद्वादशाङ्गेन त्रिदोषघ्नेन चार्ककम् ।**
**नश्यन्ति यस्य धूपेन उपग्रह पिशाचकाः ।।४८।।**

त्रिदोषजन्य रोगमा प्रयोग गरिने अर्कमा (निम्न) द्वादशाङ्ग धूपको बासना दिनू । यसले नवग्रह र पिशाच आदि शान्त हुन्छन् ।

**पञ्चांशं गन्ध पाषाणं तावन्महिष गुग्गुलुः ।**
**चतुरंशश्चन्दनञ्च जटामांसी तथा गुरु ।।४९।।**
**त्रिभागः सर्जकः क्षारस्तावदेव हिरालकम् ।**

**उशीरन्तु द्विभागं स्यात् घृतमष्टं नखं समम् ॥५०॥**
**कर्पूरो मृगनाभिश्च एक भागौ प्रकीर्त्तितौ ।**
**द्वादशाङ्गस्तु धूपोऽयं रुद्रस्याऽपि मनोहरेत् ॥५१॥**
**पलाण्डु लशुनादीनां दुर्गन्ध हरणं शृणु ।**

गन्धक पाँच भाग, गोकुल धूप पाँच भाग, चन्दन चार भाग, जटामसी चार भाग, धूपी चार भाग सज्जीखार तीन भाग, सालधूप तीन भाग, खस दुई भाग, घिउ आठ भाग, नखी आठ भाग, कपूर एक भाग र कस्तूरी एक भाग लिनू । यसलाई द्वादशाङ्ग धूप भनिन्छ । यसले भगवान् शिवको मन अति प्रसन्न हुन्छ । हे प्रिया ! अब लसुन आदिको गन्ध हटाउने उपाय बताउँदछु सुन ।

**उत्पाद्यान्तर्विषं सम्यक् तक्रमध्ये विनिःक्षिपेत् ॥५२॥**
**पर्यायमेकमत्यम्ले मध्येऽस्मिन्विरसे सति ।**
**दद्यान्निष्कास्यान्यतक्रं कुर्यात्तच्चाष्टयामकम् ॥५३॥**

**द्रोणपुष्पीरसेष्वेव मूर्वापत्ररसेऽपि वा ।**
**त्रिपर्यायोत्तरं तत्तु रसोनं क्षालयेत्सुधीः ॥५४॥**
**हरिद्राराजिकातोये स्थाप्यं पर्यामेककम् ।**
**उष्णोदकेन संक्षाल्य पर्यायं वासयेत्ततः ॥५५॥**
**सहस्रपत्रैः पुष्पैर्वा अभावे पल्लवैरपि ।**
**आलोडयेद्दशौशेन पञ्चांशेन च मस्तुना ॥५६॥**
**युक्तं कृत्वा याममात्रं स्थापयेत्प्रकटातपे ।**
**ततो निष्कासयेदर्कं जात्यादिक पिधानितम् ॥५७॥**
**तस्यार्कस्य सुगन्धेन एकदा मोहितो हरः ।**
**को जानाति रसोनस्य ह्यर्कोयमिति भूतले ॥५८॥**

पहिले लसुन र प्याज केलाएर त्यसलाई अति अमिलो तक्रमा डुबाएर राख्नू । यसो गर्नाले यी द्रव्यको स्वाद नासिन्छ । त्यसपछि यसलाई निकालेर पुनः अर्को तक्रमा आठ प्रहरसम्म डुबाएर राख्नू । यसपछि गुम्पातीको रस वा मरुई लहराका पातको रसमा त्यो

लसुनलाई तीन पटक पखाल्नू । अनि बेसार र रायो मिसाइएको जलमा त्यसलाई भिजाएर राख्नू । यसपछि त्यसलाई तातोपानीले धुनू । त्यसपछि कमल फूल वा फूल नपाए पातको धूप दिनू । अनि दशांश वा पञ्चमांश मस्तुसँग त्यसलाई घोट्नू । यसपछि यसलाई एक प्रहरसम्म चर्को घाममा सुकाउनू । त्यसपछि त्यसलाई चमेलीको फूलले छोपेर विधिपूर्वक अर्क निकाल्नू । यो अर्क अति नै सुगन्धित हुन्छ, एकपटक यस्तो अर्कप्रति शिव समेत मोहित हुनु भएको थियो र भन्नु भएको थियो "पृथ्वीमा यस्तो कुन मानिस होला जसले यो अर्कलाई चाखेर यो लसुनको अर्क हो भनेर भन्न सकोस्" ।

## मासुको अर्क

**एकतः सर्व एवार्का मांसार्कास्तु तथैकतः ।**

अरु सबै अर्क एकातिर र मासुको अर्क एकातिर अर्थात्
सबै अर्कमा मासुको अर्क उत्तम हुन्छ ।



**मयम स्वर्गो गृहीतस्तु प्राप्तं तत्र न चामृतम्॥५९॥**
**तदा प्रोक्तं शिवस्याग्रे मम धिग्जीवनं प्रभो ।**
**नीता वाथ प्रयुक्ता वा सुधा देवैर्मया तु सा॥६०॥**
**न दृष्टा तत्र देवेश शिरश्छेदं करोम्यहम् ।**

रावण भन्दछन्-जब मैले स्वर्गलाई जितैँतब पनि मैले त्यहाँ अमृत पाइन । त्यसपछि मैले भगवान् शिवलाई गएर भने "हे प्रभू ! मेरो जीवनलाई धिक्कार छ । देवता अमृत लिएर भागे र त्यसलाई पिए, मैले तिनलाई देख्दा पनि देखिन । यसैले हे देवताका स्वामि ! म अब मेरो टाउको काट्दछु" ।

**ततः प्रसन्नो गिरिशो वाक्यं मां प्रतिसोऽव्रवीत्॥६१॥**
**दत्तं मया समस्तं ते देवावध्यत्वमेव च ।**
**किं ते कार्यं तु सुधया सुधातोऽधिकरोचनम्॥६२॥**

सम्प्रवक्ष्यामि मांसार्कं मद्यमार्कं तथैव च ।
द्रव्याणां विजयादीनां लभ्यते यैः सुखं महत् ॥६३॥

तब शिवले प्रसन्न भएर भन्नु भयो- "हे रावण ! मैले तिमीलाई कुनै देवताले पनि मार्न नसक्ने बरदान दिइसकेँ । अब तिमीलाई त्यो अमृतको के काम ? म अमृतभन्दा पनि रोचक मासुको अर्क र मद्यको अर्कका बारेमा बताउँदछु । जसले गर्दा तिमीलाई धन र विजय सबै कुराको सुख प्राप्त हुनेछ" ।

## मासुका प्रकार

मांसं तु त्रिविधं ज्ञेयं मृदुलं कठिनं घनम् ।
तेषामर्क यथा प्रोक्त यन्त्रान्निष्कासयेच्छनैः ॥६४॥

नरम, कठोर र खँदिलो गरी तीन किसिमको मासु हुन्छ । यी मासुको विधिपूर्वक यन्त्रबाट बिस्तारै अर्क निकाल्नू ।



## नरम मासुबाट अर्क निकाल्ने तरिका

मृदुलं यद्भवेन्मांसं चत्वारिंशांशकं पटुः ।
स्थूलखण्डीकृते तस्मिन् दत्वा तत्क्षालयेज्जलैः ॥६५॥
षष्ठांशेनाष्टगन्धेन तद्विलोड्य च निःक्षिपेत् ।
रसमिक्षोरष्टमांशं तदभावे पयः क्षिपेत् ॥६६॥
जातीपत्रं लवङ्गं च त्वगेला नागकेशरम् ।
मरिचंमृगनाभिश्च विदुर्गंधाष्टकं त्विदम् ॥६७॥
कार्यं पुष्पपिधानाद्यमर्कं निष्काशयेत्ततः ।
जायते सौ महास्वादुः सुधासमरसः प्रिये ॥६८॥

जुन नरम मासु हुन्छ त्यसलाई ठूलठूला चौटा बनाएर काट्नू । त्यसपछि चालीसौं भाग पानीमा हालेर पखाल्नू । त्यसपछि मासुको छ भागको एक भाग अष्टगन्ध हालेर मासुलाई राम्ररी मोल्नू । त्यसपछि त्यसमा आठ भाग उखुको रस हाल्नू । उखुको रस नपाइए दूध हाल्नू । जाइपत्री, तेजपात, ल्वाङ्ग, दालचिनी, अलैंची, नागकेशर, मरिच र कस्तूरी : यी अष्टगन्ध हुन् । अर्क निकाल्ने यन्त्रमा यसलाई फूलले छोपी अर्क निकाल्नू । हे प्रिया ( मन्दोदरी) ! यो अर्क अती नै स्वादिलो र अमृत समान गुनिलो हुन्छ ।

## कठोर मासुबाट अर्क निकाल्ने विधि

**दृढमांसस्य खण्डानि लघून्येव प्रकल्पयेत् ।**
**दद्याच्च तुवरं तत्र लवणं प्रोक्तया दिशा ॥६९॥**
**क्षालयेदारनालेन त्रिवारं कोष्णवारिणा ।**
**क्षालयेत्सप्त वाराणि हरेदर्कं तु पूर्ववत् ॥७०॥**



कठोर मासुलाई ससाना टुक्रा पारेर काट्नू । त्यसमा सौराष्ट्र देशको माटो वा सिधेनुन मिसाउनू । काँजीपानीले तीन पटक र मनतातो पानीले सात पटक पखाल्नू र पहिलेको नियम अनुसार अर्क निकाल्नू ।

## खँदिलो मासुबाट अर्क निकाल्ने विधि

**घनमांसस्य खण्डानि कुर्यादतिलघूनि च ।**
**आलोड्य शङ्खद्रावेण क्षालयेत्पयसा पुनः ॥७१॥**
**सप्त वाराणि लवणं क्षालयेदेव पूर्ववत् ।**
**तद्दत्त्वा यन्त्रमध्ये तु हरेत्पूर्ववदर्ककम् ॥७२॥**

खँदिलो मासुलाई अति ससाना टुक्रा पारेर काट्नू । अनि शङ्खेत्रोको अमिलो (वा शङ्खद्राव) हाली खुबसँग हल्लाउनु वा मोल्नू र पानीले पखाल्नू । यसपछि त्यसमा नुन मिसाउनू र फेरी सात पटक पानीले पखाल्नू । अनि पहिले बताइएको नियम अनुसार अर्क यन्त्रमा हाली अर्क निकाल्नू ।

## शङ्खद्रावको विधि

स्वर्जिक्षारं यवक्षारं श्वेतक्षारं च टङ्कणम् ।
सौभाग्यक्षारकं सौरं क्षारं शङ्खभवं तथा ॥७३॥
अर्क सेहुण्डपालाशक्षारश्च तुवरी तथा ।
अपामार्गभवं क्षारं तथाऽष्टौ लवणानि च ॥७४॥
लवणाष्टकमेतच्च सैन्धवं च सुवर्चलम् ।
विडं समुद्र सञ्जातमुद्भिजं रोमकं गडम् ॥७५॥
कृत्वा सर्वाणि चैकत्र निम्बूनीरेण भावयेत् ।
एकविंशति वाराणि काचकुप्यां निवेशयेत् ॥७६॥
नखांशनिम्बुकरसैः सर्वमार्द्रीकृतं तु तत् ।
अधः सच्छिद्र पिटरीमध्ये कुप्पीं निवेशयेत् ॥७७॥
मृत्कर्पटसंयुक्तां सहेदग्नि यथाविधि ।
तस्याग्रे कुप्पिका योज्या दीर्घकण्ठा मनोहरा ॥७८॥
सा कुप्पिका जलेस्थाप्य मेलयेच्च द्वयोर्मुखम् ।
जलमुष्णं यथा न स्यात्तथैवोपरि कूपिका ॥७९॥
अग्नयः क्रमतो देया यामं यामं च पञ्चमम् ।
अनेनैव प्रकारेण क्षारार्काणां समुद्भवः ॥८०॥
दद्यादस्थीनि मांसानि शङ्खशुक्त्यादिकान्यपि ।
सर्वाण्यपि विलीयन्ते शङ्खद्रावे न संशयः ॥८१॥

सज्जीक्षार, यवक्षार, श्वेतक्षार, सुहागा वा सौभाग्यक्षार, सौरक्षार, शङ्खक्षार (शङ्खभष्म), आँकको क्षार, सिउँडीको क्षार, पलाशको क्षार, गोपीचन्दनको क्षार, दतिवनको क्षार, आठ प्रकारका नुन, सिधे, सौंचर, विड, समुद्री, उद्भिज, रोमक, गड र खारी, यी सबै जम्मा पारेर एक्काईस पटक कागती पानीले भिजाउनू । यसपछि यसलाई सिसाको भाँडामा राख्नू । लगभग बीसौं भाग कागतीको रसले त्यो पुनः भिजाएर तलतिर प्वाल भएको अग्निमा त्यो सिसाको भाँडालाई राख्नू । त्यो भाँडालाई आगोले नफुटोस् भनेर माटो दल्नू । त्यसको

मुखमा एउटा छोपिने खालको भाँडो राख्नू । त्यो भाँडामा पानी हाल्नू । त्यो जलमा सिसाको भाँडाको ताप नपुगोस् भनी ख्याल राख्नू । यसपछि पाँच प्रहरसम्म यसलाई पटकपटक तताउनू ।यसरी क्षार अर्क तयार हुन्छ । यो शङ्खद्रवमा हाड, मासु वा शङ्ख, सिपी आदि जे परेपनि त्यो गलेर पानी हुन्छ ।

## नरम मासु

**पारावताश्च चटकाः शशसूकरटिट्टिभाः ।**
**क्षुद्रमत्स्यादिकाः सर्वे मांसेषु मृदुलाः स्मृताः ॥८२॥**

परेबा, भँगेरो, खरायो, सुँगुर, टिटिबाँस, ससाना माछा आदिको मासु कोमल हुन्छ ।

## कठोर मासु



**मृगरोहितकाद्याश्च मत्स्याः शल्लकिशम्बराः ।**
**एते कठिनमांसाः स्युर्जीवास्तु जलचारिणः ॥८३॥**

मृग-हरिण आदि, ठूला माछा, दुम्सी, साँभर मृग आदिको मासु कठोर हुन्छ ।

## खँदिलो मासु

**गजकुम्भीरघण्टाद्याः सगन्धाः कर्करादयः ।**
**गोधागोश्वलुलायाद्या घनमांसाः प्रकीर्तिताः ॥८४॥**

हात्ती, ग्राह (नाव जातको गोही), घडियाल, सगन्धा (?), गँगटो, गोही, गाई, घोडा, भैंसी आदिको मासु खँदिलो हुन्छ भनिएको छ ।

## मद्य

**अन्नादिसम्भवो योऽर्कस्तन्मद्यं परिकीर्तितम् ।**
**तस्य भेदान् प्रवक्ष्यामि क्वथितात्तत्समुद्धरेत् ॥८५॥**

अन्न आदिबाट बनाइने अर्कलाई मद्य भनिन्छ । त्यसका प्रकारहरू बताउँदछु । क्वाथ (काँडापानी पकाए जसरी) वा पातलो बनाएर त्यसबाट मद्य निकाल्नु पर्दछ ।

## मद्यमा गन्ध हटाउने उपाय

**तद्वासनानिवृत्यर्थमष्टगन्धं प्रयोजयेत् ।**
**पूर्वोक्तैर्धूपयेद्धूपैर्जायते गन्धवर्जितम् ॥८६॥**

यसको गन्ध नाश गर्न अष्टगन्धको प्रयोग गरिन्छ । अथवा पहिले बताइको विधिले धूप दिएर पनि यसको गन्ध नाश गर्न सकिन्छ ।



## तुषोदक

**अर्द्धं तत्र जलं देयं सिद्धे देयोऽष्टगन्धकः ।**
**तुषोदकं यवैरामैः सतुषैः शकलीकृतैः ॥८७॥**

त्यसमा आधा पानी हालेर मात्र अष्टगन्ध हाल्नु पर्दछ । काँचो जौलाई बोक्रा सहित नै पिँधेर अर्क निकाल्दा "तुषोदक" नामक मद्य हुन्छ ।

## सौवीर

**सौवीरं तु यवैश्चैवं निस्तुषैः शकलीकृतैः ।**
**गोधूमैरपि सौवीरं जायते स्वल्पमादकम् ॥८८॥**

बोक्रा निकालिएको जौ वा गहुँको अर्कलाई “सौवीर” भनिन्छ । तर जौको तुलनामा गहुँको सौवीर कम नशालु हुन्छ ।

## आरनाल र धान्याम्ल

आरनालं तु गोधूमैरामैः स्यान्निस्तुषीकृतैः ।
धान्याम्लं शालिचूर्णादि कोद्रवादिकृतं भवेत् ॥८९॥

बोक्रा नभएको गहुँको अर्कलाई “आरनाल” तथा मार्सी चामल र कोदो आदिको अर्कलाई “धान्याम्ल” भनिन्छ ।

## शाण्डाकी

शण्डाकी राजिकायुक्तैः स्यन्मूलकदलद्रवैः ।

सर्षपस्वरसैर्वापि शालिपिष्टिक संयुतैः ॥९०॥

पात सहितको मूला र रायो वा सर्सिउँ मिसाएर त्यसमा चामलको पिठो हाली बनाइने अर्कलाई “शण्डाकी” भनिन्छ ।

## सूक्त

कन्दमूलफलादींश्च सस्नेहलवणानि च ।
एकीकृतस्तु योऽर्कः स्यात्ससूक्तमभिधीयते ॥९१॥

कन्दमूल, फलफूल आदिमा चिल्लो र नुन मिसाएर निकालिने अर्कलाई “सूक्त” भनिन्छ ।

## अरिष्ट

**पक्वौषधाम्बुसंसिद्धो योऽर्कः स स्यादरिष्टकम् ।**
**अरिष्टं लघुपाकेन सर्वतो हि गुणाधिकम् ॥९२॥**

औषधीलाई पानीमा पकाई त्यसबाट निकालिने अर्कलाई "अरिष्ट" भनिन्छ । यो अर्क सजिलै र छिट्टै पच्दछ तथा सबैभन्दा बढी गुनिलो हुन्छ ।

## सुरा र वारुणी

**शालिपेठ कपिष्ट्यादिकृतो योऽर्कः सुरा तु सा ।**
**पुनर्नवाशिवापिष्टैर्विहिता वारुणी स्मृता ॥९३॥**

मार्सी चामलको वा पिठोको अर्कलाई "सुरा" भनिन्छ । पुनर्नवा र हर्रोमा सठिया चामलको पिठो मिसाई बनाइने अर्कलाई "वारुणी" भनिन्छ ।



## सीधु र शीतरस

**इक्षोः पक्वै रसैः सिद्धः सीधुः पक्वरसश्च सः ।**
**आमैस्तैरेव यः सिद्धः स च शीतरसः स्मृत ॥९४॥**

उखुको पकाएको रसबाट निकालिने अर्कलाई "सीधु" भनिन्छ भने उखुको काँचो रसबाट निकालिने अर्कलाई "शीतरस" भनिन्छ ।

## सात्विक, तामसी र राजसी मद्य

**पर्यायाद्यो भवेन्मद्यस्तामसो राक्षसप्रियः ।**
**मण्डादी राजसो ज्ञेयस्ततो वै सात्विको भवेत् ॥९५॥**

अनेकपटक निकालिने मद्यलाई "तामस मद्य" भनिन्छ र यो राक्षसहरूलाई प्रिय हुन्छ । मण्डको मद्य वा शुरुमा एकपटक मात्र निकालिने मद्यलाई "राजसी मद्य" भनिन्छ । बल र बुद्धिका लागि फाइदाजनक र कम लाग्ने खालको मद्यलाई "सात्विक मद्य" भनिन्छ ।

**सात्विकं गीतहास्यादौ राजसं साहसादिके ।**
**तामसे निन्द्यकर्माणि निद्राञ्च बहुधा चरेत् ॥९६॥**

गीत, हाँसख्याल आदि आनन्ददायक काममा "सात्विक", साहसिलो काममा "राजसी" तथा निन्दनीय र निद्राका लागि "तामसी" मद्य सेवन गर्नुपर्दछ ।

## वारुणीका बारेमा थप कुरा

**पुनर्नवाशिलापिष्टैर्विहिता वारुणी च सा ।**
**संहितैस्ताल हर्जूररसैर्या सा च वारुणी ॥९७॥**



पुनर्नवालाई पत्थरमा पिँधेर बनाइने तथा ताडी वा कैथको मद्यलाई पनि "वारुणी" भनिन्छ ।

## वारुणीका लाभ

**सुरावद्वारुणी लघ्वी पीनसाध्माशूलनुत् ।**
**ग्राहिणी शोथगुल्मार्शोग्रहणीमूत्रकृच्छ्रजित् ॥९८॥**

वारुणी पनि सुरा सरह नै पचाउन हलुका, पिनास-आध्मान-शूल- कब्जियत-शरीर सुन्निएको-गुल्म-अल्काइ-ग्रहणी र मूत्रकृच्छ्र नाशक हुन्छ ।

## भाङको अर्क

**भङ्गादिमत्त द्रव्याणां यवानीपादयोगतः ।**
**अर्कं निष्काशयेद्धीमान् बोधकः स्यान्मदस्य सः ॥९९॥**

भाङ आदि नसालु पदार्थमा चार भाग ज्वानू हाली निकालिने अर्क अति नै लाग्ने खालको हुन्छ ।

## धतुरोको अर्क

**धतूराकबीजानि क्षिप्त्वा पयसि धापयेद् ।**
**कण्ठशोषविबन्धादिरहितोऽर्को भवेत्स हि ॥१००॥**

धतुराका गेडालाई पानीमा पखाल्नू र अर्क निकाल्नू । यसले घाँटीका रोग निको पार्दछ ।



इति लङ्केश्वर रावणकृतार्कप्रकाशे द्वितीयं शतकं सम्पूर्णम्

✷

रावण लिखित अर्कप्रकाश अन्तर्गत दोश्रो शतकको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो

✷

## ॥ अत तृतीय शतकम् ॥

## हर्रोको अर्क

**अथातः सम्प्रवक्ष्यामि केवलार्कगुणान् प्रिये ।**
**हरीतक्याः शूलकृच्छ्रकामलानाहनाशनः ॥१॥**

हे प्रिया (मन्दोदरी) ! म अब यसपछि केवल अर्कका गुणहरूका बारेमा बताउँदछु । हर्रोको अर्कले शूल, कृच्छ्र, कमलपित्त र आनाह नाश गर्दछ ।

## बर्रो र अमलाको अर्क

**बिभीतकस्य तृट्छर्दिकफकासविनाशनः ।**
**आमलस्य त्रिदोषास्रपित्तमेहान्विनाशयेत् ॥२॥**



बर्रोको अर्कले तिर्खा, वाकवाकी, कफ र खोकी निको हुन्छ भने अमलाको अर्कले त्रिदोष, रक्तपित्त र प्रमेह नाश गर्दछ ।

## सुठो र अदुवाको अर्क

**शुण्ठ्या विबन्धाऽऽमवातशूलश्वासबलासहृत् ।**
**आर्द्रकस्य ज्वरं दाहं हरेद्रुच्योऽग्निदीप्तिकृत् ॥३॥**

सुठोको अर्कले दिसा-अवरोध, आमवात, शूल, दम र कफ नाश गर्दछ भने अदुवाको अर्कले जरो र डाह नाश गर्दछ । अदुवाको अर्कले रुचि र पाचकाग्नि समेत बढाउँदछ ।

## पिप्ला र मरिचको अर्क

**पिप्पल्याः श्वासकासामवातार्शोज्वरशूलहृत् ।**
**मरीचस्य श्वासकृमीन् हरेत्सर्वान् गदानपि ।।४।।**

पिप्लाको अर्कले दम, खोकी, आमवात, अल्काइ, जरो र शूल नाश गर्दछ भने मरिचको अर्कले दम, किरा र सबै रोग नाश गर्दछ ।

## पिप्लाको जरा र चाँभाको अर्क

**ग्रन्थिकस्य प्लीहगुल्मकफवातोदरापहः ।**
**चव्यार्कोत्थं रुचिकृत् विशेषाद्गुदजापहः ।।५।।**

पिप्लाको जराको अर्कले फियोका रोग, गुल्म, कफविकार र वातविकार नाश गर्दछ । चाँभाको अर्कले अति नै रुचि बढाउँदछ र विशेषगरी अल्काइलाई ठिक गर्दछ ।



## चाँभाको फल र चितूको अर्क

**अर्कस्तु गजपिप्पल्या वातश्लेष्माग्निमान्द्यहृत् ।**
**चित्रकस्याग्नि कृत्कासङ्ग्रहणीकृमिनाशनः ।।६।।**

चाँभाको फलको अर्कले वातविकार, कफविकार र मन्द जठराग्नि ठिक गर्दछ । चितूको अर्कले जठराग्नि बाल्ने तथा खोकी, सङ्ग्रहणी र किरा नाश गर्ने काम गर्दछ ।

## ज्वानु र अजमोदा (ज्वानुको एक जात) को अर्क

**यवान्याः पाचनो रुच्यो दीपनस्त्रिकशूलहृत् ।**
**अजमोदोद्भवो वातकफहा बस्तिशोधनः ।।७।।**

ज्वानुको अर्क पाचन, रुचिवर्धक, दीपन र कण्डेउलोको शूल नाशक हुन्छ । अजमोदाको अर्कले वातविकार र कफविकार नाश गर्नुका साथै बस्ति (नाइटोभन्दा मुनि देखि गुप्ताङ्गभन्दा माथिसम्मको भाग) लाई सफा पार्दछ ।

## पारसिक ज्वानु (खुरासान प्रान्तमा उत्पादन हुने ज्वानु विशेष) र सेतो जीराको अर्क

**पारसिक यवान्यास्तु ग्राही पाचनमादनः ।**
**जीरकस्य तु संग्राही गर्भाशयविशुद्धिकृत् ॥८॥**

पारसिक ज्वानुको अर्कले कब्जियत गर्दछ, पाचन हुन्छ र नसा लगाउँदछ । सेतो जीराको अर्कले पनि कब्जियत गर्दछ र गर्भाशयलाई शुद्ध पार्दछ ।

## कालो जीरा र मुङ्ग्रेलोको अर्क



**कृष्णजीरस्य चक्षुष्यो गुल्मछर्द्यतिसारजित् ।**
**कारव्या बलकृद्दोष्यो ज्वरघ्नः पाचनो रसः ॥९॥**

कालोजीराको अर्क आँखाका लागि लाभदायक हुन्छ । यसले गुल्म, वाकवाकी र आउँ ठिक गर्दछ । मुङ्ग्रेलोको अर्कले जरो नाश गर्दछ । यो पाचन र विरेचन गुणको हुन्छ ।

## धनिया र सुपको अर्क

**धान्यार्कस्य तृषादाहवमिश्वासत्रिदोषहृत् ।**
**मिश्या ज्वरानिलश्लेष्मव्रणशूलाक्षिरोगहृत् ॥१०॥**

धनियाको अर्कले तिर्खा, डाह, वाकवाकी, दम र त्रिदोष नाश गर्दछ । सुपको अर्कले जरो, वातविकार, कफविकार, कफविकार, घाउखटिरा, शूल र आँखाका रोग निको पार्दछ ।

## वनसुप र धयैँरोको अर्क

**मिश्रेयाया वह्निमान्द्ययोनिशूलकृमीन् हरेत् ।**
**ज्वालाकस्य ह्यपस्मार भूतप्रेतत्रिदोषहृत् ॥११॥**

वनसुपको अर्कले मन्दाग्नि, स्त्री जननेन्द्रिय सुन्निने रोग र किरा नाश गर्दछ । धयैँरो (कुनै प्रतिमा ज्वालाकको अर्थ रातो खोर्सानी भनी लगाइएको छ) को अर्कले छारेरोग, भूतप्रेत लागेको र त्रिदोष नाश गर्दछ ।

## मेथी र बनमेथीको अर्क

**मेथिकायाः श्लेष्मवातज्वरामकफनाशनः ।**
**वनमेथ्याः सर्वरोगान् हरेत्कुञ्जरवाजिनाम् ॥१२॥**

मेथीको अर्कले कफविकार, वातज्वर र आम-कफ नाश गर्दछ । वनमेथीको अर्कले हात्ती र घोडाका सबै रोग ठिक गर्दछ ।



## चम्सुर र हिङको अर्क

**चन्द्रसूरस्य हिक्कासृग्वातहृत् पुष्टिवर्द्धनः ।**
**हिङ्गुनः पाचनो रुच्यः कृमिशूलोदरापहः ॥१३॥**

चम्सुरको अर्कले बाडुली, रक्तपित्त र वातविकार नाश गर्दछ । हिङको अर्कमा पाचन, रुचिवर्धक, किरानाशक, शूलनाशक र पेटका रोग नाशक गुण हुन्छ ।

## बोजो र पारसी बोजोको अर्क

**वचाया वह्निवमिकृद्विबन्धाध्मानशूलहृत् ।**
**पारसीकवचायास्तु भूतोन्मादबलं हरेत् ॥१४॥**

बोजोको अर्क जठराग्नि बाल्दछ, बान्ता गराउँदछ, कब्जियत-आध्मा र शूल नाश गर्दछ । पारसी बोझोको अर्कले भूतका कारण हुने उन्माद र बल नाश गर्दछ ।

## कुलिञ्जन जातको बोजो र स्थूलग्रन्थी जातको बोजोको अर्क

**कुलिञ्जनस्य स्वरकृद्धृत्कण्ठमुखशोधनः ।**
**स्थूलग्रन्थि भवश्चार्को विशेषात्कफसानुसत्॥१५॥**

कुलिञ्जनको अर्कले स्वर खुलाउने तथा मुटु, घाँटी र मुख सफा पार्ने गर्दछ । स्थूलग्रन्थिको अर्कले विशेषतः कफ र खोकी नाश गर्दछ ।

नोट : कुलिञ्जन र स्थूलग्रन्थि दुवैको अर्थ महाभरी बोजो लेखिएकोले फरक पत्ता लगाउन सकिएन ।



## चोपचिनी र हपुषाको अर्क

**द्वीपान्तर वचायास्तु हरेच्छूलं फिरङ्गिकम्।**
**वपुषाया हरेत्प्लीहं विषं मेहं च दारुणम्॥१६॥**

चोपचिनीको अर्कले शूल र यौन रोग नाश गर्दछ । हपुषाको अर्कले फियोका रोग, विष र गम्भीर खालका प्रमेह नाश गर्दछ ।

## सानो हपुषा र वायुविडङ्गको अर्क

**हबुषायाः समीरर्शोग्रहणी गुल्मशूलहृत् ।**
**वैडङ्गाश्चोदरश्लेष्म कृमिवात विबन्धनुत्॥१७॥**

सानो हपुषाको अर्कले वातविकार, अल्काइ, ग्रहणी, गुल्म र शूल निको हुन्छ । वायुविडङ्गको अर्कले पेटका रोग, कफविकार, किरा, वातविकार र कब्जियत निको हुन्छ ।

## नेपाली धनियाँ र वंशलोचनको अर्क

**तुम्बरो गुरुताश्वासप्लीहोदरकृमीन् हरेत् ।**
**वंशलोचनजस्तृष्णाक्षयकासज्वरान्हरेत् ॥१८॥**

नेपाली धनियाँ (टिमुर) को अर्कले शरीरको भारीपन, दम, फियोका रोग, पेटका रोग र किरा नाश गर्दछ । वंशलोचनको अर्कले तिर्खा, क्षयरोग, खोकी र जरो नाश गर्दछ ।

## समुद्रफेन र जीवकको अर्क

**समुद्रफेनजः शीतो लेखनः कफहृत्सर ।**

**जीवकोत्थः शुक्रकफबलकृच्छीतलः समः ॥१९॥**

समुद्रफेनको अर्क शीतल गर्ने, लेखन, कफनाशक र मलमूत्र खुलाउने गुणको हुन्छ । जीवकको अर्क शुक्रवर्धक, कफवर्धक, बलबर्धक, शीतल र सदा समान गुणको हुन्छ ।

## ऋषभ र महामेदा (मेदा ?) को अर्क

**ऋषभः पित्तदाहासृक्कासवातंक्षयापहः ।**
**महामेदोद्भवार्कस्तु वृषस्तन्यकफापहः ॥२०॥**

ऋषभको अर्कले पित्तविकार, डाह, रक्तविकार, खोकी, वातविकार र क्षयरोग नाश गर्दछ । मेदाको अर्क वीर्यवर्धक, दूधवर्धक र कफनाशक हुन्छ ।

## महामेदा र काकोलीको अर्क

**महामेदोद्भवः शीतो रक्तवातज्वरप्रणुत् ।**
**काकोल्याः प्रायशः शीतः पित्तशोथज्वरापहः ॥२१॥**

महामेदाको अर्क शीतल, वातरक्त नाशक र जरोनाशक हुन्छ । काकोलीको अर्क पनि प्रायः ठण्डी गर्ने, पित्तविकार नाशक, सुन्निएको रोग नाश गर्ने र जरोनाशक हुन्छ ।

## क्षीरकाकोलि र ऋद्धिको अर्क

**क्षीरकाकोलिकाजातो बृंहणो दाहवातहा ।**
**ऋद्ध्या बलस्त्रिदोषघ्नो रक्तपित्तविनाशनः ॥२२॥**

क्षीरकाकोलीको अर्क पौष्टिक, डाहनाशक र वातविकार नाशक हुन्छ । ऋद्धिको अर्क बलवर्धक, त्रिदोष नाशक र रक्तपित्त नाशक हुन्छ ।



## वृद्धि र मधुपर्णीको अर्क

**वृद्ध्या गर्भप्रदः शीतः क्षतकासक्षयापहः ।**
**मधुपर्ण्याः केशकरः स्वर्यः पित्तानिलास्रजित् ॥२३॥**

वृद्धिको अर्कमा गर्भधारण गराउने, शीतल, घाउभर्ने र क्षयरोग नाश गर्ने गुण हुन्छ । मधुपर्णीको अर्कले कपाल बढाउँदछ, स्वर खुलाउँदछ, पित्तविकार-वातविकार र रक्तविकार नाश गर्दछ ।

## जेठीमधु र सिँदुरे वृक्षको अर्क

**मधुयष्ट्या विषच्छर्दितृष्णाग्लानिक्षायापहः ।**
**कम्पिलस्य विरेकी स्यान्मेहानाह विकारनुत् ॥२४॥**

जेठीमधुको अर्कले विषविकार, वाकवाकी, तिर्खा, ग्लानि र क्षयरोग नाश गर्दछ । सिँदुरे वृक्षको अर्कले दिसा लगाउने तथा प्रमेह र आनाहका विकार नाश गर्ने गर्दछ ।

## राजवृक्षको अर्क

**आरग्वधस्य पित्तास्रवातोदावर्तशूलनुत् ।**
**कण्डूमेहश्वासकास कृमिकुष्ठज्वरापहः ॥२५॥**

राजवृक्षको अर्कले पित्तविकार, रक्तविकार, वातविकार, उदावर्त र शूल नाश गर्दछ । साथै यसले शरीर चिलाउने रोग, प्रमेह, दम, खोकी, किरा, कुष्ठ र जरो पनि नाश गर्दछ ।

## चिराइतो र इन्द्रजौको अर्क

**भूनिम्बस्य तृषाकुष्ठ ज्वरव्रणकृमि प्रणुत् ।**

**भद्रायार्कस्तु पित्तासृक्कृमिवीसर्पिकुष्ठनुत् ॥२६॥**

चिराइतोको अर्कले तिर्खा, कुष्ठ, जरो, खटिरा र किरा नाश गर्दछ । इन्द्रजौको अर्कले पित्तविकार, रक्तविकार, किरा, विसर्प रोग र कुष्ठ नाश गर्दछ ।

## मैदल र गाईतिहारेको अर्क

**मदनोत्यः छर्दिनेत्रचातुर्थिक ज्वरादिहृत् ।**
**रास्नोद्भवः समीराद्य(स्र)वातशूलोदरापहः ॥२७॥**

मैदलको अर्कले वाकवाकी, आँखाका रोग र चातुर्थिक जरो नाश गर्दछ । गाईतिहारेको अर्कले वातविकार, रक्तविकार, वायूशूल र पेटका रोग नाश गर्दछ ।

## फ्याक्सेकन्द र अमारोको अर्क

**नागभिन्नोद्भवो भोगिलूताद्याखु विकारनुत् ।**
**माचिकाजस्तु पित्तास्रपक्वातीसारहा लघुः ॥२८॥**

फ्याक्सेकन्दको अर्कले सर्प, माकुरो, मुसो आदिको विष नाश गर्दछ । अमारोको अर्कले पित्तविकार, रक्तविकार तथा गाढा पहेँलो र पातलो दिसा हुने रोग निको पार्दछ । यो पचाउन हलुका हुन्छ ।

## चाभो र मालकागुनुको अर्क

**तेजस्विन्याः श्वासकासकफहृद्वह्निदीपनः ।**
**ज्योतिष्मत्या वान्तिकरो बह्निबुद्धि स्मृति प्रदः ॥२९॥**



चाभोको अर्कले दम, खोकी र कफ नाश गर्नुको साथै जठराग्निलाई बाल्दछ । मालकागुनुको अर्कले बान्ता गराउँदछ तथा जठराग्नि, बुद्धि र स्मरणशक्ति बढाउँदछ ।

## कूट र एक किसिमको कूटको जरा (पुष्कर) को अर्क

**कुष्ठस्य हन्ति वातास्रकासकुष्ठमरुत्कफान् ।**
**पौष्करस्यारुचिश्वासान् विशेषत्पार्श्वशूलनुत् ॥३०॥**

कूटको अर्कले वातविकार, रक्तविकार, खोकी, कुष्ठ र वातजन्य कफरोग नाश गर्दछ । पुष्करको अर्कले अरुचि, दम र विशेषगरी कोखाको शूल नाश गर्दछ ।

## चाँप र गुनाभा वा कर्कटशृङ्गीको अर्क

**हेमाह्वाया एष वान्तिकरकण्डूविनाशनः ।**
**शृङ्ग्या हरेदूर्ध्ववात हिक्कातृष्णास्वरक्षयान्॥३१॥**

चाँपको अर्क बान्ताकारक र शरीर चिलाउने रोग नाशक हुन्छ । कर्कटशृङ्गीको अर्कले ऊर्ध्ववात, बाडुली, तिर्खा र घाँटी बसेको ठिक गर्दछ ।

## काफल र भारङ्गी (भार्ङ्गी) को अर्क

**कट्फलोत्थः श्वासकासप्रमेहार्शोरुचीर्हरेत् ।**
**भाङ्गर्या हरेत्कफश्वासपीनसज्वरमारुतान्॥३२॥**

काफलको अर्कले दम, खोकी, प्रमेह, अल्काइ र अरुची नाश गर्दछ । भारङ्गीको अर्कले कफविकार, दम, पिनास, जरो र वातविकार नाश गर्दछ ।



## पाषाणभेद् र सुसुमको अर्क

**पााषाणभेदजो योनिरोगकृच्छ्राश्मगुल्महा ।**
**कौसुम्भजो वर्णकरो रक्तपित्तकफापहः ॥३३॥**

पाषाणभेद्को अर्कले योनिरोग, कृच्छ्र, पत्थरी र गुल्म नाश गर्दछ । कुसुमको अर्कले कान्ति बढाउँदछ, रक्तपित्त र कफविकार नाश गर्दछ ।

## धयैँरो र मजिठोको अर्क

**धातकीजस्तृषा शीतविषकृमिविसर्पजित् ।**
**माञ्जिष्ठजो विषश्लेष्मरक्तातिसारकुष्ठहा ॥३४॥**

धयैँरोको फूलको अर्कले तिर्खा, चिसो लागेको, विषको असर, किरा र विसर्प रोगलाई जित्दछ । मजिठोको अर्कले विषविकार, कफविकार, रक्तातिसार र कुष्ठरोग निको पार्दछ ।

## लाहा र हलेदोको अर्क

**लाक्षाजः कृमिविसर्पव्रणोरःक्षतकुष्ठहा ।**
**हरिद्राया मेहशोधत्वग्दोषव्रणपाण्डुनुत् ॥३५॥**

लाहाको अर्कले किरा, विसर्प रोग, खटिरा, उरक्षत रोग र कुष्ठरोग निको पार्दछ । हलेदोको अर्कले प्रमेह, शरीर सुन्निएको, छालाका विकार, घाउखटिरा र पाण्डुरोग ठिक गर्दछ ।

## वन हलेदो र कपूरको अर्क

**आरण्यक हरिद्रायाः कुष्ठवातास्रनाशनः ।**

**कर्पूरकहरिद्रायाः सर्वकण्डू विनाशनः ॥३६॥**

वनहलेदोको अर्कले कुष्ठरोग, वातविकार र रक्तविकार नाश गर्दछ । कपूरको अर्कले सबै किसिमका चिलाउने रोग नाश गर्दछ ।

## चुत्रो र रसाञ्जनको अर्क

**दार्व्या विशेषतो लेपान्नेत्रकर्णस्य रोगनुत् ।**
**रसाञ्जनोद्भवो नेत्रविकारव्रणदोषहृत् ॥३७॥**

चुत्रोको अर्क दल्नाले विशेषगरी आँखा र कानका रोग नाश हुन्छन् । रसाञ्जनको अर्कले आँखाका विकार र घाउखटिराका विकार नाश गर्दछ ।

## बकुची र ताप्रेको अर्क

**बाकुच्याः कृमिविष्टम्भपाण्डुशोधकफापहः ।**
**प्रपुन्नाटस्य हन्त्येव कण्डूदद्रुविषानिलान् ॥३८॥**

बकुचीको अर्कले किरा, कब्जियत, पाण्डुरोग, शरीर सुन्निएको र कफविकार नाश गर्दछ । ताप्रेको अर्कले शरीर चिलाउने, दाद, विषको असर र वातविकार नाश गर्दछ ।

## ठूलोपाते अमिले लहरो वा इन्द्रायणी लहरो र लोधको अर्क

**विषजोदीप्ति कृच्चार्कः कफपित्तातिसारहा ।**
**लोध्रजः शीतलो ग्राही चक्षुष्यः कफपित्तनुत् ॥३९॥**

ठूलोपाते अमिले लहरो वा इन्द्रायणी लहराको अर्कले जठराग्नि बाल्दछ तथा कफविकार, पित्तविकार र आउँ निको पार्दछ । लोधको अर्कले शीतल गर्दछ, यो ग्राही हुन्छ, आँखाका लागि लाभदायक हुन्छ र कफविकार पित्तविकार नाश गर्दछ ।



## घ्याम्पेतरुल र भलायोको अर्क

**बृहत्पत्रोद्भवो नेत्रोदरातीसारशोथहृत् ।**
**भल्लातकोद्भवो हन्याज्वरोदर कृमिव्रणान् ॥४०॥**

घ्याम्पेतरुलको अर्कले आँखाका रोग, पेटका रोग, आउँ र शरीर सुन्नि रोग ठिक गर्दछ । भलायोको अर्कले जरो, पेटका किरा र घाउखटिरा नाश गर्दछ ।

## गुर्जो र बेलको अर्क

**गुडूच्या दीपनो ग्राही कासपाण्डुज्वरापहः ।**
**बैल्वः श्लेष्महरो बल्यो लघू रूक्षश्च पाचनः ॥४१॥**

गुर्जोको अर्कले जठराग्निलाई बाल्दछ, दम, खोकी, पाण्डुरोग र जरो ठिक गर्दछ । बेलको अर्कले कफविकार नाश गर्दछ, बल दिन्छ, पचाउन सहज हुन्छ, रुखो र पाचन हुन्छ ।

## खमारी र पानको अर्क

**गम्भारीजो भ्रमतृष्णाशूलाशों विषदाहनुत् ।**
**ताम्बूल्या मुखदौर्गन्ध्यमलवातश्रमापहः ॥४२॥**

खमारीको अर्कले भ्रम, तिर्खा, शूल, अल्काइ, विषविकार र डाह नाश गर्दछ । पानको अर्कले मुखको दुर्गन्ध, दिसा बन्द भएको, वातविकार र थकाई नाश गर्दछ ।



## पाडरी र अरणीको अर्क

**पाटल्याश्छर्दिशोथास्रत्रिदोषारुचिदाहहा ।**
**अग्निमन्थोद्भवः शोथकृमिपाण्डुबलासनुत् ॥४३॥**

पाडरीको अर्कले वाकवाकी, शरीर सुन्निएको, रक्तविकार, त्रिदोष, अरुची र डाह नाश गर्दछ । अरणीको अर्कले शरीर सुन्निएको, किरा, पाण्डुरोग र कफविकार नाश गर्दछ ।

## टटेलो र साकिनुको अर्क

**स्योनकाजस्तु गुल्मार्शकृमिहृद्रुचिदीप्तिकृत् ।**
**शालिपर्ण्याः क्षतकृमिज्वरछर्द्यतिसारहा ॥४४॥**

टटेलोको अर्कले गुल्म, अल्काइ, किरा र दाद नाश गर्दछ र रुची बढाउँदछ । साकिनुको अर्कले क्षतरोग, किरा, जरो, वाकवाकी र आउँ नाश गर्दछ ।

## चाल्ने सिस्नु र सानो सेतोबिहीको अर्क

**पृष्ठपर्ण्या ज्वरश्वासरक्तातीसारदाहजित् ।**
**वार्ताक्यर्को ज्वरालस्यमलारोचकशूलहा ॥४५॥**

चाल्ने सिस्नुको अर्कले जरो, दम, रक्तातिसार र डाह नाश गर्दछ । सानो सेतो बिहीको अर्कले जरो, आलस्य, दिसा रोकिएको, अरुची र शूल नाश गर्दछ ।

## कण्टकारी र गोखुरको अर्क

**कण्टकार्य्या गर्भकरः पाचनः कफकासहा ।**

**गौक्षुरस्याश्मरीमेहकृच्छ्रहृद्रोगवातहा ॥४६॥**

कण्टकारीको अर्क गर्भ स्थापक, पाचन तथा कफविकार र खोकी नाशक हुन्छ । गोखुरको अर्कले पत्थरी, प्रमेह, कृच्छ्र, मुटुका रोग र वातविकार नाश गर्दछ ।

## जिरीको साग र वनमुगीको अर्क

**जीवन्त्याः श्वासहृन्नेत्रदोषत्रितयनाशनः ।**
**मुद्गपर्ण्याः शोधदाहग्रहण्यर्शोतिसारजित् ॥४७॥**

जिरीको सागको अर्कले दम, मुटुका रोग, आँखाका रोग र त्रिदोष नाश गर्दछ । वनमुगीको अर्कले शरीर सुन्निएको, डाह, कब्जियत, अल्काइ र आउँ ठिक गर्दछ ।

## वनमास र अरिडको अर्क

**माषपर्ण्याः शुक्रकरो वातपित्तज्वरास्रजित् ।**
**पञ्चाङ्गुलोद्भवः शूलशिरः पीडोदरापहः ॥४८॥**

वनमाषको अर्क शुक्रवर्धक तथा वात, पित्त, जरो र रगतका विकार नाशक हुन्छ । अरिडको अर्कले शूल, टाउकाका रोग र पेटका रोग ठिक गर्दछ ।

## एक जातको अरिड (हबुषा) र बाह्रमासे आँकको अर्क

**हबुषोत्थो वृद्धकासश्वासकुष्ठाममारुतान् ।**
**मन्दारजो वातकुष्ठकण्डूव्रणविषापहः ॥४९॥**

अरिड विशेषको अर्कले पुरानो खोकी, दम, कुष्ठ र आमवात निको पार्दछ । बाह्रमासे आँकको अर्कले वातविकार, कुष्ठ, शरीर चिलाउने रोग, घाउखटिरा र विषको असर ठिक गर्दछ ।



## आँक र धारे सिउँडीको अर्क

**अर्कार्कः प्लीहगुल्मार्शश्लेष्मोदरकृमीन् हरेत् ।**
**वज्रीलो लेपतो हन्याद्व्रणशोथोदरज्वरान् ॥५०॥**

आँकको अर्कले फियोका रोग, गुल्म, अल्काइ, कफविकार र किरा नाश गर्दछ । सिउँडीको अर्क दल्नाले घाउखटिरा, शरीर सुन्निएको, पेटका रोग र जरो नाश हुन्छ ।

## हात्तीकाने र हलहलेको अर्क

**सातलोत्थः कफानाहपित्तोदावर्तशोथहा ।**
**लाङ्गल्या लेपतो हन्याच्छोफार्शो व्रणरोगजान् ।।५१।।**

हात्तीकानेको अर्कले कफविकार, आनाह, पित्तविकार, उदावर्त र शरीर सुन्निएको निको पार्दछ । हलहलेको अर्क दल्नाले शरीर सुन्निएको, अल्काइ र घाउखटिरा निको हुन्छ ।

## कँडेल र चाण्डालकन्दको अर्क

**करवीरोद्भवो नेत्रकोपकुष्ठव्रणापहः ।**
**चाण्डालोत्थस्तु विषवद्भक्षणे लेपने महत् ।।५२।।**

कँडेलको अर्कले आँखाका रोग, कुष्ठ र घाएखटिरा ठिक गर्दछ । चाण्डालकन्दको अर्क खानु विषखानु सरह हुन्छ । दल्दा भने अनेक किसिमका रोग निको पार्दछ ।



## धतुरो र असुरोको अर्क

**धत्तूरजो हरेल्लिख्यायूकाकृमिविषादिकम् ।**
**वासोद्भवो ज्वरच्छर्दिमेहकुष्ठक्षायापहः ।।५३।।**

धतुरोको अर्कले लिखा, जुम्रा, किरा र तिनका विषलाई नाश गर्दछ । असुरोको अर्कले जरो, वाकवाकी, प्रमेह, कुष्ठ र क्षयरोग नाश गर्दछ ।

## पित्तपापडा र नीमको अर्क

**पर्पटो हन्ति पित्तास्र भ्रमतृष्णाकफज्वरान् ।**
**निम्बजः श्रमतृट्कासज्वरारुचि कृमिप्रणुत् ।।५४।।**

पित्तपापडाको अर्कले रक्तपित्त, भ्रम, तिर्खा, कफविकार र जरो ठिक गर्दछ । नीमको अर्कले थकाइ, तिर्खा, खोकी, जरो, अरुची र किरा नाश गर्दछ ।

## बकाइनु र देवदारको अर्क

**महानिम्बोद्भवो गुल्ममूषिकाविषनाशनः ।**
**पारिभद्रोऽनिलश्लेष्मशोथमेदकृमिप्रणुत् ।।५५।।**

बकाइनुको अर्कले गुल्मरोग र मुसाको विषको असर नाश गर्दछ । देवदारको अर्कले वातविकार, कफविकार, शरीर सुन्निएको, बोसोका रोग र किरा नाश गर्दछ ।

## कोइरालोको रुख र कोइरालोको फूलको अर्क

**काञ्चनारो गण्डमालागुदभ्रंशव्रणापहः ।**

**कोविदारस्तु पित्तास्रप्रदरक्षयकासहा ।।५६।।**

कोइरालोको रुखको अर्कले गण्डमाला, गुदभ्रंश र घाउखटिरा निको पार्दछ । कोइरालोको फूलको अर्कले रक्तपित्त, प्रदर, क्षयरोग र खोकी ठिक गर्दछ ।

## सैजन  र रातो सैजनको अर्क

**सौभाञ्जनार्को रुचिकृच्छुक्रलो ग्राहिदीपनः ।**
**मधुशिग्रूद्भवो हन्याद्विद्रधिश्वयथुकृमीन् ।।५७।।**

सैजनको अर्क रुचि र शुक्र वर्धक, ग्राही र दीपन गुणको हुन्छ । रातो सैजनको अर्कले विद्रधि, शरीर सुन्निएको र किरा नाश गर्दछ ।

## सेतो सैजन र अपराजिता (गिरिकर्णी) को अर्क

**शिग्रुजो विषहृन्नेत्र्यो नस्येनाक्षिशिरोर्तिहा ।**
**गिरिकन्या (कर्ण्या) कुष्ठशूलशोथव्रणविषापहः ॥५८॥**

सेतो सैजनको अर्कले विषको असर नाश गर्दछ, आँखाका लागि फाइदाजनक हुन्छ र नस लिँदा टाउको दुखेको निको हुन्छ । अपराजिताको अर्कले कुष्ठरोग, शूल, शरीर सुन्निएको, घाउखटिरा र विषको असर नाश गर्दछ ।

## सेतो फूल्ने सिमाली र सामान्य सिमालीको अर्क

**सिन्दुवारोद्भवो हन्ति शूलशोथाममारुतान् ।**
**निर्गुण्डचर्को हरेज्जन्तुव्रणकुष्ठारुचिं लघुः ॥५९॥**



सेतो फुल्ने सिमालीको अर्कले शूल, शरीर सुन्निएको, आमविकार र वातविकार नाश गर्दछ । सामान्य सिमालीको अर्कले किरा, घाउखटिरा, कुष्ठ र अरुचि नाश गर्दछ । यो पचाउन हलुका हुन्छ ।

## ठूलो कुरो (कुटज) र कुबेराक्षको अर्क

**कोटजोदीपनः शीतः कफतृष्णामकुष्ठजित् ।**
**करञ्ज कफगुल्मार्शो व्रणकृमिव्रणापहः ॥६०॥**

ठूलो कुरोका अर्कले जठराग्निलाई बाल्दछ, शीतल गर्दछ तथा कफविकार, तिर्खा र कुष्ठ नाश गर्दछ । कुबेराक्षको अर्कले कफविकार, गुल्म, अल्काइ, घाउखटिराका किरा र पेटका किरा नाश गर्दछ ।

## गुलियो कुबेराक्ष र सामान्य कुबेराक्षको अर्क

**घृतकारञ्जको भेदी वातार्शः कृमिकुष्ठजित् ।**
**करञ्ज्यो वमिवातार्श कृमिकुष्ठप्रमेहजित् ॥६१॥**

गुलियो कुबेराक्षले दिसा खुलाउँदछ तथा वातविकार, अल्काइ, किरा र कुष्ठ नाश गर्दछ । साधारण कुबेराक्षको अर्कले वाकवाकी, वातविकार, अल्काइ, किरा, कुष्ठ र प्रमेह नाश गर्दछ ।

## विशेष खालको रातीगेडी र रातीगेडीको अर्क

**उच्चटार्कः केशकरो वातपित्तज्वरापहः ।**
**गुञ्जायाश्च हरेच्छ्वासमुखशोषभ्रमिज्वरान् ॥६२॥**



रातीगेडी विशेषको अर्कले कपाल बढाउँदछ तथा वातजरो र पित्त जरो नाश गर्दछ । रातीगेडीको अर्कले दम, मुख सुन्निएको, भ्रम र जरो नाश गर्दछ ।

## काउछो र ऐँशेलुको अर्क

**कपिकच्छूद्भवो वृष्यो बृंहणो वाजिकर्मकृत् ।**
**मांसरोहिण्युद्भवस्तु वृष्यो दोषत्रायपहः ॥६३॥**

काउसोको अर्क वीर्यवर्धक, पौष्टिक र यौनशक्ति वर्धक हुन्छ । ऐँशेलुको अर्क पनि वीर्यवर्धक र त्रिदोष नाशक हुन्छ ।

## बेथे विशेष (चिल्ली) र कण्टकारीको अर्क

**चिह्लजः कुरुते पुष्टिं तत्फलं मारयेज्जनान् ।**
**कण्टकार्या दीपनश्च श्लेष्मशोथहरोऽरुचिः ॥६४॥**

बेथे विशेषको अर्कले पुष्टि दिन्छ तर यसको फल खानाले मानिस मर्दछ । कण्टकारीको अर्क दीपन हुन्छ । यसले कफविकार, शरीर सुन्निएको र अरुचि नाश गर्दछ ।

## बेत र पानीबेतको अर्क

**वेतसो हरते दाहं शोथार्शोयोनिरुग्व्रणान् ।**
**जलवेतसजो ग्राही शीतो वातप्रकोपनः ॥६५॥**

बेतको अर्कले डाह, शरीर सुन्निएको, अल्काइ, योनिरोग र घाउखटिरा निको पार्दछ । पानीबेतको अर्कले कब्जियत, शीतल र वातविकारमा वृद्धि गर्दछ ।



## भुइँबेत र अम्फीफलको अर्क

**हिज्जलार्कस्तु हरत चराचरविषं स्फुटम् ।**
**अङ्कोटकस्तु शूलामशोथग्रहविषापहः ॥६६॥**

भुइँबेतको अर्कले स्थावर र जङ्गम दुबै विषको असर नाश गर्दछ । अम्पीफलको अर्कले शूल, आमरोग, शरीर सुन्निएको, ग्रहरोग र विषको असर नाश गर्दछ ।

## बलु र ठूलो बलुको अर्क

**बलार्को ग्राहिवातास्रपित्तास्रक्षतनाशनः ।**
**अतिपूर्वबलार्कस्तु मूत्रातीसारनाशनः ॥६७॥**

बलुको अर्क ग्राही हुन्छ । यसले वातरक्त, पित्तरक्त र घाउ नाश गर्दछ । ठूलो बलुको अर्कले धेरै पिसाब हुने रोग नाश गर्दछ ।

## सहदेवा र गुनालुको अर्क

**महाबलार्को हरते कृच्छ्रघातानुलोमनः ।**
**नागपूर्वबलार्कश्च मूर्च्छामोहहरः परः ॥६८॥**

सहदेवाको अर्कले कृच्छ्र नाश गर्दछ नपाकेको वात, पित्त र कफलाई पकाएर कब्जियत हटाउँदछ (अनुलोमन) । गुनालुको अर्कले बेहोसी र मोह नाश गर्दछ ।

## लक्ष्मणकन्द र पहेँलो जिरीसागको अर्क

**लक्ष्मणार्कस्य सेवेद्वै बन्ध्याऽपि लभते सुतम् ।**

**स्वर्णवल्याः शिरः पीडां त्रिदोषान् हन्ति दुग्धहा ॥६९॥**

लक्ष्मणकन्दको अर्कले निसन्तान स्त्री पनि सन्तानवती (पुत्रवती) हुन्छे । पहेँलो जिरीसागको अर्कले टाउको दुखेको र त्रिदोष नाश गर्दछ तथा दूध सुकाउँदछ ।

व्याख्या : लक्ष्मणकन्द-अँडिरका जस्ता पात हुने, सेता फूल फुल्ने, हरियो र सेतो रङ्ग मिसिएका लाम्चा फल फल्ने एक जातको लहरो वा त्यसैको ध्वाँसे रङ्गको ठूलो कन्द ( नेपाली बृहद् शब्दकोश) ।

## कपास र बाँसको अर्क

**कार्पासार्कः शिरः शङ्खकर्णरोगान्विनाशयेत् ।**
**वंशजः कफपित्तघ्नः कुष्ठास्रव्रणशोथजित् ॥७०॥**

कपासको अर्कले टाउको, कञ्चट र कानका रोग निको पार्दछ । बाँसको अर्कले कफविकार, पित्तविकार, कुष्ठ, रक्तविकार, घाउखटिरा र शरीर सुन्निएको ठिक गर्दछ ।

## नर्कट र जेठीमधुको अर्क

**नालार्को बस्तियोन्यार्ति दाहपित्तविसर्पहृत् ।**
**यष्ट्या जयेज्ज्वरच्छर्दि कुष्ठातीसारहृद्रुजः ॥७१॥**

नर्कटको अर्कले बस्तीका रोग, योनीरोग, डाह र पित्तजन्य विसर्प नाश गर्दछ । जेठीमधुको अर्कले जरो, वाकवाकी, कुष्ठ, आउँ र मुटुका रोग निको पार्दछ ।

## सेतो निशोध र रातो साकिनुको अर्क

**श्वेतत्रिवृद्भवोऽप्यर्को पित्तशोथोदरापहः ।**

**शरपुङ्खोद्भवः प्लीहान् गुल्मव्रणविषापहः ॥७२॥**

सेतो निशोधको अर्कले पित्तजन्य सुन्निने रोग र पेटका रोग निको पार्दछ । रातो साकिनुको अर्कले फियोका रोग, गुल्म, घाउखटिरा र विषको असर नाश गर्दछ ।

## सिस्नु र मुण्डी झारको अर्क

**जवासजो मदभ्रान्तिपित्तासृक्कुष्ठकासजित् ।**
**मुण्डीजोऽत्यन्त बलकृत्प्लीह मेहानिलार्तिजित् ॥७३॥**

सिस्नुको अर्कले नशा, भ्रम, रक्तपित्त, कुष्ठ र खोकी निको पार्दछ । मुण्डी झारको अर्कले अति नै बल दिन्छ, फियोका रोग, प्रमेह र वातविकार नाश गर्दछ ।

## दतिवन र रातो दतिवनको अर्क

**अपामार्गोद्भवच्छर्दि कफमेदोनिलापहः ।**
**आरक्तापामार्गभवो धातुस्तम्भनकारकः ॥७४॥**

दतिवनको अर्कले वाकवाकी, कफविकार, बोसोविकार र वातविकार नाश गर्दछ । रातो दतिवनको अर्कले शरीरका धातुलाई रोक्दछ ।

## तालमखाना र हडच्चूरको अर्क

**कोकिलाक्षिभवः शघ्रिं सेकाच्छोथान्निवारयत् ।**
**अस्थिसंहारकायास्तु भग्नसन्धान कृच्छिवे ॥७५॥**

तालमखानाको अर्क पिउनाले तुरुन्तै सुन्निएको बस्दछ । हडच्चूरको अर्क टुटेफुटेका हाड जोड्ने जस्ता कल्याणदायी काम गर्दछ ।



## रातो पुनर्नवा र बिरीको अर्क

**पुनर्नवाया रक्ताया ग्राही पित्तास्रनाशनः ।**
**प्रसारिण्या वातहरो वृष्यः सन्धानकृत्सरः ॥७६॥**

रातो पुनर्नवाको अर्क ग्राही हुन्छ तर रक्तपित्त नाश गर्दछ । बिरीको अर्क वातविकार नाशक, वीर्यवर्धक, मिलाउने र दिसापिसाब खुलाउने गुणको हुन्छ ।

## घिउकुमारी र सेतो पुनर्नवाको अर्क

**कुमारिकाया ग्रन्थ्यग्निदग्धविस्फोटकाञ्जयेत् ।**
**पुनर्नवायाः श्वेतायाः सर्वनेत्रामयापहः ॥७७॥**

घिउकुमारीको अर्कले गाँठागुँठी र आगोले पोलेको घाउ ठिक गर्दछ । सेतो पुनर्नवाको अर्कले आँखाका सबै प्रकारका रोग निको पार्दछ ।

## खनायो र भृङ्गिराजको अर्क

**सारिवाया वह्निमान्ध्यकासामविषनाशनः ।**
**भृङ्गिराजस्य जातोऽर्कः केश्यो रुच्यः शिरोऽर्तिहृत् ।।७८।।**

खनायाको अर्कले मन्दाग्नि, खोकी, आमविकार र विषविकार नाश गर्दछ । भृङ्गिराजको अर्क कपालका लागि फाइदाजनक हुन्छ । यसले टाउकाको पीडा नाश गर्दछ ।

## शणपुष्पी र मुडिलोको अर्क

**शणपुष्पीलतायास्तु अर्कः पित्तकफापहः ।**

**त्रायन्त्यर्कः शूलविषविलेपी ज्वरनाशनः ।।७९।।**

शणपुष्पीको अर्कले पित्तविकार र कफविकार नाश गर्दछ । मुडिलोको अर्कले शूल, विषविकार र जरो नाश गर्दछ ।

## मरुइ लहरो र कवईको अर्क

**मूर्वाया मेहरोगघ्नः कण्डूकुष्ठज्वरापहः ।**
**काकमाच्या नेत्रहितः छर्दिहृद्रोगनाशनः ।।८०।।**

मरुइ लहराको अर्कले प्रमेह, शरीर चिलाउने रोग, कुष्ठ र जरो नाश गर्दछ । कवईको अर्क आँखाका लागि लाभदायक हुन्छ । यसले वाकवाकी र मुटुका रोग नाश गर्दछ ।

## कौवाठोरी र काकजङ्घाको अर्क

**काकनासाभवो वामी शोथार्शः श्वित्रकुष्ठनुत् ।**
**काकजङ्घोद्भवो हन्याज्ज्वरकण्डूविषकृमीन् ॥८१॥**

कौवाठोरीको अर्कले बान्ता गराउँदछ, सुन्निएको ठिक गर्दछ र सेतोकुष्ठ निको पार्दछ । काकजङ्घाको अर्कले  जरो, शरीर चिलाउने रोग, विषविकार र किरा नाश गर्दछ ।

## कुकुरडाइनु र मेषशृङ्गीको अर्क

**नागिन्यस्तु हरेच्छूलयोनिदोषवामकृमीन् ।**
**मेषशृङ्ग्याः श्वासकासव्रणश्लेष्माक्षिशूलहा ॥८२॥**

कुकुरडाइनुको अर्कले शूल, योनिरोग, वाकवाकी र किरा नाश गर्दछ । मेषशृङ्गीको अर्कले दम, खोकी, घाउखटिरा, कफविकार र आँखको शूल नाश गर्दछ ।



## लज्जावती र बकुचीको अर्क

**हंसपद्या हन्ति लूतां भूतरक्तविषव्रणान् ।**
**सोमवल्यास्त्रिदोषघ्नः क्षीरकृच्च रसायनः ॥८३॥**

लज्जावतीको अर्कले मुसाको विष, भूतविकार, रक्तविकार र विषविकार तथा घाउखटिरा निको पार्दछ । बकुचीको अर्कले त्रिदोष नाश गर्दछ, दूध बढाउँदछ र रसायनी हुन्छ ।

## आकाशवेली र बढेमूल (?) वा भोटे खयरको अर्क

**आकाशवल्याः शीतोऽर्कः पित्तश्लेष्मामनाशनः ।**
**पातालगरुडीजार्को वृष्यः पवननाशनः ॥८४॥**

आकाशवेलीको अर्कले शीतल गर्दछ । यसले पित्त, कफ र आम विकार नाश गर्दछ । पातालगरुडीको अर्कले वर्य बढाउँदछ र वातविकार नाश गर्दछ ।

## तुलसीको बोट (वा ऐँफेरु) र बाबरीको अर्क

**वृन्दावृक्षोद्भवोऽर्कस्तु विषरक्षो व्रणापहः ।**
**वटपत्री भवश्चोष्णो योनिमूत्रगदापहः ॥८५॥**

तुलसीको बोटको अर्कले विषको असर र घाउखटिरा निको पार्दछ । बाबरीको अर्कले गर्मी गर्दछ । यसले योनिरोग र मूत्ररोग नाश गर्दछ ।

## जिम्बु र बाँसपाते झारको अर्क

**हिङ्गुपत्र्या विबन्धार्शः श्लेष्मगुल्मानिलापहः ।**

**वंशपत्र्या पाचनोष्णो हृद्बस्तिगदसङ्घहृत् ॥८६॥**

जिम्बुको अर्कले कब्जियत, अल्काइ, कफविकार, गुल्म र वातविकार नाश गर्दछ । बाँसपाते झारको अर्क पाचन र उष्णवीर्यको हुन्छ । यसले मुटु र बस्तिका रोगसमूह नाश गर्दछ ।

## ब्राह्मी विशेष र फ्याक्सेकन्द विशेषको अर्क

**मत्स्याक्ष्यर्को ग्राहिशीतकुष्ठपित्तकफास्रजित् ।**
**सर्पाक्ष्या रोपणः सर्पवृश्चिकोद्भवदंशहृत् ॥८७॥**

ब्राह्मी विशेषको अर्कले दिसा कस्दछ, शीतल गर्दछ तथा कुष्ठ, पित्तविकार, कफविकार र रक्तविकार नाश गर्दछ ।

## अपराजिताको फूल र आँकको फूलको अर्क

**शङ्खपुष्प्या विषहरः स्मृतिकान्तिबलाग्निदः ।**
**अर्कपुष्प्याः कृमिश्लेष्ममेहपित्तविकारनुत् ॥८८॥**

अपराजिताको फूलको अर्कले विषविकार नाश गर्दछ, स्मरणशक्ति- कान्ति, बल र जठराग्नि बढाउँदछ । आँकको फूलको अर्कले किरा, कफविकार, प्रमेह र पित्तविकार नाश गर्दछ ।

## लज्जावती र काँढा नहुने लज्जावती झारको अर्क

**लज्जालुकाया भगरुग्रक्तपित्तातिसारहृत् ।**
**अलम्बुषासम्भवाऽर्कः कृमिपित्तकफापहः ॥८९॥**



लज्जावती झारको अर्कले योनिरोग, रक्तपित्त र आउँ निको पार्दछ । काँडे लज्जावतीको अर्कले किरा, पित्तविकार र कफविकार नाश गर्दछ ।

## रुदिलो र  वनपर्बलको अर्क

**दुग्धिकायाः कफकरो वृष्यस्तम्भी कृमिप्रणुत् ।**
**भूमिवल्ल्याः कासतृष्णाकफपाण्डुहृत्तापहः ॥९०॥**

रुदिलोको अर्कले कफविकार बढाउँदछ । यो वीर्यवर्धक, पक्षघात जन्माउने र किरानाशक हुन्छ । वनपर्बलको अर्कले खोकी, तिर्खा, कफविकार, पाण्डु र मुटुरोग नाश गर्दछ ।

## ब्राह्मी र ब्रह्ममण्डूकी (घोडताप्रे, मजिठो, भारङ्गी) को अर्क

**ब्राह्म्या बुद्धिप्रदश्चार्कः षण्मासाभ्यासतः कविः ।**
**ब्रह्ममण्डुकिजः पाण्डुविषशोथज्वरान्हरेत् ॥९१॥**

द्रोणपुष्प (सेतो गुम्पाती) र सूर्यमुखी (पुष्पवृक्षविशेष : आयुर्वेदीय महाकोश, अजम्बरी : नेपाली बृहद् शब्दकोश, तारामण्डल (सनफ्लावर ?) को अर्क

## द्रोणपुष्प र सूर्यमुखीको अर्क

**द्रोणपुष्प्या ज्वरश्वासकामलाशोथजन्तुजित् ।**
**सूर्यमुख्या हरेत्स्फोटयोनिरुधकृमिपाण्डुताम् ॥९२॥**

सेतो गुम्पातीको अर्कले जरो, खोकी, कमलपित्त, शरीर सुन्निएको र किरा नाश गर्दछ । सूर्यमुखीको अर्कले फोका वा खटिरा, योनिका रोग, किरा र पाण्डु रोग नाश गर्दछ ।



## फल नहुने चट्टेल (वन्ध्याकर्कोटिकी) र वन पर्बल विशेष (मार्कण्डिका) को अर्क

**वन्ध्याकर्कोटकीजातः सर्पदर्पव्रणापहः ।**
**मार्कण्डिकाया दुर्यन्धिविषगुल्मोदरापहः ॥९३॥**

फल नहुने चट्टेलको अर्कले सर्पले डसेको घाउ निको हुन्छ । वन पर्बल विशेषको अर्कले दुर्गन्ध, विषविकार, गुल्म र पेटका रोग निको हुन्छ ।

## भुसे वनतोरियाँ (देवदाली) र धतुरोको अर्क

**देवदाल्याः शूलगुल्मश्लेष्माशोवातजित्परम् ।**
**धत्तूरजो ग्राहि हिमोवह्निकृद्व्रणदाहहृत् ॥९४॥**

भुसे वनतोरियाँको अर्कले शूल, गुल्म, कफविकार, अल्काइ र वातविकार नाश गर्दछ । धतुरोको अर्क ग्राही हुन्छ । शीतल गर्दछ । जठराग्नि बाल्दछ । घाउखटिरा र डाह निको पार्दछ ।

## गाइजिब्रे भार र नागपुष्पी (तीतेपाती, कुकुरडाइनो) को अर्क

**गोजिह्वाया मेहकासव्रणसारज्वरापहः ।**
**नागपुष्प्या सर्वविषसर्वग्रह विनाशनः ॥९५॥**

गाईजिब्रे भारको अर्कले प्रमेह, खोकी, घाउखटिरा, आउँ र जरो नाश गर्दछ । नागपुष्पीको अर्कले सबै प्रकारका विष र सबै ग्रहदोष नाश गर्दछ ।

## वेल्लन्तरु ( वेल्लन्तरी, वरबेल ?) र छिउँके वा छिउँकी भार (छिक्कनी) को अर्क



**वेल्लन्तरोर्मूत्राघाताश्मरी योन्यनिलार्तिजित् ।**
**छिक्कन्या वह्निरुचिकृदर्शः कुष्ठकृमिप्रणुत् ॥९६॥**

वरबेलको अर्कले मूत्राघात, पत्थरी, योनिरोग र वातविकार नाश गर्दछ । छिउँके भारको अर्कले जठराग्नि बाल्दछ, रुची बढाउँदछ तथा अल्काइ, कुष्ठ र किरा नाश गर्दछ ।

## कुकुरमुत्ता वा कुकुरौंधा भार (ककुन्दर, कौकुन्दर) र फणिर वा धन्वन्तरी (सुदर्शन) को अर्क

**कौकुन्दरो ज्वरं रक्तमुख शोषकफं हरेत् ।**
**सुदर्शनार्कश्चात्युष्णः कफास्रं वातरोगजित् ॥९७॥**

कुकुरमुत्ताको अर्कले जरो, रक्तविकार, मुख सुन्निएको र कफविकार ठिक गर्दछ । फणिरको अर्कले गर्मी गर्दछ तथा कफविकार, रक्तविकार र वातविकार नाश गर्दछ ।

## मुग्रेलो वा अजयपाल (तरुणी) र वान्तितृट् (वान्तिहृत्?, मैनफल) को अर्क

**तरुण्यर्कः सरः शीतस्तुवरः श्रमदाह हा ।**
**वान्तितृट्पित्तरोगघ्नो मुखरोग विनाशनः ॥९८॥**

तरुणीको अर्कले शीतल गर्दछ, कब्जियत बढाउँदछ, थकाइ र डाह नाश गर्दछ । मैनफलको अर्कले पित्तविकार र मुखका रोग नाश गर्दछ ।

## अलैंची र सुकुमेलको अर्क

**एलार्कः कटुकः पाके रसे तिक्तोऽग्निकृल्लघुः ।**
**सूक्ष्मैलार्कः कफं हन्ति मूत्रकृच्छ्रं विशेषतः ॥९९॥**

अलैंचीको अर्क पचेपछि पिरो हुन्छ, रसमा तितो हुन्छ, पाचक अग्नि बढाउँदछ र पचाउन हलुका हुन्छ । सुकुमेलको अर्कले कफविकार र विशेष गरी मूत्रकृच्छ्र निको पार्दछ ।



## सेतो कण्टकारी र केतकी फूलको अर्क

**कण्टकार्य्या गर्भकरः पाचनः कफकासहृत् ।**
**केतक्याः पित्तदाहघ्नश्चक्षुष्योन्मादहृत्सराः ॥१००॥**

सेतो कण्टकारीको अर्क गर्भ कारक, पाचन, कफविकार नाशक र खोकी नाशक हुन्छ । केतकीको फूलको अकर्ले पित्त-डाह नाश गर्दछ, आँखाका लागि लाभदायक हुन्छ, उन्माद ठिक गर्दछ र दिसा लगाउँदछ ।

इति श्रीरावणविरचिते अर्कप्रकाशे तृतीयं शतकम्

रावण लिखित अर्कप्रकाश अन्तर्गत तेश्रो शतकको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो

## ॥ अथ चतुर्थ शतकम् ॥

### छ रस

सिताचिञ्चोषणपटुबिभीतककटीलकाः ।
एतत्षड्रसमित्युक्त्व विपरीत बलाधिकम् ॥१॥

मिस्री, अमिली (चिञ्चा), मरिच, पर्बल, हर्रो र करेलो यी छ प्रकारको द्रव्यको समूहलाई षड्रस भनिन्छ । यी उल्टो क्रमले क्रमशः बलवर्धक हुन्छन् ।

### छ रसको अर्क

एषामर्कं प्रत्यहं च पिबेत्पल युगं प्रिये ।
अरुचिश्चैव मन्दाग्नि स्वप्नेऽपि स नपश्यति ॥२॥



जो मानिस दिनहुँ यसको अर्क करिब चार पल पिउने गर्दछ, उसले सपनामा पनि अरुची र मन्दाग्नि देख्नु पर्दैन ।

### उन्मत्त पञ्चक र त्यसको अर्क

उन्मत्तो सोमविजयाजातीपत्री च खस्खसम् ।
उन्मत्त पञ्चकं चैतद्यवानीपञ्चभिः समा ॥३॥

धतुरो, बकुची, गाँजा वा भाङ, जाइफल र अफिम यिनको समूह वा मिश्रणलाई उन्मत्त पञ्चक भनिन्छ । यसमा यति नै मात्रा ज्वानो मिसाउनू ।

**दुग्धनिर्वापितादस्मादर्कोग्राह्योर्यथोक्तितः ।**
**खादेत्पिशाचवन्मत्तोरमेच्चरमणीशतम् ॥४॥**

यी माथि बताइएका मिश्रणलाई दूधमा ढड्याएर वा भिजाएर त्यसको विधिपूर्वक अर्क निकाल्नू । यसको सेवन गर्नाले मानिस पिशाच जस्तै उन्मत्त भई सयवटी स्त्रीसँग रमण गर्न सक्ने बन्दछ ।

## त्रिसुगन्ध र त्यसको अर्क

**त्वगेलापत्रकैस्तुल्यैस्त्रिसुगन्धमितिस्मृतम् ।**
**तदर्को मुखदौर्गन्धिच्छेदनोमलभेदनः ॥५॥**

दालचिनी, अलैंची र तेजपात : यी तीन द्रव्यको बराबर मात्राको मिश्रणलाई त्रिसुगन्ध भनिन्छ । यसको अर्कले मुखको दुर्गन्ध नाश गर्दछ र दिसा खुलाउँदछ ।



## चतुर्जात र त्यसको अर्क

**नागकेशरमेला च पत्रकंदारुचीर्णकम् ।**
**चातुर्जातमिदं ज्ञेयं वह्निकृच्च विषापहम् ॥६॥**

नागकेसर, अलैंची, तेजपात र दालचिनी बराबर मात्रामा मिसाइएको मिश्रणलाई चतुर्जात भनिन्छ । यसको अर्कले जठराग्निलाई बाल्दछ र विषविकार नाश गर्दछ ।

## त्रिफला र त्यसको अर्क

**पथ्याबिभीतको धात्री त्रिफलैषा प्रकीर्तिता ।**
**एतदर्को मेहकुष्ठविषमज्वरपित्तनुत् ॥७॥**

हर्रो, बर्रो र अमलाको मिश्रणलाई त्रिफला भनिन्छ । यसको अर्कले प्रमेह, कुष्ठ, विषमज्वर र पित्तविकार नाश गर्दछ ।

## त्रिकटु र यसको अर्क

**विश्वोपकुल्या मरिचमेतत्त्रिकटुरुच्यते ।**
**हरेद्गुल्मकफस्थौल्यमेदश्लीपदपीनसान् ॥८॥**

सुठो, पिप्ला र मरिचको सम्मिश्रणलाई त्रिकटु भनिन्छ । यसको अर्कले गुल्म, कफविकार, मोटोपन, बोसोविकार, हात्तीपाइले रोग र पिनास ठिक गर्दछ ।

## चतुरूषण र यसको अर्क

**पिप्पली पिप्पलीमूलं मरीचं विश्वभेषजम् ।**

**चतुरूषणमित्युक्तमेतदर्कोऽग्नितत्परः ॥९॥**

पिप्ला, पिप्लाको जरा, मरिच र सुठोको सम्मिश्रणलाई चतुरूषण भनिन्छ । यसको अर्कले जठराग्निलाई बाल्दछ ।

## पञ्चकोल र यसको अर्क

**पिप्पली पिप्पलीमूला चव्यचित्रकनागरैः ।**
**पञ्चकोलमिदं गुल्मप्लीहानाहोदरापहः ॥१०॥**

पिप्ला, पिप्लाको जरा, चाँभा, चितू र सुठोको सम्मिश्रणलाई पञ्चकोल भनिन्छ । यसको अर्कले गुल्म, फियोका रोग, आनाह र पेटका रोग निको पार्दछ ।

## षडूषण र यसको अर्क

**कणामूलोषण कणा चव्य चित्रक नागरैः ।
एतत्षडूषणं चोष्णं दीप्तिकारिविषापहम् ॥११॥**

पिप्लाको जरा, मरिच, पिप्ला, चाँभा, चित्रक र सुठोको मिश्रणलाई षडूषण भनिन्छ । यसको अर्कले जठराग्निलाई बाल्दछ र विषको असर नाश गर्दछ ।

## चतुर्वीर्य वा चतुर्बीज र यसको अर्क

**मेथिका चन्दसूरश्च कालाजाजी यवानिका ।
चतुर्वीर्यमिदं प्रोक्तं शूलाध्मानसमीरजित् ॥१२॥**

मेथी, चम्सुर, कालो जीरा र ज्वानुका गेडाको सम्मिश्रणलाई चतुर्वीर्य भनिन्छ । यसको अर्कले शूल, आध्मान र वातविकार नाश गर्दछ ।



## अष्टवर्ग र यसको अर्क

**जीवकर्षभकौ मेदकाकोल्यौ ऋद्धिवृद्धिके ।
अष्टवर्गोऽयमर्कस्तु भग्नसन्धानकृत्परः ॥१३॥**

जीवक, ऋषभक, मेदा, महामेदा, काकोली, क्षीरकाकोली, ऋद्धि र वृद्धिको सम्मिश्रणलाई अष्टवर्ग भनिन्छ । यसको अर्कले भाँचिएका वा फुटेका हाड जोड्दछ ।

## बृहत्पञ्चमूल र यसको अर्क

**बिल्वोग्निमन्थः श्योनाकः पाटलागणकारिका ।
पञ्चमूलबृहत्प्रोक्तं तदर्कोत्यग्निदीपनः ॥१४॥**

बेल, अरणि, टटेलो, पाडरी र गिनेरीको सम्मिश्रणलाई बृहत्पञ्चमूल भनिन्छ । यसको अर्कले जठराग्निलाई बाल्दछ ।

## पञ्चमूल वा लघुपञ्चमूल र यसको अर्क

**शालिपर्णी पृष्ठिपर्णी वार्ताकी कण्टकारिका ।**
**गोक्षुरः पञ्चमूलं स्यात्तदर्कश्चाश्मरीप्रणुत् ॥१५॥**

साकिनु, चाल्ने सिस्नु, सानो बिही, कण्टकारी र गोखुरको सम्मिश्रणलाई पञ्चमूल भनिन्छ । यसको अर्कले पत्थरी ठिक गर्दछ ।

## दशपञ्चमूल र यसको अर्क

**उभाभ्यां पञ्चमूलाभ्यां दशमूलमुदाहृतम् ।**

**तदर्कः सूतिकारोगत्रिदोषज्वरशोथहा ॥१६॥**

माथि बताइएका दुई थरी पञ्चमूलको मिश्रणलाई दशपञ्चमूल भनिन्छ । यसको अर्कले सुत्केरीका रोग, त्रिदोष, जरो र शरीर सुन्निने रोग निको पार्दछ ।

## जीवनीयगण र यसको अर्क

**जीवन्तीमधुकंमुद्गाशालिपर्ण्यष्टवर्गकः ।**
**जीवनीयगणस्यार्कः सर्वरोगविनाशनः ॥१७॥**

जीवन्ती, जेठीमधु, माषलहरी, वनमुगी र अष्टवर्गका द्रव्यको मिश्रणलाई जीवनीय गण भनिन्छ । यसको अर्कले सबै रोग नाश गर्दछ ।

# सुगन्धगण र यसको अर्क

**कर्पूरो मृगनाभिश्च कस्तूरीलतिका तथा ।**
**गन्धमार्जारचोर्यञ्च श्रीखण्डं पीतचन्दनम् ॥१८॥**
**शिलाजिद्रक्तकाङ्गं पतङ्गमगुरुद्वयम् ।**
**देवदारुश्च सरलदस्तगरं पद्मकं पुरः ॥१९॥**
**सरनिर्यासकोरालं कुन्दरुश्च शिलारसः ।**
**सिल्हल्हककश्च लवङ्गश्च जातीपत्रीपलं तथा ॥**
**ऐलाद्वयदारुचीनी त्वक्पत्रं नागकेशरम् ।**
**बालकं वीरणं मासी कुङ्कुमंरोचनामखः ॥२१॥**
**सुगन्ध वीरणं बाला जटामांसी मुरा घनः ।**
**शटी कर्चूर एकाङ्गी सुगन्धोऽयं गणोत्तमः ॥२२॥**
**विधिनिष्का सितायोऽर्कोरुच्यः पाचनदीपनः ।**
**मुखदौर्गन्ध्यहृन्नेत्र्योलेपान्मेदश्रमापहः ॥२३॥**

कपुर, कस्तूरी, कस्तूरी-बेली, गन्धमार्जार (नीरबिरालो) नामक बिरालोबाट निस्कने कस्तूरी जस्तै बास्ना आउने वस्तु, शङ्खपुष्पी फूल, श्रीखण्ड, पहेँलो चन्दन, शिलाजित, बकचन्दन (चन्दन विशेष), धूपी, कालो धूपी, देवदारु, सल्लो, तगर, पैयुँको खोटो, गोकुल धूप, सल्लाको खोटो, सालधूप, साज, शिलारस (सीलनामको पन्यालो वस्तु वा खोटो), सिल्हक (सिलको चोप), ल्वाङ, जाइफल, अलैंची, सुकुमेल, दालचिनी, तेजपात, नागकेसर, सुगन्धवाल, खस, मांसी (?), केसर, गोरोचन, नखी, सुगन्धवीरण (सुगन्धी खस), बाला (?), जटामसी, कालो जटामसी, घन (?), कपुरहलेदो, कचुर, चन्दन विशेषको मिश्रणलाई उत्तम सुगन्ध गण भनिन्छ । यसबाट विधिपूर्वक निकालिएको अर्क धेरै नै रुचिकर, पाचन र दीपन हुन्छ । यो मुखको दुर्गन्ध हटाउन ओखती हुन्छ । यसले आँखालाई लाभदायक हुन्छ । यसको लेपले बोसोविकार र थकाई मेट्‌दछ ।

## वीरण र यसको अर्क

**कुशः काशश्च दर्भश्च कत्तृणं भूतृणन्तथा ।**
**श्वेतदूर्वा नीलदूर्वा गण्डदूर्वेति वीरणम् ॥२४॥**

कुश, काँस, नफुलेको वा सानो जातको कुश, नेपाले उशीर वा कुशजस्तो पिर्रे, जरामा अदुवाको जस्तो गन्ध हुने पिर्रे, सेतो दूबो, नीलो वा कालो दूबो र घोडेदूबोको सामूहिक नाम “वीरण” हो ।

**वीरणार्को हरेच्छूलं सन्धुक्षयति चानलम् ।**
**क्षतसन्धानकृद्वृष्यो बलं कुर्यादनेकधा ॥२५॥**

वीरणको अर्कले शूल नाश गर्दछ, जठराग्नि बाल्दछ, घाउ निको पार्दछ, वीर्य र अनेक थरीको बल बढाउँदछ ।



## दुग्धकन्द गण र यसको अर्क

**अश्वगन्धा च मुशली विदारी च शतावरी ।**
**क्षीरवाराहिका चेति दुग्धकन्दगणस्त्वयम् ॥२६॥**

अश्वगन्धा, मुसलीकन्द, भुइँकुभिण्डो, कुरिलो र क्षीरवाराही (?) यी दुग्धकन्द गणमा पर्दछन् ।

**बालको वर्धते वीर्यं रिरंसुर्बलयासह ।**
**एतदर्कस्य पानेन कुर्यात्षोडशवार्षिकीम् ॥२७॥**

यसको अर्कले बालकको बल बढाउँदछ । वीर्यवर्धक हुन्छ । ग्राम्यधर्मको शक्ति बढाउँदछ । यसलाई पिउनाले मानिस सोह्र वर्षको जस्तो हुने गर्दछ ।

## लघुदन्ती आदिको अर्क

**लघुदन्ती वृहद्दन्ती इन्द्रवारुणिनीलिका ।**
**वासयेच्च सुगन्धे न राजयोग्यं विरेचनम् ॥२८॥**

सानो जात र ठूलो जातको अजयपाल, ऐरेलु र नेवारीको अर्कलाई बास्नादार बनाउनू, यो राजाका लागि उपयुक्त दिसा लगाउने ओखती हुन्छ ।

## बरोंको अर्क

**दुग्धमिश्रैर्वटफलैः कमलानां पिधानकः ।**
**जातोऽर्कः शीतलो ग्राही वर्ण्योभगसुगन्धकृत् ॥२९॥**

बरोंको गेडालाई दूधमा भिजाउनू, त्यसपछि त्यसमाथि कमल फूलका पत्तीहरू राख्नू र अर्क निकाल्नू । यो अर्क शीतल गर्ने, ग्राही, वर्णमा निखार दिने र स्त्री-जननेन्द्रियलाई सुगन्धित गर्ने गुणको हुन्छ ।



## पीपलको अर्क

**मूलनालोदलोन्फुल्लफलैर्युक्ता हि पद्मिनी ।**
**तत्पिधानं पिप्पलस्य फलानां योनिदोषनुत् ॥३०॥**

पीपलको गेडा भिजाई त्यसलाई कमलको जरा, डाँठ, पात र फूलले छोपी निकालिएको अर्कले स्त्री-जननेन्द्रियका सबै प्रकारका रोग ठिक गर्दछ ।

## आँपको अर्क

**चूतकमण्डलबीजं स्थलपद्मिनिपत्रपिहितं च ।**
**उद्धृत्य सम्यगर्क मण्डलमेकं समाश्नीयात् ॥३१॥**

आँपको कोया भित्रको गुदी निकाली भिजाएर स्थलकमल फूलको पत्तीले छोपी नियमानुसार अर्क निकाल्नू । यो अर्क नियमानुसार एक मण्डल (पन्ध्रदेखि अठचालीस दिन) सम्म पिउनू ।

**ऋतुदिनतोया ललना पिवति कुचस्तम्भनं कुर्यात् ।**
**गर्भस्य भीतिरहिता रमयति पुनःकलप्रसूतापि ॥३२॥**

रजस्वला भएको दिनदेखि यो अर्क पिउने गरे स्त्रीको छाती (स्तन) कठोर भइरहन्छ र गर्भ बस्ने डर पनि हुँदैन ।

## तिन्दुको अर्क

**बल्यश्चपुष्करतिन्दुर्पिहितः कुमुदैः स च ।**
**उपोदकी तदर्कस्य पानात्सूते विवेदनम् ॥३३॥**



तिन्दुको अर्क बलकारी र आँखाका लागि फाइदाजनक हुन्छ । कमलको फूलले छोपेर निकालिएको यसको अर्क पिउनाले सुत्केरीलाई पीडा हुँदैन ।

## दूधिला वृक्ष र यसको अर्क

**न्यग्रोधोदुम्बराश्वत्थ पारिशप्लक्षपादपाः ।**
**पञ्चैते क्षीरिणो वृक्षास्तेषामर्को व्रणप्रणुत् ॥३४॥**
**मेदाघ्नः स्नानतो लेपाद्विसर्पामयनाशनः ।**
**शोथघ्नस्तस्य सेकेन भग्नसन्धानको भवेत् ॥३५॥**

बर, डुम्री, पीपल, पारीश पीपल र पाखरी यी पाँच रुखलाई दूधिला वृक्ष भनिन्छ । यी वृक्षको अर्कले घाउ ठिक गर्दछ । यो अर्कले नुहाउनाले बोसोविकार नाश हुन्छ । यो अर्क दल्नाले विसर्प रोग निको हुन्छ । यो अर्क दलेर सेक्नाले सुन्निएको बस्दछ तथा भाँचिएका र मर्किएका हाड जोडिन्छ ।

## फूल र यसको अर्क

**सेवती शतपत्री च वासन्तीगुलदावदी ।**
**चम्बेलीयूथिका चम्पा वकुलश्च कदम्बकाः ॥३६॥**
**छादयेत्केतकी पत्रैर्ग्राह्योऽर्को गुरुमार्गतः ।**
**पुष्पार्क इति विख्यातो मरिचैः सहितं पिबेत् ॥३७॥**
**मण्डलेऽर्क प्रयोन क्लीबोऽपि पुरुषायते ।**
**वर्षाधिकं तु यक्ष्माणं हन्याच्छ्रेष्ठो मृगाङ्कतः ॥३८॥**

सेतो गुलाफ, सयपत्री, वासन्ती, गोदावरी, चमेली, जुही, चाँप, मौलसिरी र कदमका फूललाई क्यात्तुकेका फूलले ढाकी गुरुले बताएका विधिले अर्क निकाल्नू । यो अर्कलाई पुष्पार्क भनिन्छ । यो अर्क मरिचसँग पिउनू । यो अर्क पन्ध्र दिनसम्म नियमानुसार पिउनाले नपुंसकले पनि पुरुषत्व प्राप्त गर्दछ । यसले वर्ष दिन पुरानो क्षयरोग पनि नाश गर्दछ । यो क्षयरोगको विशेष औषधी “मृगाङ्क (शब्दकल्पद्रुमः)” भन्दा पनि उत्तम औषधी हुन्छ ।



## विष र यसको अर्क

**वत्सनाभश्च हारिद्रः सौतिकश्च प्रदीपनः ।**
**सौराष्ट्रिकः शङ्खकश्च कालकूटहलाहलाः ॥३९॥**
**ब्रह्मपुत्रस्त्वमी ख्याता विषभेदास्तदर्कतः ।**
**लेपेन गण्डमालाद्या वातरोगा शमन्ति च ॥४०॥**

वत्सनाभ, हारिद्र, सौतिक (शौक्तिकेय, विष विशेष : आयुर्वेद महाकोश), प्रदीपक, सौराष्ट्रिक, शङ्खविष (आयुर्वेदिक महाकोश), कालकूट, हलाहल र ब्रह्मपुत्र : यी नौ थरी विष हुन् । यिनको अर्कले गण्डमाला रोग र वातविकार नाश गर्दछ ।

## धान (चामल) र यसको अर्क

रक्तशालिः सकलमः पाण्डुकः शकुनाहतः ।
सुगन्धकः कर्दमको महाशालिरदूषकः ॥४१॥
पुष्पाण्डकः पुण्डरीकस्तथा माहिषमस्तकः ।
दीर्घशूकः काञ्चनको हायनो लोध्रपुष्पकः ॥४२॥
इत्याद्याः शालयः सन्ति बहवो बहुदेशजाः ।
तासां पिष्टं यथा लाभं क्षिपेदष्टगुणे जले ॥४३॥
यावज्जीव समुत्पत्तिर्जीवानां विलयस्तथा ।
ततोदत्वार्कयन्त्रे तन्मद्यं निष्काशयेत्सुधीः ॥४४॥
स्वाद्वी मृद्वी ग्राहिणी च बलदा ज्वरहारिणी ।
नाना दुःखहरा स्निग्धा चात्युन्मादत्रिदोषजित् ॥४५॥

रक्तशालि, सकलम, पाण्डुक, शकुनाहत, सुगन्धक, कर्दमक, महाशालि, अदूषक, पुष्पाण्डक, पुण्डरीक, माहिषमस्तक, दीर्घशूक, काञ्चनक, हायन, लोध्रपुष्पक आदि अनेक थरी धान देश अनुसार हुने गर्दछन् । यी धानको चामलको पिठो आठ गुना पानीमा हाल्नू । जब यसमा किरा परेर मर्न थाल्दछन् तब विद्वानले यसको विधिपूर्वक मद्य निकाल्नू । यो मद्य स्वादिलो, मिठो, ग्राही, बलदायक, जरो नाशक, अनेक दुःख नाशक, चिल्लो, उन्मात नाशक र त्रिदोष नाशक हुन्छ ।

## दलहन र यसको अर्क

मुद्गमाषो राजमाषो निष्पावश्च मकुष्टकः ।
चणकाढकिमाङ्गुल्या तृणकण्ड : कलायकाः ॥४६॥
द्विदलीकृत्य बिदुषा ततश्चूर्णी कृतः पुनः ।
पूर्ववत्साधयेन्मद्यं तुषधान्यसमुद्भवम् ॥४७॥
मासार्धात्कुरुते दोषं नियमात्सगुणश्चतान् ।

भूमिस्थमयनादूर्द्धं तनुते गुणसन्ततिम्।।४८।।
विण्मूत्ररोधमाध्मानं त्रिदोषोन्मत्ततारुजम्।
शिरोजठरजङ्घासु पिटिकानपि नाशयेत्।।४९।।
इषन्मदकरः स्निग्धो हरेत्पूर्वोदितान् गदान्।
संवासयेत्पञ्चवाणमुद्दीपयति चानलम्।।५०।।

मुगी, माष, राज्मा, मटरकोशा, सिमी (वा भटमास वा बोडी), वनमुगी, चना, रहर, मसुरो, खेसरी र केराउको दाल मिसाएर विद्वानले पिँध्नू। अनि पहिले बताएझैँ गरी बोक्रा निकालिएका यी अन्नको मद्य बनाउनू। यस्तो मद्यले पन्ध्र दिनसम्म खराब गर्दछ त्यसपछि गुनिलो हुन्छ। छ महिनासम्म जमिनमा गाडिएको मदिरा धेरै गुणकारी हुन्छ। यस्तो मद्यले दिसापिसाब रोक्दछ। आध्मान, त्रिदोष र उन्माद नाश गर्दछ। टाउका, पेट र तिघ्राका पिलो पनि निको पार्दछ। यो मद्य चिल्लो हुन्छ र लाग्दछ तर उल्लेखित लाभ भने गर्दछ। यसले रति-इच्छा जगाउँदछ र जठराग्निलाई पनि बाल्दछ।



## तेलहन र यसको अर्क

तिलातसी च तोरी च त्रिविधः चापि सर्षपः।
द्विधा राजी खसं चैव बीजं कौसुम्भ सम्भवम्।।५१।।

तिल, आलस, तोरी, तीन प्रकारका सर्सिउँ, दुई किसिमका रायो, खस र कुसुम,...।

एतानि तैलधान्यानि शिटतानि च पूर्ववत्।
ततो निष्काशयेदर्कं गन्धपाषाणवासितम्।।५२।।

यी तेलहनलाई पहिले जसरी नै केलाइतुल्याइ गरेर अर्क निकाल्नू र गन्धकले सुगन्धित बनाउनू।

मुहुर्विलेपतो रोगान्नरकुञ्जरवाजिनाम्।
हरत्येव न सन्देहः स्वर्जिक्षारसमन्वितम्।।५३।।

यो अर्कमा सज्जीखार मिसाई दल्नाले मानिस, हात्ती र घोडाका सबै रोग निश्चय नै नाश हुन्छन् ।

**सर्वेषु कर्णरोगेषु बाधिर्ये कर्णपूरणम् ।**
**अनेन घर्षयेच्छङ्खं नयनाञ्जनमाचरेत् ॥५४॥**

सबै खालका कानका रोगमा र बहिरोपनमा यो अर्क कानमा भरी दिनू अनि शङ्ख घोटेर आँखामा गाजल लगाइ दिनू ।

**कण्डूपुष्पं जलस्रावं पक्ष्मरोगं व्यपोहति ।**
**अभ्यङ्गादीप्तिदं चैव बल्यंत्वक्यञ्च केशकृत् ॥५५॥**

यसले आँखा चिलाउने रोग, आँखाबाट पानी बगिरहने रोग र परेलाका रोग (वा आँखामा परेला परेर हुने रोग) नाश गर्दछ । शरीरमा बुकुवाका रूपमा दले शरीर चमकिलो हुन्छ । बल, छालाको चमक र कपालका लागि हितकारी हुन्छ ।



## महका प्रकार

**माक्षिकं भ्रामरं क्षौद्रं यौतीकं छात्रमित्यपि ।**
**दार्ढ्यमौद्दालकं दालमित्यष्टौ मधुजातयः ॥५६॥**

माक्षिक, भ्रामर, क्षौद्र, पौतिक, छात्र, दार्ढ्य, औद्दालक र दाल गरी आठ प्रकारका मह हुन्छन् ।

## उखुका प्रकार

**पौण्ड्रको भीरुकश्चापि वंशकः शतपोरकः ।**
**कान्तारस्तापसेक्षुश्च काष्ठेक्षुः शुचिपत्रकः ॥५७॥**

**नैपालोदीर्घपत्रश्च नीलपोरोऽथ कोशकृत् ।**
**एताद्वादश सङ्ख्याता इक्षूणां जातयः स्मृताः ॥५८॥**

पौण्ड्रक, भीरुक, वंशक, शतपोरक, कान्तार, तापस, काष्ठ, शुचिपत्रक, नेपाल ,दीर्घपत्र, नीलपोर र कोशकृत् गरी बाह्र प्रकार उखु हुन्छन् ।

## उखुका विकार (उखुजन्य पदार्थ)

**फाणितं चैव मत्स्यण्डी गुडखण्डकमेव च ।**
**सिता सितापला चैते षड्भेदा इक्षुजामताः ॥५९॥**

पातलो खुँदो, बाक्लो खुँदो, कालो सक्खर, रातो सक्खर, मिस्री र चिनी गरी उखुका सात किसिमका खाद्य (विकार) बन्दछन् ।



## अमिलो वर्ग

**आम्र आम्रातको धात्री लकुचं च कपित्थकम् ।**
**नारङ्गं द्विविधा जम्बुः करमर्द पियारकम् ॥६०॥**
**बीजपूरं च जम्बीरं निम्ब्वम्लीकाम्लवेतसम् ।**
**दाडिमं पर्वतद्राक्षा द्विधा बदरतूदकम् ॥६१॥**
**वृक्षाम्लं हरमन्थं च चाङ्गेरी त्वम्लवर्गकः ।**

आँप, अमारो, अमला, बडहर, कैथ, दुई किसिमका सुन्तला,जामुनु, पनेरु, चिरौंजी, बिमिरो, ज्यामिर, कागती, अमिली,अम्लवेत, दारिम, पहाडी अङ्गुर, दुई किसिमका बयर, किम्बू, चुक अमिलो, हरमन्थ (चना ?) र चरिअमिलो अम्लवर्गमा गनिन्छन् ।

## राजवारुणी

**शुण्ठी कणा कणामूलं यवानी मरिचानि च ॥६२॥**
**तुल्यान्येतानि सर्वाणि एभ्यो द्विघ्नोऽम्लजो रसः ।**
**प्रोक्तान्तर्गत दिक्कान्नं स्वादुसंख्या नखोन्मिता ॥६३॥**
**सर्वेभ्यो द्विगुणं स्वादं स्थापयेन्मासमात्रकम् ।**
**कुर्यादष्टप्रहरकं प्रत्यहञ्च ततः पुनः ॥६४॥**
**ततो निष्कासयेदेष सुरेयं राजवारुणी ।**
**मासं भूमौ निखातव्या तत ऊर्ध्वञ्च भक्षयेत् ॥६५॥**

सुठो, पिप्ला, पिप्लाको जरा, ज्वानु र कालो मरिच बराबर मात्रामा लिई यसमा माथि उल्लेखित अम्लवर्गको रस यसको दोब्बर लिनू, यसमा माथि बताइएका आठ थरीका मह र बाह्र थरीका उखुको रस गरी बीस प्रकारका गुलिया वस्तु सबै दोब्बर हाली मिसाएर एक महिनासम्म राख्नू । आठै प्रहर यसको हेरविचार गर्नू । यसपछि यसबाट अर्क निकाल्नू । यसलाई "राजवारुणी" भनिन्छ । यसलाई एक महिनासम्म पृथ्वीमा गाडेर राख्नू, अनि पिउनू ।



## राजवारुणीको इतिहास

**मया महेश्वरमुखाच्छ्रुत्वा तस्यै समर्पिताम् ।**
**तेन दत्ता भैरवेभ्यो लोलजिह्वाः पिबन्ति ते ॥६६॥**

मैले यसमा बारेमा शिवका मुखबाट सुने (वा मैले यस्तो अर्क शिवबाट पाएँ) । शिवले नै यो अर्क पार्वतीलाई दिनु भएको थियो अनि पार्वतीले यो अर्क भैरवलाई दिनु भएको थियो । भैरव यो अर्कलाई चञ्चल जिभ्रोले पिउने गर्दछन् ।

## राजवारुणीका फाइदा

इयं शीता लघु स्वाद्वी स्निग्धा ग्राही विलेखनी ।
चक्षुष्या दीपनी स्वर्या व्रणशोधनरोपणी ॥६७॥
सौकुमार्यकरा सूक्ष्मा परं स्रोतोविशोधनी ।
कषाया च रसाह्लादा प्रसादजनका परा ॥६८॥
वर्ण्या मेधकरी वृष्या तथाऽरोचकतां हरेत् ।
कुष्ठार्शः कासपित्तास्रकफमेहक्लमकृमीन् ॥६९॥
मेद तृष्णा वमिश्वासहिक्कातीसारविड्ग्रहान् ।
दाहक्षतक्षयायैवं योगवाह्याऽम्लवातला ॥७०॥

यो अर्क शीतल गर्ने, पचाउन हलुका, स्वादिलो, चिल्लो, ग्राही, लेखन गुणको, आँखाका लागि लाभदायक, दीपन गुणको, स्वरका लागि फाइदाजनक, घाउ सफा गर्ने र भर्ने, शरीरलाई कोमल र सुन्दर बनाउने, सूक्ष्मरूपमा धातु, मलका स्रोतलाई प्रशोधन गर्ने, केही टर्रो, शरीरका रसका लागि आनन्ददायक, अती नै प्रसन्नता उत्पादन गर्ने, वर्णमा निखारता लेराउने, बुद्धिवर्धक, वीर्यवर्धक, अरुची नाशक, कुष्ठ-अल्काइ-खोकी-पित्तविकार-रक्तविकार-कफविकार-प्रमेह-किरा-बोसोविकार-तिर्खा-वाकवाकी-दम-बाडुली-आउँ-कब्जियत-डाह- घाउ र क्षयरोग नाश गर्दछ । यो योगवाही र अम्लवात बढाउने गुणको हुन्छ ।



## तुषधान्य र यसको क्षुद्रवारुणी अर्क

कङ्गुश्चणः कोद्रवश्च श्यामाको वनकोद्रवः ।
शणबीजं वंशबीजं गवेधुश्च प्रसाधिका ॥७१॥
यावन्त्येतानि चोक्तानि तुषधान्यानि वेधसः ।
सर्वे संकुटच्य यत्नेन वितुषीकृत्य यत्नतः ॥७२॥
तक्रे वा क्वचिदम्ले वा आकीटं तद्विनिक्षिपेत् ।

**ततो निष्कासयेन्मद्यं भवेत्सा क्षुद्रवारुणी ॥७३॥**

कागुनो, चना, कोदो, सामाधान, वनकोदो, सनपाटको बिउ, बाँसको बिउ, जङ्गली गहुँ र नाभो धान : यी सबैलाई राम्ररी कुटी भुस केलाई तक्र वा कुनै अमिलो कुरामा जबसम्म किरा पर्दैन तबसम्म राख्नू । त्यसपछि यसबाट निकालिने मद्यलाई "क्षुद्रवारुणी" भनिन्छ । (भुस हुने अनाजलाई तुषधान्य भनिन्छ) ।

## क्षुद्रवारुणीका फाइदा

**मण्डलार्धं तु भोक्तव्या बहुक्लेशकरैर्नरैः ।**
**क्षुधातृषा च चिन्ता च पर्वतारोहणादिकम् ॥७४॥**
**एतत्संसेविनो नास्ति महाभारवहोऽपि वा ।**
**सूता समुपविष्टश्चेज्जयेत्प्रसव वेदनाम् ॥७५॥**



यो अर्क धेरै परिश्रम गर्ने मानिसले सातदेखि बीस दिनसम्म पिउनू । यो पिउनाले भोक, प्यास, चिन्ता, पहाड चढेर लाग्ने र धेरै गह्रौं भारी बोकेर लाग्ने थकाइ तथा प्रसूती-पीडा नाश हुन्छ ।

## जाङ्गल जीव

**हरिणैणकुरङ्गाश्च पृषत न्यङ्कुशं वरः ।**
**राजीवोऽपि च मुण्डी चेत्याद्या जाङ्गल संज्ञिकाः ॥७६॥**

हरिण, कृष्णसार मृग (ऐण), फिका तामा रङको कृष्णसार (कुरङ्ग), जरायो (पृषतत्य), न्यङ्कुश (बाह्रसिंगे), जिउमा धर्साजस्ता रेखा हुने एकजातको मृग (राजीव) र मुडुलीमृग ( मुण्डी) लाई "जाङ्गल" भनिन्छ ।

## जाङ्गल पशुको अर्क

**एषां मांसन्तु कणशः कृत्वा पूर्वे द्रवे क्षपेत् ।**

यिनको मासुलाई ससाना टुक्रा पारेर काटी तक्र वा कुनै अमिलो पानीमा डुबाएर राख्नू ।

**संस्थाप्य मण्डलं पश्चादर्कं निष्काशयेत्ततः ॥७७॥**

एक मण्डल (आठ दिन ?) यसरी राखेपछि यसबाट अर्क निकाल्नू ।

**एव सर्वत्र मांसस्य वारुणीकरणक्रिया ।**
**पित्तश्लेष्महरी कश्चिद्वातला बलवर्द्धिनी ॥७८॥**

यसो गर्नुलाई मासुको वारुणीकरण गर्नु भनिन्छ । यस्तो मद्यले सत्ति र कफविकार नाश गर्दछ, केही मात्रामा वातविकार  र बल बढाउँदछ ।



## दुलोमा बस्ने जीव र तिनको मासुको अर्क

**गोधा शश भुजङ्गाश्च वृश्चिकाद्या बिलेशयाः ।**
**एतत्सुरा वातहरा बृंहणा वद्धमूत्रविट् ॥७९॥**

गोहोरो, खरायो, सर्प, बिच्छी आदिलाई दुलोमा बस्ने हुनाले “बिलेशय” भनिन्छ । यिनको सुराले वातविकार नाश गर्दछ, पौष्टिक हुन्छ र मलमूत्र रोक्दछ ।

## गुफामा बस्ने जीव र तिनको अर्क

**सिंह व्याघ्र वृका ऋक्ष तरक्षु द्वीपिनस्तथा ।**
**बभ्रु जम्बूक मार्ज्जार इत्याद्याः स्युर्गुहाशयाः ॥८०॥**

**स्निग्धो बल्यो हितो नित्यं नेत्रं गुह्यविकारिणाम् ।**

सिंह, बाघ, ब्वाँसो, भालु, चितुवा, पाटेबाघ, न्याउरीमुसो, स्याल, जङ्गली बिरालो आदि जनावरलाई गुफामा बस्ने हुनाले "गुहाशय" भनिन्छ । यिनको मद्य चिल्लो, बलकारी, आँखाका लागि लाभदायक र गुप्तरोगका लागि फाइदाजनक हुन्छ ।

## पर्णमृग र तिनको मासुको अर्क

**वानरा वृक्षमार्ज्जारा वृक्षमर्कटकादयः ॥८१॥**
**एतेपर्णमृगाश्चार्को वृष्यो नेत्र्यश्य शोषिणाम् ।**
**श्वासार्शः कासशमनोत्सृष्टमूत्रपूरीषकः ॥८२॥**

बाँदर, वनबिरालो, लोखर्के आदिलाई "पर्णमृग" भनिन्छ । यिनको मासुको अर्क वीर्यवर्धक, आँखाका लागि लाभदायक र क्षयरोगीका लागि हितकर हुन्छ । दम, अल्काइ र खोकी नाशक र मलमूत्र खुलाउने गुणको हुन्छ ।



## विष्किर वर्गका चरा र तिनको मासुको अर्क

**वर्त्तिका लाव गिरिका कपिञ्जलक तित्तिराः ।**
**कुलिङ्ग कुलटाद्याश्च विष्किरास्समुदाहृताः ॥८३॥**
**बल्यो वृष्यो त्रिदोषघ्न एतदर्कस्तु पथ्यलः ।**

बट्टाई, लाभे, गिरिका (?, यसको अर्थ सानो जातको मुसो हुन्छ तर यहाँ यो अर्थ प्रासङ्गिक देखिएन, अर्को अर्थ पाउन सकिएन, कतै सेतो वा पहेँलो तित्रो भनेर अर्थ लगाइएको छ), काकाकुल वा चातक, तित्रो, कन्याङकुरुङ, कुलटा (?) आदि चरालाई "विष्किर" भनिन्छ । यिनको अर्कले बल र वीर्य दिन्छ, त्रिदोष नाश गर्दछ र पचाउन सरल हुन्छ ।

## प्रतुद जातका चरा र तिनको मासुको अर्क

**हारीतो धवलः पाण्डुश्चित्रपुच्छो बृहच्छुकः ॥८४॥**
**पारावतः खञ्जरीटः पिकाद्याः प्रतुदाः स्मृताः ।**
**कफपित्तहरो ग्राही वद्धविण्मूत्रको भवेत् ॥८५॥**

रातो सुँगा, सेतो चरा विशेष (धवल ?), ढुकुर, चित्रपुच्छ (?), बृहच्छुक (?), परेवा, खञ्जन, मुजुर आदिलाई प्रतुद जातका चरा भनिन्छ । यिनको मासुको अर्कले कफविकार र पित्तविकार नाश गर्दछ, ग्राही हुन्छ र मलमूत्र रोक्दछ ।

## प्रसर वर्गका चरा र तिनको मासुको अर्क

**काको गृद्ध उलूकश्च चित्तलः शशघातकः ।**
**चाषो भासश्च कुकुर (कुरर) इत्याद्याः प्रसराः स्मृताः ॥८६॥**

**एतत्सुरा भस्मकरा तस्मान्तमेदस्विनो हिताः ।**

काग, गिद्ध, लाटोकोसेरो, चित्तल (चील ?), बाज, गिद्ध विशेष, कन्याङकुरुङ आदि चरालाई प्रसर वर्गका चरा भनिन्छ । यिनको सुराले भस्म गर्दछ त्यसैले बोसो धेरै हुनेले खान उपयुक्त हुन्छ ।

## ग्राम्य पशु र तिनको मासुको अर्क

**कालीयच्छागगोमेषा हयाद्या ग्राम्यसंज्ञकाः ॥८७॥**
**दीपनो वातहृत्पैत्तो बृंहणो बलवर्द्धनः ।**

भैंसी, बाख्रा, गाई, भेडा, घोडा आदिलाई ग्राम्यपशु भनिन्छ । यिनको अर्क दीपन, वातनाशक, पित्तवर्धक, पौष्टिक र बलदायक हुन्छ ।

## कूलेचर जनावर र तिनको मासुको अर्क

**लुलायगण्डवाराह चमरीवारणादयः ॥८८॥**
**कूलेचरा एतदर्को वृष्यः श्लेष्मविवर्द्धनः ।**

रँगो, गैंडा, बँदेल, चौंरी गाई, हात्ती आदिलाई जलका छेउछाउमा बस्ने हुनाले "कूलेचर" भनिन्छ । यिनको अर्क वीर्यवर्धक र कफवर्धक हुन्छ ।

## प्लव वर्गका चरा र तिनको मासुको अर्क

**हंससारसकाकाक्ष चक्रक्रौञ्च शरारिका ॥८९॥**
**नन्दीमुख सकादम्बा बलाकाद्याः प्लवाः स्मृताः ।**
**एतन्मद्यं शुक्रकरं वल्यं स्निग्धं त्रिदोषनुत् ॥९०॥**



हाँस, सारस, काकाक्ष (?), चखेवा, कऱ्याङकुरुङ, चाँचर, नन्दीमुख (?), राजहाँस, बकुल्लो आदि चरालाई प्लव भनिन्छ । यिनको मद्यले शुक्र बढाउँदछ, बल दिन्छ, चिल्लो हुन्छ र त्रिदोष नाश गर्दछ ।

## खबटे जीव र तिनको मासुको अर्क

**शङ्खश्चशङ्खकश्चापि शुक्तिः शम्बूककर्कटौ ।**
**एते कोशस्थिताश्चार्को बृंहणो बलवर्धनः ॥९१॥**

ठूलो शङ्खे किरो, सानो शङ्खे किरो, सिपी, घोंघी र गँगटो : यी खबटो भित्र हुने जन्तुलाई कोशस्थित भनिन्छ । यिनको अर्क पौष्टिक र बलदायक हुन्छ ।

## छोटा खुट्टा हुने जीव र तिनको मासुको अर्क

**कुम्भीरकूर्मनक्राश्च गोधामकरशङ्कवः ।**
**घटिकः शिशुमारश्च इत्याद्याः पादिनः स्मृताः ॥९२॥**
**यदि जाता सुरा वातहन्त्री स्निग्धा विशेषताः ।**

नाव जातिको गोही (कुम्भीर), कछुवा, नाक नामको गोही (नक्र), गोहोरो, मगर जातको गोही, सकुची जातको माछा, घडियाल गोही, सोंस आदि छोटा खुट्टा हुने जीवको सुराले वातविकार नाश गर्दछ र चिल्लो हुन्छ ।

## माछा र यसको मासुको अर्क

**मत्स्यो मीनो विसारश्च झषो वैसारिणोण्डजः ॥९३॥**
**शकली (सकुची) पृथुरोमा च रोहितश्च सुदर्शनः ।**

**एते मत्स्या एतदर्को रोचको बलवर्धनः ॥९४॥**

माछा, मीन (माछा ?), विसार (माछा ?), झष (माछो ?), वैसारिण (माछो ?), कछुवा जस्तो माछा (शकली), पृथुरोमन् (माछो ?), रहु माछा र सुदर्शन (माछो ?) : यी माछाका जात हुन् । यिनको अर्क रुचिकर र बलवर्धक हुन्छ ।

**नृमत्स्यार्कस्तुः निष्काय नाना पुष्पैः सुवासितैः ।**
**यः सेवथेन्मासषट्कं बलीपलितवर्जितः ॥९५॥**

भालेजातको माछाको अनेक प्रकारका फूलले छोपी अर्क निकाल्नू । यस्तो अर्क जसले छ महिनासम्म पिउँदछ उसको छाला चाउरी पर्दैन र कपाल पनि फुल्दैन ।

## नृमांसको अर्क

मुनष्यमांसजर्कन्तु माषषट्कं तु सेवयेत् ।
न क्रामते शरीरस्य सर्पादीनां विषं क्वचित् ॥९६॥

नृमांसको अर्क  छ महिनासम्म छ महिनासम्म पिए उसलाई सर्प आदिको विष लाग्दैन ।

## फुलको अर्क

त्वचैलामरिचं चन्द्रो लवङ्ग जातिपत्रकम् ।
दत्त्वाण्डानामुपरितो घृतं विंशति भागिकम् ॥९७॥
अण्डार्कोऽयं स्यगुणकृत् बृष्यो वातघ्न शुक्रलः ।

फुलको निकाल्न अर्क यन्त्रमा राखेर त्यसमा तेजपात, अलैंची, मरिच, कपुर, ल्वाङ र जाइफल मसिनो गरी पिँधेर अण्डामा दल्नू । त्यसमा बीस भाग घिउ मिसाई अर्क निकाल्नू । यस्तो फुलको अर्कमा जुन जीवको त्यो फुल हो त्यही जीवको अर्क सरह गुण हुन्छ । यसले वीर्य बढाउँदछ, वातविकार नाश गर्दछ र शुक्र बढाउँदछ ।



## ऋतु अनुसार अर्क पान

निम्ब्वाम्रांकुरसम्भूतो वसन्ते ग्रीष्मके पुनः ॥९८॥
सेवतीशतपत्रीजो वर्षायां त्रिफलाभवः ।
पारिजातककाश्मीरी जातोऽर्कः शरदिस्मृतः ॥९९॥
यवानी गलदावद्योर्हेमन्ते शिशिरे पुनः ।
यवानी जन्तुयः सेवेत्तस्य रोगभयं कुतः ॥१००॥

वसन्त ऋतुमा नीम र आँपका मुनाको अर्क पिउनु राम्रो हुन्छ । यसैगरी ग्रीष्म ऋतुमा सेतो गुलाफ र सयपत्रीको अर्क पिउनु उत्तम हुन्छ । वर्षा ऋतुमा त्रिफलाको तथा शरद् ऋतुमा पारिजात र केसरको अर्क पिउनु राम्रो हुन्छ । हेमन्तमा ज्वानु र गोदावरीको अर्क तथा शिशिर ऋतुमा ज्वानुकै अर्क पिउनू, उसलाई रोग लाग्ने डर हुँदैन ।

इति लङ्केश्वर रावण कृतार्कप्रकाशे चतुर्थं शतकं संपूर्णम्

रावण लिखित अर्कप्रकाश अन्तर्गत चौथो शतकको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो

## ॥ अथ पञ्चमं शतकम् ॥

### जरो आउन शुरु गर्दा पिउने अर्क

**ज्वरागमनवेलायां घृतार्क मरिचान्वितम् ।
पलद्वयं पिबेद्यस्तु तज्ज्वरस्तम्भनं भवेत् ॥१॥**

जरो आउन थालेपछि घिउको अर्क दुई पल कालो मरिचको धुलोसँग पिउँदा जरो रोकिन्छ ।

### शीतज्वरमा अर्क

**एकविंशतिवारं हि कदल्यर्केण भावितम् ।
चूर्णं तालं मुद्गमिति दानाच्छीतज्वरं हरेत् ॥२॥**



हरितालको धुलोलाई केराको अर्कसँग मिसाई एउटा मुगीको गेडाजति एक्काईस पटक खानाले शीतज्वर (औलाको जरो वा मलेरिया) ठिक हुन्छ ।

**मेथीवनाढ्या तुलसी कालामललवङ्गकैः ।
भूनिम्बेनार्क उत्पन्नो निर्वापो मौक्तिका क्षयोः ॥३॥
मारि तस्य प्रवालस्य भस्मनोज्वरनाशनः ।**

मेथी, वनमेथी, तुलसी, कालो अमला, ल्वाङ र चिराइतो मिसाएर निकालिएको अर्कमा मोती वा कौडा तताएर झान्नू । अनी मुगाको भस्म मिसाएर पिउनू, शीतज्वर नाश हुन्छ ।

## विषमज्वरमा अर्क

**सुराजीर्णगुडासाज्या निहन्ति विषमज्वरम् ।।४।।**

पुरानो सक्खरको अर्कमा घिउ मिसाएर खाए विषमज्वर नाश गर्दछ ।

## सन्निपातज्वरमा अर्क

**अर्कस्तु दशमूलानां लवङ्गमरिचान्वितः ।**
**सन्निपातं हरेत्तूर्णं पलस्यैकस्य सेवनात् ।।५।।**

दशमूलको अर्कमा ल्वाङ र कालो मरिचको धुलो मिसाएर एक एक पल खाए सन्निपातज्वर चाँडै हराउँदछ ।



## आमातिसार र अर्क

**शृङ्गवेरं नागरं च मग्नमैरण्डजे द्रवे ।**
**पर्पटानिर्गतार्कस्तु हरेदामातिसारकम् ।।६।।**

अदुवा र सुठोलाई केही समय अडिरको रसमा भिजाउनू । अनि पित्तपापडासँग मिसाएर अर्क निकाल्नू । यो अर्क पिउनाले आमजन्य अतिसार निको हुन्छ ।

## पक्वातिसारमा अर्क

**धातक्याम्रास्थि बिल्वानि लोधेन्द्रयवतोयदान् ।**
**निधाय माहिषे तक्रे तदर्कः पक्वसारहा ।।७।।**

धँयेरो, आँपको कोया, बेल, लोध, इन्द्रजौ र नागरमोथेलाई भैंसीको मोहीमा भिजाउनू । यस पछि निकालिएको अर्कले गाढा पहैँलो र पातलो दिसा लाग्ने रोग (पक्वातिसार) निको हुन्छ ।

## रक्तातिसारमा अर्क

**वत्सदाडिमत्वचोस्तु साधितोमधुनान्वितः ।**
**दधिभक्ताशिनोऽर्कोऽयं रक्तातीसारनाशनः ॥८॥**

ठूलो कुरो र दाडिमका बोक्राको रस (अर्क) निकाली मह मिसाएर खान दिनू । यसपछि दहीभात खुवाउनू रक्तातिसार निको हुन्छ ।

## छेरपटीमा अर्क



**धातकीवदरीपत्रकपित्थरसमाचि (क्षि)कम् ।**
**लोध्रं दधिप्लुतं चार्कः प्रवाहीनाशनः परः ॥९॥**

धँयेरो, बरका पात, कैथ, अमोरो र लोधको अर्क दहीसँग खानाले छेरपटी निको हुन्छ ।

## कब्जियत विशेष र अर्क

**तक्रनिर्वापिता मुद्गास्तदर्को धान्यजीरकैः ।**
**सैन्धवेन समायुक्तो हन्यात्संग्रहणीगदम् ॥१०॥**

मोहीमा भिजाइएको मुगीको रसको अर्कमा धनिया, जीरा र सिधेनुन हाली  खानाले कब्जियत विशेष (सङ्ग्रहणी) ठिक हुन्छ ।

# बालरोग र अर्क

**एकविंशतिवाराणि गैरिकंचूर्ण भावितम् ।**
**छिक्कन्यार्केण तधूमान्महारोग क्षयो भवेत् ॥११॥**

गेरुको धुलोमा एक्काईस पटक हाल्दै झिक्दै गरिएको (भावित) छिउँके झार (छिक्कनी) को अर्कलाई गेरुकै धूपले वासना दिँदा बालकका ठूलठूला रोग नाश हुन्छन् ।

**ग्रहभूतपिशाचाद्याः पूतनामातृकादयः ।**
**धूपेनानेन सर्वेऽपि न स्पृशन्तीह बालकम् ॥१२॥**

ग्रह, भूत, पिशाच, पूतना, मातृका आदि कसैले पनि यो धूप
दिनाले बालकलाई छुन सक्दैनन् ।

**कंकरः कोणकश्चैव सकोणः कठिनस्तथा ।**

**एतेषां नो भयं भूयाद्यदि धूपः प्रधूपितः ॥१३॥**

यो धूप दिएको बालकलाई कंकर, कोणक, सकोण र कठिन
जस्ता बालग्रहको पनि डर हुँदैन ।

**वेणी येणी च संयुक्ता कुक्कुरा रक्तसारिका ।**
**प्रभुता स्वरितारात्रिर्न स्पशृन्ति इमाः शिशुम् ॥१४॥**

वेणी, येणी, कुक्कुरा, रक्तसारिका, प्रभुता, स्वरिता र रात्रि नामका सात थरी बालमातृकाले पनि यस्तौ धूप दिएको बालकलाई छुन सक्दैनन् ।

**जीवन्ति ते वर्षशतं धूपस्याऽस्य प्रभावतः ।**
**इमां विद्यां न यच्छन्ति ते नरा ब्रह्मघातिनः ॥१५॥**

यो धूपको असरले बालक सय वर्ष बाँच्दछ । जसले यो (धूप) विद्या अरुलाई बताउँदैन त्यो मानिस ब्रह्मघाती हुन्छ ।

## मन्दाग्निमा अर्क

**शुण्ठी पथ्या दाडिमत्वक्सगुडा वारुणी कृता ।**
**शोषणी सा द्विपालिका प्रोक्ता मन्दाग्निनाशिनी ॥१६॥**

अदुवा, हर्रो र दारिमको बोक्राको अर्क सक्खरसँग मिसाएर दुई पल पिउनाले मन्दाग्नि नाश हुन्छ ।

## हैजामा अर्क

**पञ्चकोल शिवा जाजी मरिचं चाम्लभावितम् ।**
**तदर्को हरति क्षिप्रं दुर्निवार विषूचिकाम् ॥१७॥**

पञ्चकोल (पिप्ला, पिप्लाको जरा, चाँभा, चितू र सुठो), हर्रो, जीरा, मरिचलाई अमिलोमा मिसाएर अर्क निकाल्नू । यसले कठिन हैजालाई पनि ठिक गर्दछ ।



## अजीर्णमा अर्क

**यवान्यर्कोमुस्तयुक्तः कट्वाम्लाभ्यां विलोडितः ।**
**गन्धपाषाणधूपेन वासितोऽजीर्णनाशनः ॥१८॥**

ज्वानु र मोथेको अर्कमा पिरो र अमिलो मिसाई गन्धकले बास्ना दिई पिउँदा अजीर्ण नाश हुन्छ ।

## विषमाग्नि (पाचनशक्तिमा हुने घटबढ) मा अर्क

**शुण्ठी कुलिञ्जन चाम्लभावितं तस्यचार्कतः ।**
**पटुयुक्तं हरेच्छीघ्रं विषमाग्निं न संशयः ॥१९॥**

अदुवा र कुलञ्जनलाई अमिलोमा भिजाएर अर्क निकाल्नू । यो अर्कमा नुन मिसाएर पिउनाले विषमाग्नि नाश हुन्छ, कुनै शङ्का गर्नु पर्दैन ।

## पाचन र डाहमा अर्क

**दुग्धं दधिघृतं मूत्रं पललं महिषोद्भवम् ।**
**भुङ्क्ते तदर्कौ भुञ्जीत गुर्वन्नभस्मकाग्निहृत् ॥२०॥**

भैंसीको दूध, दही, घिउ, मूत्र र मासुको अर्कले गरिष्ठ अन्नलाई खरानी पार्दछ र डाह नाश गर्दछ ।

## मन्दाग्निमा अर्क

**खुरासानी यवानी च कुवेराक्षो विडङ्गकम् ।**

**व्योषश्चैव कृतोह्यर्क स्त्वग्निमन्दरुजं हरेत् ॥२१॥**

खुरासानी ज्वानु, ज्वानु, करञ्ज, कालीकाठ र त्रिकटुको अर्कले मन्दाग्नि नाश गर्दछ ।

## जुम्रा र लिखामा अर्क

**रसेन्द्रेण समायुक्तश्चार्को धत्तूरपत्रजः ।**
**नागवल्लीभवो वापि यूकालिक्षाविनाशनः ॥२२॥**

धतुराको पातको अर्क वा पानको अर्कमा शुद्ध पारो मिसाएर टाउकामा दले जुम्रा र लिखा नष्ट हुन्छन् ।

## उडुस आदि र अर्क

**खट्वायां वा गृहेवापि हरितालार्क लेपनात् ।
मत्कुणा मक्षिकाः सर्पा मसका यान्ति तत्क्षणात् ।।२३।।**

खाट वा घरमा हरितालको अर्क दल्नाले उडुस, झिँगा, सर्प र लामखुट्टे तुरुन्त भाग्दछन् ।

## कफविकार, पेटका कीरा र अर्क

**तक्रे दत्वा पलाशस्य बीजान्यर्कं समादिशेत् ।
तदर्कं पानात्कफहृत्कृमिनां नाशनं भवेत् ।।२४।।**

पलाशका गेडालाई मोहीमा भिजाएर निकालिएको अर्क पिउनाले
कफविकार र कीरा नाश गर्दछ ।



## चमजुम्रा र अर्क

**रुधिरस्थेषु कृमिषु गन्धकार्कं पिबेत्तु यः ।
रात्रौ जागरणं कुर्यात् रक्तकृमिनिवर्त्तते ।।२५।।**

गन्धकको अर्क पिई रातभर जागराम बस्नाले चमजुम्रा (रक्तकृमि) नष्ट हुन्छन् ।

## पाण्डुरोगमा अर्क

**लोहचूर्णं वापि लोहंकिट्टचूर्णं पृथक्पृथक् ।
फलत्रिकाथव्योषार्क भावितं पाण्डुनाशनम् ।।२६।।**

फलाम वा कीटको धुलोमा त्रिफला र त्रिकटु मिसाई निकालिएको अर्कले पाण्डुरोग निको हुन्छ ।

## कमलपित्त र अर्क

**त्रिफलार्को गुडूच्यार्को समं देयं तु माक्षिकम् ।**
**दद्यात्प्रातः कामलाहृद्द्रोणपुष्परसाञ्जनात् ॥२७॥**

त्रिफला र गुर्जोको अर्कमा बराबर मात्रामा मह मिसाएर पिउने गरे कमलपित्त रोग निको हुन्छ । यसमा बिहान बिहान गुम्पातीको रस वा चुत्रोको रसाञ्जन खान दिनु पर्दछ ।

## पाण्डुरोग र अर्क

**हरीतकी गुडूची च पर्यायं तक्रभाविता ।**

**तदर्को नाशयत्येव पाण्डु मृद्भक्षणोद्भवम् ॥२८॥**

हर्रो र गुर्जोलाई धेरै पटक मोहीमा भिजाएर अर्क निकाल्नू । यो अर्क पिउनाले माटो खाएर हुने पाण्डुरोग नाश गर्दछ ।

## कुम्भकामला रोग र अर्क

**गोमुत्र भावयेद्धीमान्पर्यायेणा शिलाजतुम् ।**
**निष्कासितस्तदर्कस्तु कुम्भकामलिकापहः ॥२९॥**

शिलाजितलाई पटक पटक गहुँतमा भिजाई निकालिएको अर्क पिउनाले कुम्भकामला नामक पाण्डुरोग निको हुन्छ ।

## हलीमक रोग र अर्क

लौहचूर्णं घनार्केण भावयेच्छतवारकम् ।
पिवेत्तुखादिरार्केणहलीमकनिकृन्तनम् ॥३०॥

फलामको धुलोलाई नागरमोथेको रसमा सय पटक भिजाएर सुकाउनू । यसलाई खयरको अर्कसँग पिउनाले हलीमक नामक पाण्डुरोग निको हुन्छ ।

## रक्तपित्त र अर्क

अट्टरूषकमृद्वीकापथ्यार्कश्च सशर्क्करः ।
वृषार्कोऽयं समधुको रक्तपित्त निवारणः ॥३१॥

असुरो, अङ्गूर र हर्रोको अर्कलाई सखर मिसाएर पिएमा अथवा मुसलिन्डीको अर्क मह मिसाएर पिउनाले रक्तपित्त रोग निको हुन्छ ।



लोध्रप्रियङ्गुमृद्वीकाचन्दनार्को सितान्वितः ।
वासाया क्षौद्रसंयुक्तो बन्ध्या या रक्तपित्तहृत् ॥३२॥

सेतो लोध, कागुनो, अङ्गूर र चन्दनको अर्क मिस्रीसँग अथवा असुरोको अर्क महसँग अथवा फल नफल्ने चटेलको अर्क महसँग खानाले रक्तपित्त ठिक गर्दछ ।

## नाकबाट रगत बहने रोग र अर्क

अर्को दाडिमपुष्पोत्थो मृद्वकासम्भववोऽपि वा ।
पानान्नस्याद्धरेर्नासारक्तमाम्रास्थिजोऽपि वा ॥३३॥

दारिमको फूलको अथवा अङ्गूरको अथवा आँपको कोयाको अर्क पिउनाले र नस हाल्नाले नाकबाट रगत आउन बन्द हुन्छ ।

## घाँटी पोलेकोमा अर्क

**द्राक्षाभया पिप्पली नामर्कश्च सितयायुतः ।**
**मधुना कण्ठ दाहघ्नः पित्तश्लेष्महरः परः ॥३४॥**

दाख, हर्रो र पिप्लाको अर्कमा मिस्री र मह मिसाएर पिउनाले घाँटी पोलेको ठिक हुन्छ । यसले पित्तविकार र कफविकार पनि नाश गर्दछ ।

## अम्लपित्त र अर्क

**छिन्नोद्भवानिम्बपत्रपटोलदलसम्भवः ।**

**अर्कः क्षौद्रान्वितो हन्यादम्लपित्तं सुदारुणम् ॥३५॥**

गुर्जो, निमका पात र पर्बलका पातको अर्क निकाली महसँग पिउनाले कठिन खालको अम्लपित्त ठिक हुन्छ ।

## क्षयरोगमा अर्क

**ऊर्ध्वमूर्ध्वं द्विगुणिता त्वगेलापिप्पलीतुगा ।**
**सितापलार्कः सक्षौद्रः सघृतो राजयक्ष्मनुत् ॥३६॥**

तेजपात, अलैंची, पिप्ला, वंशलोचन र मिस्री क्रमशः दोबर हाली निकालिएको अर्क घिउ र महसँग पिउनाले क्षयरोग नाश हुन्छ ।

## शरीर सुन्निने रोग र अर्क

**अजस्य हृदयार्कस्तु तन्मातृदुग्धसाधितः ।**
**जीवनीयकषायन्तु पिबेच्छोषक्षयप्रणुत् ॥३७॥**

बोकाको मुटुको अर्क अथवा बाख्रीको दूधमा पकाइएका जीवनीय गण औषधीको काँढापानीले शरीर सुन्निने रोग र क्षयरोग नाश हुन्छ ।

## दिउसको सुताइ र अर्क

**चन्दनोशीरसेवन्ती शतपत्राब्दसम्भवः ।**
**अर्को हरेदध्वशोषं दिवा सुप्तम्यवेगतः ॥३८॥**

चन्दन, खस, सेतो गुलाफ, सयपत्री र नागरमोथेको अर्कले हिँडेर सुन्निएको तथा दिउस सुतेर हुने हानी (वा दिउस सुत्ने आदत) नाश गर्दछ ।



## घाउले सुन्निएकोमा अर्क

**दुग्ध संस्थापित कटुत्रयादर्कं समाहरेत् ।**
**ससितं व्रणशोथघ्नं यूषमांसरसाशिनः ॥३९॥**

त्रिकटुलाई दूधमा भिजाएर निकालिएको अर्क मिस्रीसँग पिउनाले र त्यसपछि मासुको रस पिउनाले घाउका कारण सुन्निएको ठिक हुन्छ ।

## छातीको घाउमा अर्क

**बलाऽश्वगन्धा कम्भारी बटपत्री पुनर्नवा ।**
**दुग्धा निर्वापितोवाऽर्कः उरःक्षतनिवारणः ॥४०॥**

बलु, अश्वगन्धा, खमारी, बरका पात र पुनर्नवा दूधमा भिजाएर निकालिएको अर्क पिउनाले छातीमा (फोक्सोमा) हुने घाउ ठिक हुन्छ ।

## कफविकार र अर्क

**धूर्तबीज त्रिकटुयवान्यर्क विभावितम् ।**
**लवणं शतवारं च कफहन्यात्सुदारुणम् ॥४१॥**

धतुराका गेडा, त्रिकटु र ज्वानु सिधेनुनमा सय पटक भिजाएर निकालिएको अर्क पिउनाले गढेको कफविकार नाश हुन्छ ।

## खोकी र अर्क

**कण्टकारी जटार्कस्तु सकृष्णः सर्वकासहा ।**



कण्टकारीको जराको अर्कमा पिप्लाको धुलो मिसाएर पिए सबै खालका खोकी निको हुन्छ ।

**ककुभस्यत्वचा चूर्णं वासर्केण विभावितम् ॥४३॥**
**सितोपला घृतमधुसंयुक्तः क्षयकासहृत् ।**

खरी रुखको बोक्राको धुलो असुरोको अर्कमा भिजाएर मिस्री, घिउ र महसँग खानाले क्षयरोग र खोकी ठिक हुन्छ ।

**कण्टकारीयुगद्राक्षावासाकर्चूरनागरैः ॥४४॥**
**पिप्पलीखाखसैरर्कः शर्क्करामधुसंयुतः ।**
**शुष्ककासहरश्चैषो महादेवेन भाषिताः ॥४५॥**

ठूलो बिही, सानो बिही, दाख, असुरो, कचूर, सुठो, पिप्ला र अफिमको अर्क शक्खर र महसँग खानाले सुक्खा खोकी निको हुन्छ भनी भगवान् महादेवले बताउनु भएको छ ।

## दमरोग र अर्क

**कूष्माण्डकशिफार्कस्तु कोष्णः श्वासंक्षणाद्धरेत् ।**
**आर्द्रकार्को माक्षिकेन युक्तः श्वासनिवारणः ॥४५॥**

भुइँ कुभिण्डोको जराको अर्क तात्तातो पिउनाले दमरोग तुरुन्त निको हुन्छ । अदुवाको अर्कमा मह मिसाएर खानाले पनि दमरोग नाश हुन्छ ।

## बाडुली र अर्क

**स्विन्ना दुग्धेतु या शुण्ठीतदर्कस्तत्क्षणाद्धरेत् ।**
**गुडद्रवेण वा सिद्धोहन्याद्धिक्कां न संशयः ॥४६॥**

सुठोलाई दूधमा भिजाएर निकालिएको अर्क पिउनाले बाडुली रोग तुरुन्त निको हुन्छ । अथवा सक्खरपानीमा भिजाएर बनाइएको सुठोको अर्कले निश्चय नै बाडुली निको पार्दछ ।



## स्वर बसेकोमा अर्क

**अर्को वा पञ्चकोलानां श्रृङ्गवेररसान्वितः ।**
**गोघृतक्षौद्रसंयुक्तः स्वरभेदविनाशनः ॥४७॥**

पञ्चकोलको अर्क अदुवाको रस, गाईको घिउ र महसँग खानाले स्वर बसेको ठिक गर्दछ ।

**निम्बूरसेन मधुना मरिचैरवधूलितम् ।**
**कुलिञ्जनार्कं पिवति राक्षसः किन्नरायते ॥४८॥**

कुलिञ्जनको अर्कमा कागतीको रस, मह र मरिच हालेर पिउनाले राक्षसको स्वर पनि किन्नरको जस्तो मधुर हुन्छ ।

## अरुची र अर्क

**मूलपत्रं यवानी च तितिडिरससंयुतः ।**
**सटिनो हन्ति गण्डूषादर्कः सर्व्वमरोचकम् ॥४९॥**

ज्वानुको जरा र पातको अर्कमा चुक अमिलो मिसाएर कुल्ला गरे सबै प्रकारका अरुची नाश हुन्छ ।

## वाकवाकीमा अर्क

**अश्वत्थत्वग्भवो वापि कमलाक्षोद्भवस्तथा ।**
**माक्षिकाविट्समुत्थो वा दुर्वाजो वा हरेद्वमीन् ॥५०॥**

पीपलको बोक्रा र कमलगट्टाको अथवा सुनामखी (उपधातु) को अथवा दूबोको अर्कले वाकवाकी रोग निको हुन्छ ।



## तिर्खा र अर्क

**मुस्तपर्पटकोदीच्यधान्यचन्दनवालकैः ।**
**एतपदर्को हरेदाशु सर्वतृष्णां न संशयः ॥५१॥**

नागरमोथे, पित्तपापडा, सुगन्धवाल, धनियाँ, चन्दन र नेत्रवालाको अर्क पिउनाले निश्चय नै तुरुन्त सबै खाले तिर्खा नाश हुन्छ ।

## मुख सुन्निएकोमा अर्क

**अमलं कमलं कुष्ठं लाजाश्ववटरोहकम् ।**
**अर्कीकृतं मधुयुतं मुखशोषनिवारणम् ॥५२॥**

अमला, कमलगट्टा, कूट, धानको लाजा र बरको जराको अर्क निकाली मह मिसाएर पिउनाले मुख सुन्निएको ठिक हुन्छ ।

## क्षयरोग र मुटुको रोगमा अर्क

**मध्वर्को वाथ दुग्धार्को हिंसेत्कोपं क्षयोद्भवम् ।**
**तृष्णां हरेच्च रक्तार्को हतक्षतसमुद्भवाम् ।।५३।।**

मह वा दूधको अर्क पिउनाले क्षयरोग नाश हुन्छ । रगतको अर्क पिउनाले तिर्खा र मुटुको घाउमा फाइदा गर्दछ ।

## आमविकारमा अर्क

**षडूषणवचाविल्बजातोऽर्कस्त्वामसम्भवाम् ।**



षडूषण, बोभ्हो र बेलको अर्कले आमविकार नाश गर्दछ ।

## तिर्खा र वाकवाकीमा अर्क

**मदनार्कः समाहन्यात्तृष्णांगुर्वन्नजांममिम् ।।५४।।**

मैनफलको अर्कले पचाउन कठिन हुने अन्न खाई हुने तिर्खा र वाकवाकी ठिक गर्दछ ।

## तिर्खामा अर्क

**दुग्धस्यार्कः सितायुक्तः शतपत्रीसुवासितः ।**
**अतिरुग्णां दुर्वलानां देयं तृष्णानिवृत्तये ।।५५।।**

दूधको अर्कमा मिस्री मिसाई सयपत्रीले बास्नादार बनाई पिउनाले रोगजन्य दुर्बलताले लाग्ने तिर्खा मेटिन्छ ।

## मूर्छामा अर्क

**कोलमज्जोषणोशीरकेशरैः पुष्पवासितैः ।**
**निष्कासितोऽर्कः ससितोमूर्च्छाँ जयति दुस्तराम् ।।५६।।**

बरको गुदी, मरिच, खस र केसरको अर्क निकाली सुगन्धित फूलले बास्ना आउने बनाई मिस्री मिसाएर पिउनाले डरलाग्दो मूर्च्छारोग  नाश हुन्छ ।

## बेहोसीमा अर्क

**मधूकसारसिन्धूत्थ व चोषणकणैः समः ।**

**आसामर्कस्यनस्यं स्याच्छीघ्रं सञ्ज्ञाप्रवोधकृत् ।।५७।।**

महुवाको रस, सिधे नुन, मरिच र पिप्ला बराबर मात्रामा मिसाई अर्क निकाल्नू । यो अर्कको नस हाल्नाले बेहोस भएको मान्छेको तुरुन्त होस आउँदछ ।

## विषको असर र अर्क

**निर्विष्यार्को मत्स्या पित्ता युक्तो विषभवां जयेत् ।**
**मद्युजं तु पिबेन्मद्यं सुगन्धद्रव्यवासितम् ।।५८।।**

निर्विषी (बुटी विशेष) को अर्कमा कटुकी मिसाएर पिउनाले विषको असर समाप्त हुन्छ । यो मद्यलाई सुगन्धित द्रव्यले बास्ना आउने बनाएर पिउनु उत्तम हुन्छ ।

## आमविकारमा अर्क

पिबेद्दुरालभाजार्कं सघृतं चामशान्तये ।

आमविकार शान्त पार्न सिस्नुको अर्क घिउसँग पिउनू ।

## तन्द्रामा अर्क

ऊषणार्कोऽगस्तिरसैः कृतोनश्येच्च तन्द्रिकाम् ॥५९॥

कालो मरिचको अर्क  अगस्तिको रस मिसाएर पिउनाले तन्द्रा नाश हुन्छ ।

## निद्रा नलाग्ने अर्क



सैन्धव श्वेत मरिचं सर्षपा कुष्ठमेव च ।
वत्समूत्रेण जातार्कस्तुस्यान्निद्रा निवारणः ॥६०॥

सिधे नुन, सेतो मरिच, सर्सिउँ र बाच्छाको मूत्र मिसाएर अर्क
निकाली पिउनाले निद्रा लाग्दैन ।

## मदात्ययमा अर्क

मद्यं खर्जूर मृद्वीका परूषकरसैर्युतम् ।
सदाडिमरसैः पीतं सर्वमद्यात्ययं जयेत् ॥६१॥

खजुरको मद्यमा दाख, फाल्सा र दारिमको रस मिसाएर पिए सबै
खालका मदात्यय रोग नाश हुन्छन् ।

कूष्माण्डार्को गुडयुतः कोद्रबोत्थमदात्यये ।
दुग्धार्कः सितया युक्तो धूर्त्तजेतु मदात्यये ॥६२॥

भुइँ कुभिण्डोको अर्कमा सक्खर मिसाएर पिउनाले कोदोको मदात्यय नाश हुन्छ । दूधको अर्कमा मिस्री मिसाएर पिए धतुराको मदात्यय नाश हुन्छ ।

जलार्कशीतलो हन्ति छर्दिमूर्च्छातिसारजम् ।
ताम्बूलोत्थश्चचूर्णार्क शर्करार्कस्तु पूगजम् ॥६३॥

खसको अर्कले शीतल गर्दछ । यसले वाकवाकी, बेहोसी र अतिसारजन्य मदात्यय नाश गर्दछ । चूनको अर्कले पानको मदात्ययलाई र शक्खरको अर्कले सुपारीको मदात्ययलाई नाश गर्दछ ।

जातीफलोत्थं पथ्यार्कोऽम्लजोभंगा समुद्भवम् ।

शीनतोयावगाहोत्थं शर्करा दधिजोऽर्ककः ॥६४॥

हर्रोको हर्कले जाइफलको मदात्यय, अमिलोको अर्कले भाङको मदात्ययलाई तथा शक्खर र दहीको अर्कले धेरै बेर चिसो पानीमा नुहाउनाले मदात्ययलाई नाश गर्दछ ।

अयमेव विभीतोत्थं खाखसोत्थन्तदुद्भवः ।
निम्बार्कश्चाहि फेनोत्थं हरेत्पानात्ययम्प्रिये ॥६५॥

यही अर्कले बर्रोको मदात्ययलाई, खसको अर्कले खसको मदात्ययलाई र नीमको अर्कले अफिमको मदात्ययलाई नाश गर्दछ ।

## डाह र अर्क

कोलामलकसंयुक्तं धान्यार्क सर्वदाहनुत् ।
छादयेत्तस्य सर्वाङ्गन्तदर्काक्तेनवाससा ॥६६॥

बयर, अमला र धनियाँको अर्कले सबै किसिमका डाह नाश गर्दछ । जसका शरीरभरी डाह भइरहेको छ, उसलाई यही अर्कमा कपडा भिजाएर ढाकी दिनू ।

## पसिना आउने रोगमा अर्क

**सर्वाङ्गार्द्धाङ्गक स्वेदो वृन्ताक्यर्कप्रलेपनात् ।**
**हस्तपादभवः स्वेदो मर्द्दनाद्गच्छतिभृशम् ॥६७॥**

भण्टाको अर्क दल्नाले आधा वा पूरै शरीरको पसिना नष्ट हुन्छ । यसैले हातगोडामा आउने पसिना पनि नष्ट हुन्छ ।

## उन्माद रोगमा अर्क

**शङ्खपुष्पी भवो वाऽपि कूष्माण्डफलसम्भवः ।**

**मधुकुष्ठान्वितश्चार्कः सर्वोन्माद विनाशकः ॥६८॥**

शङ्खपुष्पी अथवा भुइँकुभिण्डोको अर्कमा मह र कूट मिसाए पिए सबै खालका उन्माद नाश हुन्छन् ।

**ज्वालामरिचजार्कस्य पानान्नस्याद्विलेपनात् ।**
**अञ्जनात्संक्षयं यान्ति भूतोन्मादक्षयः क्षणात् ॥६९॥**

चितू र कालो मरिचको अर्क पिउनाले, नस हाल्नाले वा दल्नाले वा आँखामा लगाउनाले भूतका कारण हुने उन्माद तुरुन्त नष्ट हुन्छ ।

## छारेरोगमा अर्क

**कतकस्य फलस्यार्को नस्यात्कर्णप्रपूरणात् ।**
**पानादञ्जनतो हन्यादपस्मारन्न संशयः ॥७०॥**

निर्मली फलको अर्क नस हाल्नाले, कानमा हाल्नाले, पिउनाले र आँखामा लगाउनाले निश्चय नै छारे रोग नाश हुन्छ ।

## कान नसुन्दाको अर्क

**वचात्वक्पिप्पली शुण्ठी हरिद्रायष्टिसैन्धवम् ।**
**अजमोदाजाजिजोऽर्कः कुर्याच्छ्रुतिधरन्नरम् ॥७१॥**

बोझो, तेजपात, पिप्ला, सुठो, हलेदो, जेठीमधु, सिधेनुन, अजमोदा र कालो जीराको अर्क पिउनाले कान राम्ररी सुन्ने बन्दछ ।

## हात सुन्निदाको अर्क

**बाहुशोषेबला मूल कृतार्कः सैन्धवान्वितः ।**



बलुको जराको अर्क सिधेनुनसँग पिउनाले हात सुन्निएको ठिक हुन्छ ।

## आध्मान रोगमा अर्क

**आध्मानेक्षौद्र खण्डाद्यै स्त्रिवृता पिप्पलीभवः ॥७२॥**

निसोथ र पिप्लाको अर्कमा मह र सक्खर (खुँदो) मिसाएर पिए आध्मान रोग ठिक हुन्छ ।

## गृध्रसि रोगमा अर्क

**अतिस्विन्नन्तुगोमूत्रे बीज मेरण्डजन्ततः ।**
**कृतार्कः पलमात्रस्तु पेयोगृध्रसि नाशनः ॥७३॥**

अरिडका गेडा गहुँतमा राम्ररी भिजाई अर्क निकाल्नू । यो अर्क पिउनाले गृध्रसि रोग ठिक हुन्छ ।

## क्रोष्टशीर्ष रोगमा अर्क

**गुडूची त्रिफलाम्भोभिर्भावितंगुग्गुलं बहु ।**
**क्षारेणै रण्डतैलेन तदर्कः क्रोष्टशीर्षहा ॥७४॥**

गुर्जो र त्रिफला मिसाइएको पानीमा निकै पटक भिजाएर गोकुलधूपको अर्क निकाली दूध र अरिडको तेलमा मिसाएर पिउनाले क्रोष्टशीर्ष रोग ठिक हुन्छ ।

## वातरोगमा अर्क

**शेफाल्येरण्डसेहुण्डधत्तूरार्कोऽश्वमारकैः ।**

**वक्रीकृत शिवामांस विषैस्सहसमीरहा ॥७५॥**

नेवारी, अरिड, सिउँडी, धतुरो, कँडेल र स्यालको मासु (वा हर्रोको गुदी) को अर्क कमलको रेसासँग पिउनाले वातरोग नाश हुन्छ ।

**गुडूच्यार्कः शुण्ठियुक्तो वातरक्तहरः परः ।**
**वत्सदन्युद्भवार्को वा पीतोगुग्गुलु संयुतः ॥७६॥**

गुर्जोको अर्कमा सुठो वा गोकुल धूप मिसाएर पिए वातरक्त रोग निको हुन्छ ।

## ऊरुस्तम्भ रोगमा अर्क

**त्रिफला ग्रन्थिकव्योषभवमर्कं समाक्षिकम् ।**
**ऊरुस्तम्भ विनाशाय समूत्रं वा पुरार्ककम् ॥७७॥**

त्रिफला, पिप्लाको जरा र त्रिकटुको अर्क महसँग पिउनाले ऊरुस्तम्भ रोग ठिक गर्दछ । अथवा गोकूलधूप (पुर) को अर्कमा गहुँत मिसाएर पिउनाले पनि यो रोग निको हुन्छ ।

## आमवात र शरीर रुखो भएकोमा अर्क

**सटीशुण्ठीशिवासोग्रा देवाह्वातिविषास्मृता ।**
**आसामर्क पिबेदामवाते रूक्षे च भक्षयेत् ॥७८॥**

कालो हलेदो, सुठो, हर्रो, बोभ्मो, देवदारु र उतिसको अर्क निकाली आमवात र शरीर रुखो भएको बेलामा पिउने गर्नू ।

## पित्तजन्य रोगमा अर्क

**अर्कस्तु शतपत्र्या वा सेवन्त्याद्राक्षाजोऽपि वा ।**

**चन्दनोशीरजो वाऽपि हन्यात्पित्त भवान् गदान् ॥७९॥**

सयपत्री वा सेतो गुलाफ वा दाख वा चन्दन वा खसको अर्कले सबै खालका पित्तजन्य रोग नाश गर्दछ ।

## विरेचन, पाचन र कफविकारका अर्क

**वचार्को वमनं त्रिवृदर्को विरेचनम् ।**
**तुम्बुरार्कः पाचनेन कफ रोगान्न संशयः ॥८०॥**

बोभ्मोको अर्क वमनमा, सेतो निशोधको अर्क विरेचनमा र धनियाँको अर्क पाचनमा तथा कफविकारमा फाइदाजनक हुन्छ, शङ्का गर्नै पर्दैन ।

## शूल रोगमा अर्क

**अश्वविष्ठा भवश्चार्को मृष्टहिंगुसमन्वितः ।**
**तत्कालं हरते शूलं साध्यासाध्यान्नसंशयः ॥८१॥**

घोडाको लादीको अर्क निकाली भुटेको हिङ मिसाएर पिए सजिलै ठिक हुने नहुने सबै खालका शूल रोग निको हुन्छ, शङ्का गर्न पर्दैन ।

## पङ्क्तिशूल रोगमा अर्क

**त्रिवृदेरण्डदन्ती नामर्केणैव विरेचनम् ।**
**निम्बार्कः कठुतुम्ब्यर्कः पङ्क्तिशूलहरास्त्रयः ॥८२॥**

सेतो निशोध, अरिड र अजयपालको अर्क पिउनाले विरेचन हुन्छ । यो तथा नीम वा तितो डल्ले लौकाको अर्कले तीन प्रकारका पङ्क्तिशूल नाश गर्दछ ।



## उदावर्त रोगमा अर्क

**सव्योषं पिप्पलीमूल त्रिवृद्दन्ती च चित्रकम् ।**
**एतदर्कसहगुडैरुदावर्त्त विनाशनम् ॥८३॥**

त्रिकटु, पिप्लाको जरा, सेतो निशोध, अजयपाल र चितूको अर्क सक्खरसँग खानाले उदावर्त रोग नाश हुन्छ ।

## आध्मान रोगमा अर्क

**त्रिवृत्कृष्णाहरीतक्यो द्विचतुपञ्चभागिकाः ।**
**गुडयुक्तश्चैतदर्को हन्त्याध्मानन्न संशयः ॥८४॥**

सेतो निशोध, पिप्ला, हर्रो क्रमशः दुई, चार र पाँच भाग लिई निकालिएको अर्क सक्खर मिसाएर पिउनाले आध्मान रोग निको हुन्छ, शङ्का गर्न पर्दैन ।

## मुटुका रोगमा अर्क

**हरीतकी वचाशस्त्रा पिप्पली नागरोद्भवः ।**
**सटीपुष्करमूलोत्थश्चार्को हृद्रोगनाशनः ॥८५॥**

हर्रो, बोझो, पिप्ला, सुठो, कचूर, मलेवा (सटी) र चाभोको अर्कले मुटुका रोग ठिक गर्दछ ।

## गुल्मरोगमा अर्क

**कुमारिकार्कः सरसः सर्वगुल्मविनाशनः ।**

**दुग्धशुक्तिभवर्क वा भक्षयेद्वा गुडान्वितम् ॥८६॥**

घिउकुमारीको अर्कमा पारो मिसाएर पिउनाले अथवा दूध र सिपीको अर्कमा सक्खर मिसाएर पिउनाले सबै खालका गुल्मरोग निको हुन्छ ।

## रक्तगुल्ममा अर्क

**पलासवज्रशिखरीचिञ्चार्क तिलनालजाः ।**
**यवज सर्जिका चेति क्षारार्को रक्तगुल्मनुत् ॥८७॥**

पलाश, सिउँडी, दतिवन, अमिली, तिलको बोट, जवाखार र सज्जीखारको अर्कले रक्तगुल्म नाश गर्दछ ।

## फियोको रोगमा अर्क

**समुद्रशुक्तिजार्को वा पिप्पल्यर्कः सदुग्धकः ।**
**अर्कार्को वा सलवणः प्लीहरोग विनाशनः ॥८८॥**

समुद्री सिपी वा पिप्लाको अर्क दूधसँग पिउनाले अथवा आँकको अर्क सिधेनुनसँग खानाले फियोका रोग निको हुन्छ ।

## कलेजो सुन्निएकोमा अर्क

**कृष्णाब्दाम्यां समुद्भूतस्वाकः क्षारान्वितोपि वा ।**
**पूतीकरञ्जजोर्को वा यकृच्छूलविनाशनः ॥८९॥**

पिप्ला र नागरमोथे (अब्द) को अर्क आँकको क्षारसँग अथवा लेकपाङ्ग्रोको अर्क पिउनाले कलेजो सुन्निएको ठिक गर्दछ ।



## शरीर सुन्निएकोमा अर्क

**पुनर्नवा सातला च हरिद्रा च कुमारिका ।**
**एषामर्केण कोष्णोन स्वेदः पितं च शोथहृत् ॥९०॥**

पुनर्नवा, हात्तीकाने, हलेदो र घिउकुमारीको अर्क पिउनाले र तात्तातै दलेर पसिना निकाल्नाले शरीर सुन्निएको बस्दछ ।

## मूत्रकृच्छ्र रोगमा अर्क

**आरग्वधो दर्भकास पथ्या धात्री त्रिकण्टकः ।**
**यवास गिरिभेदार्कः सक्षौद्रो मूलत्रकृच्छ्रहा ॥९१॥**

राजवृक्ष, कुश, सजिवन, हर्रो, अमला, सानो गोखुर, सिस्नु र पाषाणभेदको अर्क महसँग खानाले मूत्रकृच्छ्र रोग नाश हुन्छ ।

## मूत्रघात रोगमा अर्क

**कुशकाशबलामूलनलेक्ष्वर्कः सितायुतः ।**
**धान्यागोक्षुरजोऽर्को वा ससितो मूत्रघातहा ॥९२॥**

कुश, काँस, बलुको जरा, नर्कट वा निगालो र उखुको अर्क मिस्रीसँग अथवा धनिया र गोखुरको अर्क मिस्रीसँग खानाले मूत्रघात रोग निको हुन्छ ।

## मधुमेह रोगमा अर्क

**कूष्माण्डार्को यवक्षारो हिंगुयुक्चाश्मरीप्रणुत् ।**
**शरपुङ्खाक्षारमुत्र भवोऽर्क शर्करां हरेत् ॥९३॥**



भुइँकुभिण्डोको अर्कमा जवाखार र हिङ मिसाएर खाए पत्थरी रोग तथा रातो साकिनु र गहुँत मिसाएर निकालिएको अर्क पिउनाले मधुमेह रोग नाश गर्दछ ।

**गुडूच्यर्कः सितायुक्तो गोक्षुरार्कोऽथवा हरेत् ।**
**स्तभिन्यर्कोऽथवा मेहं मण्डलादुग्धसेविनः ॥९४॥**

गुर्जो वा गोखरुको अर्क मिस्री मिसाए पिउने गरेमा वा स्तम्भिनी (?) अर्क पिउनाले मधुमेह निको हुन्छ । तर पन्ध्र दिनसम्म दूध (मात्र ?) पिउने गर्नु पर्दछ ।

## प्रमेहमा अर्क

**पिप्पल्यर्कों मधुयुतो महामेश विनाशनः ।**

पिप्लाको अर्क महसँग पिउनाले अति कठिन प्रमेह रोग (महामेह) पनि निको हुन्छ ।

## शरीरको दुर्गन्धमा अर्क

**विल्बपत्रभवोऽर्कश्च देहदौर्गन्ध्यनाशनः ॥९५॥**

बेलपत्रको अर्कले शरीरको दुर्गन्ध नाश गर्दछ ।

## मोटो हुने अर्क



**हयंगवासगोक्षूरास त्वचावट काण्डकैः।**
**निष्कासितो वा तन्मांसैरर्कः स्थौल्यकरः परः ॥९६॥**

अश्वगन्धा, गोखुर, तेजपात र बरोंको जराबाट निकालिएको अर्कले शरीरलाई अत्यन्त मोटो बनाउँदछ ।

## कुष्ठरोगमा अर्क

**मञ्जिष्ठा त्रिफला तिक्ता वचादारु निशामृता ।**
**निम्बएभिः कृतोऽर्कस्तु पातात्कुष्ठं विनाशयेत् ॥९७॥**

मजिठो, त्रिफला, कटुकी, बोझो, देवदारु, हलेदो, गुर्जो र नीम मिसाई निकालिएको अर्क पिउनाले कुष्ठरोग नाश हुन्छ ।

## सिध्म कुष्ठमा अर्क

**सर्षपा रजनीकुष्ठं मूलबीजं प्रियङ्गवः ।**
**काश्मीरी चैतदर्कस्तु परिसिध्मं विनाशयेत् ॥९८॥**

सर्सिउँ, हलेदो, कूट, मूलाको गेडा, प्रियङ्गु र खमारी मिसाएर निकालिएको अर्कले सिध्म नामक कुष्ठरोग निको हुन्छ ।

## पामा रोगमा अर्क

**मञ्जिष्ठा त्रिफलालाक्षालाङ्गली रात्रिगन्धकाः ।**
**समैस्तिलैश्च गोधूमैर्हरेत्पामां महद्रुजम् ॥९९॥**

मजिठो, त्रिफला, लाहा, हलहले र हलेदो बराबर हाली त्यसमा तिल र गहुँ मिसाई निकालिएको अर्क पिउनाले पामा रोग नाश हुन्छ ।



## दादमा अर्क

**कुष्ठ कृमिघ्न दद्रुघ्न निशासैन्धवसर्षपः ।**
**आम्रास्थि चैतदर्कोऽयं लेपाद्दद्रुं विनाशयेत् ॥१००॥**

कूट, वायुविडङ्ग, दद्रुघ्न (?), हलेदो, सिधे नुन, सर्सिउँ र आँपको कोया मिसाएर निकालिएको अर्क दल्नाले दाद निको हुन्छ ।

**इति लङ्केश्वर रावण कृतार्कप्रकाशे पञ्चमं शतकं संपूर्णम्**

**रावण लिखित अर्कप्रकाश अन्तर्गत पाँचौं शतकको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो**

# ॥ अथ षष्ठं शतकम् ॥

## गलगण्ड रोगमा अर्क

**श्वेतापराजितामूलजातोऽर्कः सर्पिषा सह ।**
**गलगण्ड हरेदेव मण्डलात्पथ्यभोजनः ॥१॥**

सेतो अपराजिताको जराको अर्क घिउसँग खानाले गलगण्ड रोग नाश गर्दछ । तर पन्ध्र दिनसम्म पथ्य भोजन गर्नुपर्दछ ।

## गण्डमाला रोगमा अर्क

**काञ्चनारत्वचोऽर्कस्तु शुण्ठीचूर्णन संयुतः ।**
**माक्षिकाढ्यो गण्डमालां बहुकालोद्भवामपि ॥२॥**



कोइरालाको बोक्राको अर्कसँग सुठो र मह मिसाएर खानाले पुरानो गण्डमाला रोग पनि निको हुन्छ ।

## गाँठा रोगमा अर्क

**सर्जिकामूलकक्षारजातः शङ्खस्य चूर्णयुक् ।**
**कृतस्तेन प्रलेपश्चेद्ग्रन्थि हन्ति न संशयः ॥३॥**

सज्जिखार र मूलाको क्षारको अर्क निकाली त्यसमा शङ्खको धुलो मिसाउनू । यो दल्नाले कडा खालको गाँठा (खिल) पनि नाश हुन्छ ।

## बोसोविकार र अर्बुद रोगमा अर्क

**हरिद्रा लोध्र पतङ्ग गृहधूममनश्शिलाः ।**
**मधुपगाढश्चमर्कस्तु मेदोर्बुदहरः परः ॥४॥**

हलेदो, लोध, चन्दन विशेष (पतङ्ग), घरको धुवाँ (ध्वाँसो), मनशिला र मह मिसाएर निकालिएको अर्क बोसोविकार र अर्बुद रोग नष्ट हुन्छ ।

**वटदुग्ध प्रगाढे च सप्ताहं कुष्ठरोमके ।**
**तदर्कस्य प्रलेपेन हरेदस्यार्बुदं क्षणात् ॥५॥**

बरको जराको गाढा दूधमा कूट र सामर नुन एक हप्तासम्म भिजाई निकालिएको अर्क दल्नाले अर्बुद रोग तुरुन्त निको हुन्छ ।



## हात्तीपाइले रोगमा अर्क

**धत्तुरैरण्डनिर्गुण्डीवर्षाभूशिग्रुमूलजैः ।**
**अर्कैः पिष्टा सर्षपास्तु प्रलेपाच्छ्लीपदापहः ॥६॥**

धतुरो, अरिड, नेवारी, रातो पुनर्नवा र सैजनको जरा मिसाएर अर्क निकाली त्यसमा सर्सिउँ पिँधी लेप लगाउनाले हात्तीपाइले रोग नाश हुन्छ ।

## विद्रधिरोगमा अर्क

**यवगोधूममुद्गानां पिष्टं सम्यग्बिलोडितम् ।**
**विषमुष्टिभवार्केण विलेपाद्विद्रधि प्रणुत् ॥७॥**

जौ, गहुँ र मुगीको पिठो विषमुष्टि (बकाइनो, खिरौंलो ?) को अर्कमा राम्ररी घोलेर दल्नाले विद्रधिरोग नाश हुन्छ ।

**क्षौद्रजातेन मद्येन क्षालयेत्पक्वविद्रधिक् ।**
**अहिफेनाक्षफेनाभ्यां पूरणाद्विद्रधिं हरेत् ॥८॥**

महको मद्यले पाकेको विद्रधिलाई धुनू । अनि त्यसमा अफिम र बर्रोको चोप (अक्षफेन ?) भर्नाले विद्रधि नाश हुन्छ ।

## सुजनमा अर्क

**वातघ्नौशधजातार्कैस्तन्मांसार्कैस्तथा घृतैः ।**
**उष्णैः संसेचयेच्छोथं काञ्जिकार्केण वातजम् ॥९॥**



वातनाशक अर्क मासुको अर्कसँग मिसाएर घिउ मिसाई तातोमै सेक्नाले सुन्निएको बस्दछ । काँजीको अर्क दलेर सेक्नाले पनि वातजन्य सुजन बस्दछ ।

**पित्तरक्ताभिघातोत्थं शोथं सिञ्चेच्च शीतलैः ।**
**क्षीराज्य मधुखण्डेक्षुजातार्केर्मालतीभवै ॥१०॥**

पित्तजन्य, रक्तजन्य र चोटपटक जन्य सुजनमा चिसो दूध, घिउ, मह, सक्खर र उखुको रसको अर्कमा चमेलीको रस मिसाएर सेक्दा फाइदा हुन्छ ।

**कफघ्नौषसञ्ज्ञातैरर्कैरुष्णैश्च सेचयेत् ।**
**तैलदुग्धाम्बुमूत्रैर्वा शोथं श्लेष्मसमुद्भवम् ॥११॥**

कफजन्य सुजनमा कफ नाशक औषधीको अर्क अथवा तेल, दूध, पानी र गहुँत मिसाएर सेक्नाले ठिक हुन्छ ।

**विषोपविषसञ्जातैरर्कैः कोष्णैस्तु सेचयेत् ।**
**वारुण्या वा खाखसार्कैर्व्रणशोथः क्षयं व्रजेत् ॥१२॥**

घाउजन्य सुजन विष वा उपविषको तात्तातो अर्कले अथवा वारुणी वा अफिमको अर्कले सेक्नाले ठिक हुन्छ ।

**न प्रशाम्यति यः शोथः प्रलेपादि विधानतः ।**
**द्रव्याणि पाचनीयानि दद्यात्तत्रोपनाहके ॥१३॥**

उल्लेखित उपायले सुजन ठिक भएन भने पाचन औषधीको प्रयोग गर्नु पर्दछ ।

## घाउ पकाउने उपाय

**शणमूलकशिग्रूणां मूलानि तिलसर्षपाः ।**

**अतसीसक्तवः किञ्चिदुष्णन्देयं च पाचनम् ॥१४॥**

सनपाट, मूला र सैजन यी तीनको जरालाई तिल, सर्सिउँ र आलसका गेडाको धुलोसँग मिसाएर पिँधी तयार पारिएको लेप दल्नाले सुन्निएको (खटिरा) चाँडै पाक्दछ ।

## चिर्नुपर्ने घाउ

**अन्तःपूयेषु वक्रेषु तपैवोत्सङ्गवत्स्वपि ।**
**गतिमत्स्वपि रोगेषु भेदनं संप्रयुज्यते ॥१५॥**

भित्र पीप भरिएका, मुख टेढो भएका, भुक्लुक्क माथि उठेका, रौंका बीचमा आएका र पानी वा पीप बगिरहने खालका घाउ चिर्नु नै सही हुन्छ ।

## पाकेको घाउ फुटाउने उपाय

बद्धमूलातिपङ्केन तुवरीछिद्रकानलैः ।
व्रणसंयोगिनी शङ्खद्रावः पूर्यात्तुयामकम् ॥१६॥
तुवरीसदृशच्छिद्रं यामेनैकेन जायते ।
विना शस्यं शस्त्रकर्मकरमेतदपीडनम् ॥१७॥

घाउखटिरा पाकेको छ तर फुटेको छैन भने घाउको वरिपरि मुखमा रहरको गेडाजति भाग बाँकी राखी ( सकेसम्म पहेँलो) माटो गाढा (बाक्लो) गरी दल्नू । अनि कुनै (तामा आदि) को सानो पाइपले त्यो मुखमा सङ्खेत्रोको रस वा नपाए अमिलो दही हाली भर्नू । (अरु तरिकाले हाल्दा माटो बग्दछ) । यसपछि एक प्रहर (करिब तीन घण्टा) सम्म राख्नू । यसरी राख्दा एक प्रहरपछि त्यो खटिरामा रहरकै गेडाजत्रो प्वाल पर्दछ र फुट्दछ । यो तरिका उत्तम तरिका हो । यो उपायले कुनै औजारको प्रयोग नगरी औजारकै काम गर्दछ र कुनै पीडा पनि हुँदैन ।



## घाउ सफा पार्ने अर्क

अबिशुद्धव्रणस्य स्यादर्कः शुचिकरः परः ।
पटोलनिम्बपत्रोत्थः सर्वत्रैव प्रयुज्यते ॥१८॥

सबै खालका प्रदूषित घाउखटिरालाई पर्बल र नीमको पातको अर्कले अति राम्ररी सफा र स्वच्छ पार्दछ ।

## घाउ भर्ने अर्क

अश्वगन्धाजहालोध्रकट्फलं मधुयष्टिका ।
समङ्गाधातकीपुष्पजातोऽर्को व्रणरोपणः ॥१९॥

अश्वगन्धा, काउछो, लोध, काफल, जेठीमधु, मजिठो र धँयेराको फूल मिसाई बनाइएको अर्क लगाउनाले घाउ चाँडै भरिन्छ ।

## हतियारजन्य घाउ भर्ने र नदुख्ने अर्क

**खड्गादिच्छिन्नगात्रस्य मद्येनापूरितो व्रणः ।**
**तथा नागबलार्केण तीव्रां वा वेदनां हरेत् ॥२०॥**

तरबार आदिले काटी बनेको घाउमा मदिरा हाल्नाले भरिन्छ । गुनालुको अर्क हाल्नाले यस्ता घाउबाट हुने दुखाइ तुरुन्त कम हुन्छ ।

## विभिन्न घाउमा अर्क

**जातीपटोलनिम्बानां नक्तमालस्य पल्लवाः ।**

**सिक्थं च मधुकं कुष्ठं द्वे निशे कटुरोहिणी ॥२१॥**
**मञ्जिष्ठा पद्मकं पथ्या लोधकन्नीलमुत्पलम् ।**
**नक्तमालफलं तुत्थमहिफेनं च सारिवा ॥२२॥**
**एतानि समभागानि कल्कीकृत्य प्रयत्नतः ।**
**गोमूत्रेण तदर्कन्तु दशाङ्गादिकवासितम् ॥२३॥**
**विलेपनाद्भक्षाणाच्च हरेत्सर्वव्रणानयम् ।**
**विषव्रणं च बिस्फोट विसर्पकीटदंशितम् ॥२४॥**
**दद्रुं शस्त्रप्रहारं च दग्धं बिद्धं व्रणं तथा ।**
**नखदन्तक्षतं हन्ति दुष्टमांसं च कर्षयेत् ॥२५॥**

जाइफल, पर्बल, नीम, कुबेराक्षका पालुवा, नीरका पालुवा, मह, कूट, हलेदो, चुत्रो, पिरें, मजिठो, पैयुँ, हर्रो, लोध, नीलकमल, कुबेराक्षको फल, तुथो, अफिम र खनायो : यी सबै बराबर मात्रामा लिई प्रयत्नपूर्वक पिसेर लदरो बनाउनू । यसपछि गहुँ मिसाएर अर्क

निकाल्नू । यसलाई दशाङ्ग धूपले बास्ना आउने बनाउनू । यो पिउनाले वा दल्नाले सबै खालका घाउखटिरा निको हुन्छ । विषजन्य खटिरा, चाल्ने खटिरा वा बिफर, विसर्प र कीराले टोकेको घाउ, दाद, हातहतियारले बनाएका घाउ, पोलेको घाउ, घोपेको घाउ र नङ-दाँतले बनाएका घाउ निको पार्दछ । यो अर्क दल्नाले सडेको मासु झर्दछ ।

## आगोले पोलेकोमा अर्क

**कटुवल्ल्वाः कुमार्या वा कोष्णेनार्केण सेचयेत् ।**
**अग्निदग्धव्रणांस्तस्मात्सर्वचर्मप्ररोहणम् ॥२६॥**

चाभा वा घिउकुमारीको अर्क केही तताएर आगोले पोलेको घाउमा लगाउनाले नयाँ छाला पलाउँदछ ।

## हाड भाँचिएकोमा अर्क



**अस्थिसंहारकं लाक्षागोधूमार्जुनसाधितम् ।**
**पिबेदर्कं सन्धिभग्ने सघृतं वा यथोचितम् ॥२७॥**

हडचूर, लाहा, गहुँ र अर्जुन वृक्षका पात हालेर निकालिएको अर्कमा विधिपूर्वक घिउ मिसाएर पिउने गर्नाले भाँचिएका वा चर्किएका हाड ठिक गर्दछ ।

## रगत सफा गर्ने मद्य

**हरिद्राक्षौद्रतुवरीरक्तचन्दनदार्विकाः ।**
**गुडेन साधितं मद्यं मृतरक्तं व्यपोहति ॥२८॥**

हलेदो, मह, रहर (गोपीचन्दन ?), रक्तचन्दन र जिभ्रेको सक्खर मिसाएर मद्य निकाली त्यो मद्य पिउनाले खराब रगत शुद्ध हुन्छ ।

## पेट (कोष्ठ) का रोगमा अर्क

कुक्कुटं कृष्णवर्णन्तु जलेऽष्ठगुणिते पचेत् ।
सरसन्तं विपक्ष च दद्यात्कोष्ठपशान्तये ॥२९॥

कालो रङ्को कुखुरो आठ गुना जलमा हाली पकाउनु, त्यसपछि परखैंटाका भाग निकाली त्यो रस पिउनाले पेटका रोग निको हुन्छन् ।

## भित्रसम्म गढेको घाउमा अर्क

स्नुह्यर्कदुग्धदार्वीभिर्मद्यं क्षौद्रेण साधयेत् ।
वारं वारं भाविता च वर्तिर्नाडीव्रणान्तकृत् ॥३०॥

सिउँडी र आँकको दूध एवं चुत्रो मिसाएर निकालिएको अर्कमा मह मिसाउनू । यो अर्कमा सफा कपडा चोपी पटक पटक सुत्लो हाल्नाले नसासम्म गढेको घाउ निको हुन्छ ।



## भगन्दर रोगमा अर्क

शुण्ठी च वटपत्राणि जातिपत्रामृतास्तथा ।
सैन्धवन्तक्रनिक्षिप्तं तवर्कस्तु भगन्दरे ॥३१॥

सुठो, बरका पात, चमेलीका पात (वा जाइफल), गुर्जो र सिधेनुनलाई मोहीमा मिसाएर अर्क निकाल्नू । यो अर्क पिउनाले भगन्दर रोग नाश हुन्छ ।

## भिरिङ्गी रोगमा अर्क

लोध्रजम्बूवटशिवार्जुनरात्रिसमुद्भवः ।
अर्कः पानादितो हन्यादुपदंशं नरस्त्रियोः ॥३२॥

लोध, जामुनु, बरको जरा, हर्रो, अर्जुन वृक्ष र हलेदो मिसाएर निकालिएको अर्क पिउनाले स्त्री र पुरुषको भिरिङ्गी रोग नाश हुन्छ ।

## शूकदोषमा अर्क

**अश्वगन्धावरीकुष्ठमिसिसिंहीबलान्वितम् ।**
**संशोध्यः दुग्धेन तदा अर्कः शूकगदापहः ॥३३॥**

अश्वगन्धा, कुरिलो, कूट, सुप, ठूलो बिही र बलुलाई दूधमा हाली अर्क निकाल्नू । यो अर्क पिउनाले शूकदोष निको हुन्छ ।

## विसर्प रोगमा अर्क

**यष्टी शिरीषतगर मांस्येलाश्चन्दनं शिला ।**

**आज्यञ्च वालकं कुष्ठमर्कः सेकाद्विसर्पजित् ॥३४॥**

जेठीमधु, शिरीष, तगर, जटामसी, अलैंची, रक्तचन्दन, मनशिला, घिउ, सुगन्धवाल र कूट मिसाएर अर्क निकाली पिउनाले विसर्प रोग निको हुन्छ ।

## स्नायुरोगमा अर्क

**निर्गुण्डयर्को गव्यहव्ययुक्तो वा सुषवीभवः ।**
**शीतलार्को हरेच्छीघ्रं स्नायुरोगं न संशयः ॥३५॥**

नेवारीको अर्कमा गाईको घिउ मिसाएर अथवा कालो जीराको अर्क पिउनाले स्नायुरोग निको हुन्छ कुनै शङ्का गर्नु पर्दैन ।

## विष्फोट रोगमा अर्क

सप्तघस्रं तण्डुलाम्बु क्लिन्नार्द्रेन्द्रयवस्यतु ।
विस्फोटकान्निहन्त्येव अर्कोऽयं लेपसेवितः ॥३६॥

चौलानीपानीमा सात दिनसम्म इन्द्रजौ भिजाएर निकालिएको अर्कले पखाल्नाले वा दल्नाले विष्फोट रोग निको हुन्छ ।

## खटिराको पीडामा अर्क

उत्पलं चन्दनं लौध्रमुन्शीरं सारिवाद्वयम् ।
एतदर्को धावनेन स्फोटदाहार्त्तिनाशनः ॥३७॥

चन्द्रकमल, रक्तचन्दन, लोध, खश र दुवै खालका सिस्नो मिसाई निकालिएको अर्कले धुनाले खटिराजन्य डाह नाश हुन्छ ।



## भिरिङ्गी रोगमा अर्क

शङ्खद्रावार्कके क्षिप्तः पारदो भस्मतां व्रजेत् ।
वल्लं गुडयुतं खादेत्फिरङ्गविनिवृत्तये ॥३८॥

सङ्ख्रेत्रोको रसमा पारो हाल्नु खरानी हुन्छ, अनि यसलाई एक एक रत्ती सक्खरसँग खानु भिरिङ्गी रोग नाश हुन्छ ।

अपक्वं पारदं भुक्त्वा द्रोणपुष्पार्क सेवनात् ।
लेपनात्स प्रयात्येव फिरङ्गो नात्र संशयः ॥३९॥

काँचो पारो खाएर त्यसपछि गुम्पातीको अर्क पिउनू । अथवा गुम्पातीको अर्कमा पारो मिसाएर दल्नू, भिरिङ्गी रोग ठिक हुन्छ, यसमा दोमन नगर्नू ।

**पलाशपत्रवृन्तानां सप्ताहन्तस्य सेवनात् ।**
**फिरङ्गो याति त्वरितं साध्यासाध्यो न संशयः ॥४०॥**

पलाशको पातको भेट्नुको अर्क सात दिनसम्म पिउनाले सामान्य वा कठिन जस्तोसुकै भिरिङ्गी रोग पनि ठिक हुन्छ, शङ्का गर्न पर्दैन ।

## दादुरामा अर्क

**स्नुहिजहिलमोचिकार्कः समसूरिकः कौतुकेन पीतः ।**
**सकलं मसूरिकोपं गाढं जातं विनाशयेत्क्षिप्रम् ॥४१॥**



सिउँडी, वन तिल वा जतिल (जहिल) र सैजनमा मसुरो मिसाएर निकालिएको अर्क सेलाएपछि पिए पुरानो खालका दादुरा पनि निको हुन्छ ।

**निम्बः पर्पटकः पाठा पटोलः कटुरोहिणी ।**
**चन्दने द्वे उशीरं च धात्रो वासा दुरालभा ॥४२॥**
**एतदर्कः सितायुक्तो मसूरीमात्रनाशनः ।**
**मूखे कण्ठे व्रणेजाते गण्डूषार्थं प्रयुज्यते ॥४३॥**

नीम, पित्तपापडा, गानेगुर्जो, पर्बल, पिर्रे, सेतोचन्दन, रातोचन्दन, खस, अमला, असुरो र सिस्नु मिसाएर निकालिएको अर्क मिस्रीसँग पिउनाले दादुरा मात्र नाश हुन्छ । मुख वा घाँटीमा घाउ वा फोका भए यो अर्कले कुल्ला गर्दा धेरै लाभ गर्दछ ।

## घाँटीका घाउ र नयाँ जरोमा अर्क

**गोमयार्कस्य लेपेन पानेन विलयं ब्रजेत् ।**
**गोक्षुरार्कम्पिबेदाद्ये ज्वरे च दधिसर्पिषा ॥४४॥**

गोबरको अर्क दल्नाले वा पिउनाले पनि मुख वा घाँटीमा घाउ वा फोका भए लाभ गर्दछ । गोखरुको अर्क दही र घिउसँग पिउनाले भर्खर आउन लागेको जरो ठिक हुन्छ ।

## शीतला (विफर) रोगको पौराणिक इतिहास

**आदौ कृतयुगे ब्रह्मा महेशं वाक्यमब्रवीत् ।**
**तवाज्ञया मया देव सृष्टा नानाविधाः प्रजाः ॥४५॥**
**समस्ता भूस्तु तैर्व्याप्ता भवन्त्यन्येऽपि तद्विधाः ।**
**कामेन यान्ति भार्यासु पुनः सृष्टः प्रवर्त्तते ॥४६॥**

**गजैरश्वैर्मनुष्याद्यैर्व्याप्तियन्तु धराखिला ।**
**शीघ्रं यास्यति पाताले तत्र यत्नो विधीयताम् ॥४७॥**

पहिले (लो) सत्ययुगमा ब्रह्माले महादेवलाई भन्नु भयो कि-हजुरका आज्ञाले मैले अनेक प्रकारका प्रजा सृष्टि गेँ । सारा पृथ्वी यिनैले भरिएको छ । अरुपनि यस्तै प्रजा उत्पन्न हुन्छन् र ती कामदेवले पीडित भई स्त्रीसङ्ग गर्दछन् । जसले गर्दा पुनः सृष्टि बढ्ने गर्दछ । हात्ती, घोडा र मानिसले पूरै पृथ्वी भरिएको छ, अब चाँडै भार थाम्न नसकी पृथ्वी पातालमा भास्सिन सक्दछ, त्यसैले हजुरले चाँडै कुनै उपाय गर्नु होस् ।

**एवं ब्रह्मवचः श्रुत्वा शूलमैक्षन्महेश्वरः ।**
**तनो जघे पुमानेको भीमो घोरपराक्रमः ॥४८॥**
**रक्तान्तलोचनः क्रोधी वडवाग्नियुतो नरः ।**
**ऊर्ध्वकेशो ललज्जिह्वः कृताक्रोशोऽजितेन्द्रियः ॥४९॥**

ब्रह्माको कुरा सुनेपछि महादेवले आफ्नो त्रिशूलतिर यसो हेर्नु भयो । त्यहाँबाट एक अति पराक्रमी डरलाग्दा पुरुष उत्पन्न भए । ती पुरुषका राता राता आँखा थिए । समुद्र भित्र रहेको अग्नि जस्तै उनी अति रिसाहा थिए । कपाल ठाडाठाडा थिए । जिभ्रो लपलपाइरहन्थे । अति रिसाइरहेका थिए र अजितेन्द्रिय थिए ।

**तः दृष्ट्वा तु महादेवः पार्वतीं वाक्यमब्रवीत् ।**
**जात एव महाक्रूरः सर्वसंहारकारकः ॥५०॥**
**एतस्य मोहनार्थाय देहि भार्यां यथोचिताम् ।**
**एवं शिववचः श्रुत्वा स्वकम्पृष्ठन्ददर्श ह ॥५१॥**

उनलाई देखेर शिवले पार्वतीलाई भन्नु भयो- हे पार्वती ! यो त जन्मदै सबैलाई संहार गर्ने खालको अति क्रूर भएको छ । अब यसलाई मोहित बनाउन सक्ने खालकी पत्नी देऊ । यस्ता शिवका वचन सुनी पार्वतीले आफ्नो ढाडतिर हेर्नु भयो ।



**ततो देवी समुत्पन्ना योच्यते भवितव्यता ।**
**रूपलावण्यसम्पन्ना पीनोन्नतपयोधरा ॥५२॥**
**मारणास्त्रं मोहनास्त्रं कराभ्यां दधती शुभा ।**
**श्वेतवस्त्र परीधाना लज्जप्राबृतलोचना ॥५३॥**

त्यहाँबाट एक देवी उत्पन्न भइन्, जसलाई भवितव्यता भनिन्छ । उनी रूप र सुन्दरताले सम्पन्न थिइन् । उनका मोटा र उठेका स्तन थिए । उनले सुन्दर तरिकाले दुवै हातमा मारणास्त्र र मोहनास्त्र बोकेकी थिइन् । सेतो वस्त्र लगाएकी उनी लाजले भुइँतिर हेरिरहेकी थिइन् ।

**सा प्रणम्य तदा देवीं शिवयोरग्रतः स्थिता ।**
**शस्त्रभारभराक्रान्तकालचित्त विमोहिनी ॥५४॥**
**दृष्ट्वा तां पार्वती प्राह ममाज्ञा क्रियतामिति ।**
**कालस्य भव पत्नी त्वमतश्चित्तं विमोहय ॥५५॥**

यस्ती देवी हात जोड्दै शिवपार्वतीका सामु उपस्थित भइन् । तब शस्त्रको भारले पीडित कालको चित्तलाई मोहित गर्ने खालकी ती कन्यालाई देखी पार्वतीले भन्नु भयो-तिमी मेरो आदेश मान र यी कालरूप पुरुषकी पत्नी बनी यिनलाई मोहित पार ।

**याचयस्व वरं श्रेष्ठं कुरु कार्यं प्रजापतेः ।**
**ततः प्रीता तु सा प्राह देव्यग्रे प्रणातास्थिता ।।५६।।**
**मयाधीनमिदं सर्वं ब्रह्माविष्णुशिवात्मकम् ।**
**कालश्चायं ममाधीनः कोऽपि मान्न च वेत्स्यति ।।५७।।**
**आब्रह्मस्तम्बपर्यन्तं विष्णौदेव्याञ्च शूलिनी ।**
**दृष्टिर्मम समैवास्ति मत्स्वरूपाविदस्त्विमे ।।५८।।**

अनि यिसँग उत्तम वरदान लिई ब्रह्माको कार्य गर । तब ती देवी खुशी हुँदै नमस्कार गरी पार्वती नजिक बस्दै भन्न लागिन् । हे पार्वती ! यी ब्रह्मा, विष्णु र शिवले युक्त सारा संसार मेरै अधिनमा छ । यी काल पनि मेरा अधिनमा छन् । तर मलाई कसैले जान्दैन । ब्रह्मादेखि घाँससम्म, विष्णु, पार्वती र शिवप्रति मेरो समान दृष्टि छ, तर यी सबै मेरो स्वरूपलाई जान्दैनन् ।



**एवमुक्त्वा भवानीं सा पाणिग्रहमचीकरत् ।**
**कृतकृत्यो भवत्काल उद्वाह्य भवितव्यताम् ।।५९।।**

यस्तो पार्वतीलाई भनेपछि भवितव्यताले कालसँग विवाह गरिन् । उनीसँग विवाह गर्न पाएकोमा काल पनि आफूलाई धन्य ठान्न लागे ।

**कृतोद्वाहन्तु तं ज्ञात्वा विधाता वाक्यमब्रवीत् ।**
**शीघ्रमागम्यतां स्वामिन् सृष्टिः संहार्यतामिति ।।६०।।**

तिनले विवाह गरेको थाहा पाएपछि ब्रह्माले भने “मालिक ! चाँडै आएर सृष्टिलाई संहार गर्नु होस्” ।

ततस्तु भृत्याः कालेन रचिताः स्वस्य तेजसा ।
भवितव्य तया सार्द्ध ततः स्वस्वामितेजसा ॥६१॥
शोषो ज्वरः पाण्डुसारश्वासपानात्ययादिकाः ।
अभ्यन्तरा गिरिचराः शतशस्तेन निर्मिताः ॥६२॥
सर्प व्याघ्र वृकाः सिंह वृश्चिका राक्षसा गजाः ।
भूतप्रेतपिशाचाश्च वाह्यस्थाः परिचारकाः ॥६३॥
तस्याभ्यन्तरशक्त्या च कामिनी मोहिनी तृषा ।
लिप्साहङ्कृतिबुद्ध्यृद्धिनिद्रास्सेर्ष्याभयादिकाः ॥६४॥
ग्रहणीकामलासूचीछर्दिमूर्च्छाश्मरीतृषाः ।
डाकिनीशाकिनीघोरा हत्यैता बाह्यहेतुकाः ॥६५॥

त्यसपछि कालले आफ्ना तेजले तथा भवितव्यताको सहायताले अनि आफ्ना मालिकको प्रभावले अनेक सेवक उत्पन्न गरे । सुजन, जरो, पाण्डु, अतिसार, दम, मद्य मद आदि भित्र र बाहिर डुल्ने (हुने) सैयौं प्रकारका सेवक (रोग) रचना गरे । सर्प, बाघ, ब्वाँसो, सिंह, बिच्छी, राक्षस, हात्ती, भूत, प्रेत, पिशाच आदि बाहिरतिर डुल्ने सेवक हुन् । कालको भित्री शक्तिबाट कामिनी, मोहिनी, तिर्खा, लिप्सा, अहङ्कार, बुद्धि, ऋद्धि, निद्रा, इर्ष्या, डर आदि उत्पन्न भए । ग्रहणी, कमलपित्त, विसूचिका, वाकवाकी, पत्थरी, तिर्खा, डाकिनी, शाकिनी, घोरा र हत्या बाहिरी शक्तिबाट उत्पन्न भए ।

एवं परिवृतं दृष्ट्वा स्वसैन्यमविचारयत् ।
मत्तः कस्त्वधिको लोके न जाने भवितव्यताम् ॥६६॥
ब्रह्माविष्णुमहेशाद्या हननीया मयाऽऽदितः ।
एवं विचार्य मनसि महेशं हन्तुमुद्यतः ॥६७॥

यसरी आफ्ना सेना जम्मा भएको देखेपछि काल मनमा सोच्न लागे-अब मभन्दा बलियो को छ र ? म भवितव्यता (हुने कुरा) लाई पनि केही ठान्दिन । अब मैले पहिले ब्रह्मा, विष्णु, शिव आदिलाई मार्नु पर्दछ । यस्तो मनले सोची काल शिवलाई मार्न तयार भयो ।

तं दृष्ट्वा तु महेशेन शक्तिरेका प्रदर्शिता ।
अतिघोरा विरूपाक्षी संकीर्णजघनोदरा ॥६८॥
दन्दह्यमाना कोपेन ज्वलयन्ती दिशो दश ।
तस्यास्तु दृष्टिपातेन कालः सर्वाङ्गपीडितः ॥६९॥

यो देखेर शिवले एक शक्ति उत्पन्न गर्नु भयो । उनी अति डरलाग्दी, विरूप आँखा भएकी र पेट र तिघ्रा एकनास भएकी थिइन् । उनी रिसले आगोजस्तो हुँदै दश वटै दिशा डढाउन थालिन् र उनले हेर्दैमा कालको पूरा शरीरमा पीडा हुन थाल्यो ।

तामेव विविशुः सर्वे कः प्रभुः कश्च सेवकः ।
बलिनः सर्व एव स्युः सेवका निर्बलस्य न ॥७०॥

कालका सबै सेना त्यही शक्तिमा बिलीन हुन पुगे । साँचो हो को कसको स्वामी हो र को कसको सेवक हो (भन्नै सकिन्न) । सबै बलियोका सेवक हुन्छन्, निर्धोका कोही सेवक हुँदैनन् ।



नानास्फोटैः परिवृतो दह्यमानो रुषाग्निना ।
तस्येदृशीमवस्थान्तु दृष्ट्वा दाहादयो गदाः ॥७१॥

कालका शरीरभरी फोका उठ्न थाले, शिवका क्रोधरूपी अग्निले उनी जल्न लागे । उसको यस्तो अवस्था देखेर पहिलेका डाह आदि रोग उनलाई छाडेर भाग्न लागे ।

भग्नाहंकारकन्दृष्ट्वा तं कालं भवितव्यता ।
ईषद्विहस्य तं प्राह न ते साधुरहंकृतिः ॥७२॥
मदधीनञ्जगत्सर्वं मदाज्ञा क्रियतान्त्वया ।
त्वया स्वतन्त्रतारम्भः कृतस्तेनेदृशी गतिः ॥७३॥

यसरी घमण्ड चकनाचूर भएका काल (पति) लाई देखेर मुसुक्क हाँस्दै भवितव्यताले भनिन् "तिमीले गरेको अभिमान सही होइन" । यो सारा संसार मेरो अधिनमा छ । त्यसैले तिमी मेरो आज्ञा मान । तिमीले स्वतन्त्र भएर काम गर्न खोज्यौ,
त्यसैले तिम्रो यो अवस्था भयो ।

एषामदंश सम्भूता शीतला तां प्रसादय ।
अवश्यं तव साहाय्यं करिष्यति त्वयादृता ॥७४॥

मेरो अंशबाट उत्पन्न गराइएकी यी शीतलालाई स्तुति गरी प्रसन्न पार । यदि तिमी यिनलाई आदर गर्दछौ भने यिनी निसन्देह तिम्री सहायिका हुने छिन् ।

वन्देऽहं शीतलान्देवीं रासभस्थां दिगम्बराम् ।
मार्जनीकलशोपेतां शूर्पालङ्कृतमस्तकाम् ॥७५॥
वन्देऽहं शीतलां देवीं सर्वरोगभयापहाम् ।

निवर्तते समासाद्य विस्फोटकभयं महत् ॥७६॥
शीतले शीतले चेति यो ब्रूयाद्दाहपीडितः ।
विस्फोटकभयं घोरं गृहे तस्य न जायते ॥७७॥
शीतले ज्वरदग्धस्य पूतिगन्धगतस्य च ।
प्रणष्टचक्षुषः पुंसस्त्वामाहुर्जीवनौषधम् ॥७८॥
शीतले तनुजान् रोगान् नृणां हरसि दुस्तरान् ।
विस्फोटक विशीर्णानां त्वमेकाऽमृतवर्षिणी ॥७९॥
गलगण्डग्रहा रोगा ये चान्ये दारुणा नृणाम् ।
त्वदनुध्यानमात्रेण शीतले यान्ति संक्षयम् ॥८०॥
न मन्त्रं नौषधं तत्र पापरोगस्य विद्यते ।
त्वमेका शीतले धात्री नान्यां पश्यामि देवताम् ॥८१॥
मृणालतन्तुसदृशीं नाभिहृन्मध्यसंस्थिताम् ।
यस्त्वां सञ्चिन्त्ययेद्देवि तस्य मृत्युर्न जायते ॥८२॥

म गधा माथि चढेकी, दिशालाई वस्त्र बनाएकी, हातमा अमृतको कलश बोकेकी र नाङ्ले (जत्रा र जस्ता) गहनाले सुशोभित भएकी शीतला देवीलाई नमस्कार गर्दछु । म सबै रोगको डरबाट मुक्त गराउने एवं जो खुशी हुँदा विस्फोटक जस्ता रोगको डरबाट समेत मुक्त हुन सकिने शीतला देवीलाई नमस्कार गर्दछु । जसले हे शीतला ! हे शीतला ! मात्र भन्दछ उसको डाह नाश हुन्छ र घरमा विस्फोटक जस्ता रोगको डर हुँदैन । जरोले पोलिरहेका, दुर्गन्धमा डुबेका र ज्योति गुमाएका मानिसका लागि हे शीतला हजुर जीवनदायिनी औषधी हुनु हुन्छ । हे शीतला ! हजुर मानिसका शरीरमा लाग्ने कडा रोगलाई नाश गर्नु हुन्छ । विस्फोटक रोगले शरीर जर्जर भएका रोगीलाई हजुर अमृतको वर्षा गर्नु हुन्छ । हजुरको ध्यान मात्र गर्नाले पनि गलगण्ड, ग्रहरोग आदि मानिसलाई लाग्ने अनेकौं डरलाग्दा रोग हे शीतला ! हजुर नष्ट पार्नु हुन्छ । पापरोगको न कुनै मन्त्र हुन्छ न त कुनै ओखती नै । माता शीतला ! म हजुरलाई एकमात्र देवी मान्दछु, अरु कसैलाई देख्दिन (मान्दिन) । कमलको डाँठ जस्तो नाभि र मुटुको बीचको भागमा रहने भएकी हजुरलाई जसले ध्यान गर्दछ, उसको मृत्यु हुँदैन ।

**एवं स्तुता तदा देवी शीतला प्रीतमानसा ।**

**उवाच वाक्यं कालाय वरं वरय सत्वरम् ॥८३॥**

कालले यसरी स्तुती गरेपछि शीतला प्रसन्न भइन् र छिटो वर माग भनिन् ।

**अहो चाद्भुतमाहात्म्यन्तव दृष्टं मयाऽधुना ।**
**पीडामपनय क्षिप्रं प्रहर्षं कुरु मे सदा ॥८४॥**

कालले भने- माता ! मैले हजुरको अचम्मको शक्ति देखेँ, अब हजुर मेरो शरीरको पीडा चाँडै हटाइ दिनु हवस् र मलाई सधैं प्रसन्न बनाउनु होस् ।

**एषा तव जगत्कर्त्री भार्येयं भवितव्यता ।**
**अस्याज्ञां संप्रवर्त्तन्ते ब्रह्माविष्णुमहेश्वराः ॥८५॥**
**अहं त्वं च महेशाद्यास्ततो धन्यास्तु ते मताः ।**

बुद्ध्याधीर्जायते सा या यादृशी भवितव्यता ॥८६॥

यी संसार सृष्टि गर्ने भवितव्यता तिम्री पत्नी हुन् । ब्रह्मा, विष्णु, शिव आदि सबै यिनका आज्ञा अनुसार काममा लाग्ने गर्दछन् । म, तिमी र शिव आदि उनैका अधिनमा छौं, त्यसैले धन्य छौं । बुद्धिले जस्तो सोच उत्पन्न गराउँदछ त्यसैलाई भवितव्य भनिन्छ ।

सहायं ते करिष्यामि हरिष्यामि इमाः प्रजाः ।
उपोदकी तु या खादेदादावुष्णं ततः परम् ॥८७॥
तं गर्भं भक्षयिष्यामि सापि चेद्दुष्टभुग्भवेत् ।
सन्तुष्टा शीतलेनाहं सदातत्सेवकेन च ॥८८॥
प्रत्यहं यासमश्नाति मालत्यर्कमुपोदकी ।
तस्या गर्भं न स्पृश्यामि यावज्जीवं न संशयः ॥८९॥
मम कोपेन सञ्जात दाहो यस्तु नरोत्तमः ।
दधिभक्तं ब्राह्मणेभ्यो जलमेभ्यः प्रदाय च ॥९०॥

स्वयमश्नाति सप्ताहं तस्य पीडां हराम्यहम् ।
अष्टकं च ममैतद्धि यः पठेन्मानवस्सदा ॥९१॥
विस्फोटकभयं घोरं कुले तस्य न जायते ।
श्रोतव्यं पठितव्यं च नरैर्भक्तिसमन्वितैः ॥९२॥
उपसर्गभयं तस्य कदापि नहि जायते ।
अष्टकं च ममैतद्धि पठितं भक्तितः सदा ॥९३॥
सर्वरोग विनाशाय परं स्वस्त्ययनं महत् ।
शीतलाष्टकमेतद्धि न देयं यस्य कस्यचित् ॥९४॥
दातव्यं सर्वदा तस्मै भक्तिश्रद्धान्वितो हि यः ।
एवमुक्त्वा ययुः सर्वे तथैव भवितव्यता ॥९५॥

म तिम्रो सहायता गर्दछु र यी प्रजालाई मार्दछु । जो गर्भिणी स्त्री पहिले तातो खाएर पछि चिसो वा अन्य कुरा खान्छे, जथाभावी खाने खालकी त्यस्ता स्त्रीको गर्भलाई म हरण

गर्दछु । म शीतल पदार्थ र त्यस्ता पदार्थ खानेहरूसँग सधैं प्रसन्न हुन्छु । जुन् गर्भिणी नित्य चमेलीको अर्क पिउँदछे, म आजीवन त्यस्ता स्त्रीको गर्भलाई छुन्न । मेरो कोपले गर्दा जसको शरीरमा डाह भएको छ उसले ब्राह्मणहरूलाई दहीभात र जल खुवाओस् । अनि आफूले पनि एक हप्तासम्म दही भात र पानी मात्र खाने त्यस्ता व्यक्तिको पीडा नाश गरी दिन्छु । जो मानिस नित्य यो शीतलाष्टक पाठ गर्दछ उसका कुलमा डरलाग्दो विस्फोटक रोगको भय हुँदैन । मानिसले यसलाई भक्तिपूर्वक सुन्नु र पढ्नु पर्दछ । उसलाई महामारी र विपत्तीको कहिल्यै डर हुने छैन । भक्तिपूर्वक सधैं यो मेरो अष्टक पढ्नाले सबै रोग नाश हुन्छन् र परम कल्याण प्राप्त हुन्छ, यो जो पायो त्यसलाई नबताउनू । जो श्रद्धाभक्ति गर्दछ सधैं त्यस्तालाई मात्र बताउनू । यति भनेर भवितव्यता आदि सबै आआफ्ना आश्रमतिर गए ।

## शीतला (विफर) रोगमा अर्क

**तथा लोकाञ्जिघांसन्ति कालस्य वशमागताः ।**
**अथ वक्ष्ये शीतलादि चिकित्सार्क प्रभावतः ॥९६॥**
**जात्यर्कं वा कदल्यर्कं शतपत्रार्कमेव च ।**
**यो भुञ्ज्याद्दधिभक्ताभ्यां शीतला तं न मारयेत् ॥९७॥**
**चन्दनं वासको मुस्तं गुडूची द्राक्षया सह ।**
**एषामर्कः शीतलाश्च शीतलाज्वर नाशनः ॥९८॥**

यसरी यी सबै कालका अधिनमा भई लोकलाई नाश गर्दछन् । अब म (रावण) शीतला आदिको उपचार गर्ने अर्कका बारेमा बताउँदछु । चमेली वा केरा वा सयपत्रीको अर्क दहीभातसँग पिउने गरे शीतला रोगले मानिसलाई मार्दैन । चन्दन, असुरो, नागरमोथे, गुर्जो र दाख मिसाएर बनाइएको अर्क सेलाएर पिउनाले शीतलाको जरो नाश हुन्छ ।

**तारोमा या शीतलेति चतुर्थ्यन्तं हृदन्तकम् ।**
**मन्त्रमुच्चार्य यो दद्याद्दधीनि शतसंख्यया ॥९९॥**
**स चन्दनेन शीतेन शतपत्रार्ककेण च ।**

## अवश्यमेव सप्ताह प्रयोगाद्व्रणनाशनः ॥१००॥

"ॐ ह्री तारोमाया शीतलायै नमः" मन्त्र सय पटक जप गरी चन्दन वा सयपत्रीको शीतल अर्कसँग एक हप्ता दही खाने गरे शीतला (विफर) र यसको दाग नाश हुन्छ ।

**इति लङ्केश्वर रावण कृतार्कप्रकाशे षष्ठं शतकं संपूर्णम्**

**रावण लिखित अर्कप्रकाश अन्तर्गत छैटौं शतकको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो**

## ॥ अथ सप्तमं शतकम् ॥

## कपाल कालो बनाउने उपाय

## रावण उवाच

त्रिफली नीलिकापत्रं भृङ्गराज अयोमलः ।
अविमूत्रेण सम्पिष्टं लेपात्कृष्णीकरं परम् ॥१॥

रावण भन्दछन्- त्रिफला (हर्रो, बर्रो र अमला), नेवारी विरुवाको पात, भृङ्गिराज र फलामको किटलाई भेडाको मूत्रमा पिँधेर लगाउनाले वा यी कुरा मिसाएर अर्क निकाली लगाउनाले फुलेको कपाल कालो हुन्छ ।

## तालु खुइलेको उपचार



मसी तु गजदन्तस्य छागीक्षीरं रसाञ्जनम् ।
वटप्ररोहकं पिष्टमिन्द्रलुप्तघ्नमौषधम् ॥२॥

हात्तीको दाँतको भस्म, बाख्रीको दूध, रसाञ्जन (चुत्राको काँडा, बोक्रा वा जराको रसमा त्यति नै दूध मिसाएर एक चौथाई बाँकी हुने गरी पकाइएको ओखती) र बर्रोको बाहिरी जरा मिसाई पिँधेर बनाइएको लेप लगाउनाले इन्द्रलुप्त (रौँको जरामा रहने रगत खराब भएर रौँ झारिदिने र फेरी रौँ पलाउन नदिने रोग-के.यन.स्वामि, कपाल झर्ने रोग विशेष-चरक संहिता, तालु खुइलने रोग) रोग ठिक हुन्छ ।

## टाउको चिलाउने रोगको उपचार

आम्रबीजं च तथा पथ्या द्वयं स्यान्मात्रया समम् ।
दुग्धेन पिष्टन्तल्लेपो दारुणं हन्ति दारुणम् ॥३॥

आँपको बीज (कोया) र हर्रो बराबर मात्रामा लिई दूधमा पिँधेर दल्नाले अथवा यो मिश्रणको अर्क निकाली दल्नाले टाउको कडा र रुखो भई चिलाउने रोग (दारुणक) ठिक हुन्छ ।

## टाउकाको रुखोपनको उपचार

**नीलोत्पलस्य किञ्जल्कमामलं मधुयष्टिका ।**
**क्लिन्नं गोमूत्रके चैव तदर्कोऽरूंषि नाशयेत् ॥४॥**

नीलकमलको केसर, अमला र जेठीमधुलाई गहुँतमा भिजाएर निकालिएको अर्क दल्नाले पनि कपाल वा टाउकाको रुखोपन नाश हुन्छ ।

## अनुहारको दागको उपचार



**केवलं पयसा लिह्यात्तीक्ष्णाः शाल्मलिकण्टकाः ।**
**तदर्कस्य त्र्यहं लेपान्मुखं पद्मोपमं भवेत् ॥५॥**

सिमलको काँडा पानीमा पिँधेर अर्क निकाल्नू । यो अर्क तीन दिन दल्नाले अनुहार कमलजस्तै सुन्दर हुन्छ ।

**वटाङ्कुरो मसूरश्च मञ्जिष्ठा क्षौद्रमेव च ।**
**जलक्लिन्नं तदर्कस्तु मुखव्यङ्ग विनाशनः ॥६॥**

बरोका आँकुरा, मसुरो, मजिठो र मह पानीमा भिजाएर अर्क निकाल्नू । यो अर्क दल्नाले अनुहारमा हुने ससाना दाग हराउँदछन् ।

## अङ्गुलवेष्टक रोगको उपचार

**काश्मर्येण कोष्णेन सिञ्चेदङ्गुलवेष्टकम् ।**
**कोमलैः सप्तभिस्तस्य पत्रैर्बद्धं हरेद्गदम् ॥७॥**

खमारीको अर्क निकाली तात्तातै छर्कनू । अनि खमारीकै नरम नरम सात वटा पातले बाँध्नू । यसो गर्नाले अङ्गुलवेष्टक (औँला बाउँडिने रोग ?) निको हुन्छ ।

## बालकको जननेन्द्रियको उपचार

**सर्जसैन्धवसिद्धार्थसिताकुष्ठार्क धावनात् ।**
**कपिकच्छ्वा शमगच्छेल्लिङ्गोत्थो नात्र संशयः ॥८॥**

सालधूप, सिधे नुन, सेतो सर्सिउँ, मिस्री र कूट मिसाएर अर्क निकाली काउछो मिसाएर धुनाले बालकको उत्थान भइरहने जननेन्द्रिय साम्य हुन्छ ।



## बालबालिकाको मलद्वारको उपचार

**शङ्खसौवीरयष्टर्कैः प्रत्यहं क्षालयेद्गुदम् ।**
**गुदकण्डूं बालकस्य योगो हन्ति न संशयः ॥९॥**

शङ्ख (भस्म), बरोंको फल र जेठीमधु मिसाएर निकालिएको अर्कले दिनहुँ धुनाले बालबालिकाको मलद्वार चिलाउने रोग निको हुन्छ, शङ्का गर्नै पर्दैन ।

## गुदनिस्सरण रोगको उपचार

**पद्मिनीमृदुपत्राणामर्कं यः सितया पिवेत् ।**
**गुदनिस्सरणं तस्य नश्येन्मासान्नसंशयः ॥१०॥**

कमलका नरम पातबाट निकालिएको अर्क मिस्रीसँग पिउने गर्नाले एक महिनामा मलद्वारको भित्रीभाग बाहिर निस्कने रोग निको हुन्छ, शङ्का गर्न पर्दैन ।

## सूर्यावर्त रोगको उपचार

**भृङ्गराजरसार्को यस्तुल्यक्षीरेण तापितः ।**
**सूर्यावर्तन्निहत्याशु नस्येनैव प्रयोगराट् ॥११॥**

भृङ्गिराजको रसको अर्कमा त्यति नै मात्रामा दूध मिसाई घाममा सेकाउनू । यसको नस लिनाले सूर्यावर्त रोग निको हुन्छ ।

## अधा दुखेको उपचार

**बिडङ्गतिलकृष्णानि सम्यं पिष्ट्वा प्रलेपयेत् ।**

**एतदर्कस्य नस्येन चार्द्धभेदो व्यपोह्यते ॥१२॥**

वायुविडङ्ग र कालो तिल बराबर मिसाई पिँधेर दल्नाले वा यसबाट निकालिएको अर्क सुँघ्नाले (नस लिनाले) अधा दुखेको निको हुन्छ ।

## टाउकाको पीडामा उपचार

**पथ्याक्षधात्रीरजनी गुडभूनिम्बनिम्बकैः ।**
**गुडूच्यर्को हरेत्पीडां सर्वामूर्द्ध समुद्भवाम् ॥१३॥**

हर्रो, बर्रो, अमला, हलेदो, सक्खर, चिराइतो, नीम र गुर्जो मिसाएर अर्क निकाली प्रयोग गर्नाले सबै खालका टाउकाका पीडा नाश हुन्छन् ।

## कञ्चट दुखेको उपचार

**दार्वीहरिद्रामञ्जिष्ठासनिम्बोशीरपद्मकम् ।**
**मर्द्दनञ्चै तदर्कस्य शङ्खपीडाप्रशान्तिकृत् ॥१४॥**

चुत्रो, मजिठो, नीम, खस र पैयुँ मिसाई अर्क निकालेर कञ्चटमा दल्नाले कञ्चट दुखेको निको हुन्छ ।

## गलेनी फाटेको उपचार

**पादेसिक्थारनालेन लेपनन्त्वलसे हितम् ।**
**पटोलकुनटीनिम्ब रोचनामिरचैस्तिलैः ॥१५॥**

माहुरीको मैन र आरनाल ( पानीमा वा दही वा मोहीमा रायो, नुन आदि हाली बनाइएने औषधी विशेष, काञ्जी) मिसाएर दल्नाले अथवा पर्बल, मनशिला, नीम, गोरोचन, कालो मरिच र तिल मिसाएर निकालिएको अर्क दल्नाले अलस (अलसको एउटा अर्थ अठार प्रकारका कुष्ठरोगमध्ये एक हुन्छ भने अर्को अर्थ गोडाका औंलाका काप आदिमा हिलो आदिले गर्दा रातो भई असाध्यै चिलाउने रोग भन्ने हुन्छ । भाष्यकारहरुले यहाँ दोश्रो अर्थलाई लिएका छन्) ठिक हुन्छ ।



**केवलं भृङ्गराजार्क उष्णो दार्वी सुपेषिता ।**
**पादे बध्वाऽनयोः कल्कं दिनकेन क्षयो भवेत् ॥१६॥**

भृङ्गिराज मात्रको अर्कमा चुत्रो पिँधेर लदरो पारी गोडामा दली बाँध्नाले एकै दिनमा हिलोले खाएको गोडा ठिक हुन्छ ।

## मुसा, कोठी आदिको उपचार

**चर्मकीलं जतुमणिर्मशकस्तिलकालकः ।**
**उत्कृत्य शङ्खद्रावेण दग्धो नोत्पद्यते पुनः ॥१७॥**

मासुको खिल (चर्मकील), छालामा टाटैटाटा देखिने रोग विशेष (जतुमणि), छालामा आउने कालो वा रातो ससाना मासुका दाना (मुसा, मशक) र छालामा आउने कोठी (तिलकालक) लाई निकालेर त्यहाँ सङ्खेत्रो को अमिलो (शङ्खद्राव) हाली हल्का पोल्ने हो भने फेरी आउँदैन ।

## आँखाको रोगको उपचार

**अहिफेनार्क सम्पिष्टा त्रिफलाचूर्णपोटली ।**
**प्रतिसायं हिता नेत्रे सर्वाऽभिष्यन्दशान्तये ॥१८॥**



अफिमको अर्कमा त्रिफला पिँधी बाक्लो बनाई सफा कपडामा पोको पारेर हरेक साँझ आँखामा लगाउने (आँखा माथि राख्ने) गरे अभिष्यन्द (पोल्ने, रातो हुने तथा आँशु झरिरहने र चिप्रा लागिरहने आँखाको रोग) निको हुन्छ ।

**वातातपरजोहीनवेश्मन्युत्तानशायिनः ।**
**आधारौ माषचूर्णेन क्लिन्नेन परिमण्डलौ ॥१९॥**
**समौ दृढौ समं बद्धौ कर्तव्यौ नेत्रकोशयोः ।**
**पूरयेन्नयने तेन तत उन्मीलयेच्छनैः ॥२०॥**

हावा नलाग्ने, घाम नलाग्ने र धुलो नभएको घरमा आँखाको रोगीलाई उत्तानो पारेर सुताउनू । माषको पिठो पानीमा मुछेर दुईवटा ससाना गिला र गोला रोटी बनाउनू । यो काँचो रोटी आँखा बन्द गर्न लगाएर उसका आँखामाथि राख्नू । यो रोटी ठिक्क आँखासँग बराबर हुने खालका मात्र हुनु पर्दछ । त्यसपछि पट्टी बाँध्नू । (कतिबेर राख्ने भन्ने सम्बन्धमा रोग हेरेर

राख्ने कुरा बताइएको छ, समय नाप्न अक्षर गनेर उच्चारण गर्ने विधि बताइएको छ । सयवटा अक्षर उच्चारण गर्न लाग्ने समयदेखि हजारवटा अक्षर उच्चारण गर्न लाग्ने समय तोकिएको छ) । अनि बिस्तारै खोल्नू । सबै खालका आँखाका रोगमा यो उपचार विधिले अति नै फाइदा हुन्छ ।

## नेत्र तर्पण

भिषग्भिरेष कथितः पुराणैस्तर्पणो विधिः ।
यद्रूक्षं परिशुष्कं च नेत्रं कुटिलमाविलम् ॥२१॥
शीर्णपक्ष्मशिरोत्पात कृच्छ्रोन्मीलनसंयुतम् ।
तिमिरार्जुनशुष्काद्यैरभिष्यन्दाधिमन्थकैः ॥२२॥
शुष्काक्षिपाकशोथाभ्यां युक्तं वातविपर्ययैः ।
तं नेत्रं तर्पणे योज्यं नेत्रकर्म विशारदैः ॥२३॥



प्राचीन वैद्यहरूले नेत्रको तर्पण विधिका बारेमा बताएका छन् । रुखो, भित्र पानी नै नरहने गरी सुकेको, टेडो (कुटिल), धमिलो देखिने (आविल), परेला झर्ने रोग लागेको (शीर्णपक्ष्म), टाउकाका रोग भएको, आँखा झिम्क्याउन कठिनाइ हुने, अगिल्तिर अँध्यारो देखिने, अन्नो (परेलाका डिलमा खटिरा) आएको, बाहिरै सुक्खा देखिएको, अभिष्यन्द (पोल्ने, रातो हुने तथा आँशु झरिरहने र चिप्रा लागिरहने आँखाको रोग) रोग भएको, अधिमन्थ (अभिष्यन्दको एक भेद) भएको, आँखा सुकेर पाकेको, सुन्निएको, वातविकारले पीडित आदि रोगमा नेत्र उपचारका लागि चतूर वैद्यले नेत्र तर्पण गर्नू ।

## नेत्र तर्पण (पानीका मसिना धारा आँखामा पर्ने गरी खसाल्ने) गर्ने समय

धारयेद्वर्त्मरोगेषु वाङ्मात्राणां शतं बुधः ।
स्वस्थे कफे सन्धिरोगे वाचां पञ्चशतानि च ॥२४॥
कफे षट्कशतं कृष्णरोगे सप्तशतं मतम् ।
दृष्टिरोगे शतान्यष्टावधिमन्थे सहस्रकम् ॥२५॥

**सहस्रे वातरोगेषु धार्यमेवं हि तर्पणम् ।**

परेलाका रोगमा सय वटा स्वर वर्ण उच्चारण गर्न लाग्ने समयसम्म, स्वस्थ र कफजन्य जोर्नीका रोगमा पाँच सय वटा स्वर वर्ण उच्चारण गर्न लाग्ने समयसम्म, कफविकारमा छ सय वटा स्वर वर्ण उच्चारण गर्न लाग्ने समयसम्म, आँखाको कालो भागका रोगमा सात सय वटा स्वर वर्ण उच्चारण गर्न लाग्ने समयसम्म, दृष्टिरोगमा आठ सय वटा स्वर वर्ण उच्चारण गर्न लाग्ने समयसम्म, अभिष्यन्द रोगमा एक हजार वटा स्वर वर्ण उच्चारण गर्न लाग्ने समयसम्म र वातविकारमा एक हजार वटा स्वर वर्ण उच्चारण गर्न लाग्ने समयसम्म आँखामा तर्पण रहन दिनू । यसरी तर्पण उपचार गर्नू । (मात्राको अर्थ कसैले पटक भनेर पनि लगाएका छन्) ।

## आँखाका रोगमा अर्क

**पुनर्नवा च तुवरी कुमारी त्रिफला निशा ॥२६॥**
**यष्टिगैरिकसिन्धुत्थदार्व्यञ्जन युगैः कृतः ।**
**अर्कस्तत्पूरणेनाशु नेत्ररोगाः शमं ययुः ॥२७॥**

पुनर्नवा, रहर, घिउकुमारी, त्रिफा, हलेदो, जेठीमधु, गेरु, सिधे नुन, चुत्रो, दुई किसिमका अञ्जन (?) मिसाएर अर्क निकाली त्यो अर्क आँखामा हाल्नाले आँखाका रोग तुरुन्त ठिक हुन्छ ।

## रतन्धो रोगमा अर्क

**रसाञ्जनं हरिद्रे द्वे मालतीनवपल्लवाः ।**
**गोमयार्कस्तु रात्र्यान्ध्यं परितो हन्त्य संशयम् ॥२८॥**

रसाञ्जन, हलेदो, चुत्रो, चमेलीका नयाँ पालुवा र गाईको गोबर मिसाएर अर्क निकाली आँखामा लगाउनाले रतन्धो रोग ठिक हुन्छ, शङ्का गर्न पर्दैन ।

## आँखाका विभिन्न रोगमा अर्क

**शङ्खनाभिर्विभीतस्यमज्जा पथ्या मनःशिला ।**
**पिप्पली मरिचं कुष्ठमजादुग्धेन पेषितम् ॥२९॥**
**तदर्कः पूरणाद्धन्यात्काचं पटलमर्बुदम् ।**
**तिमिरं मांसवृद्धिं च वार्षिकं पुष्पमेव च ॥३०॥**

शङ्खपुष्पी, बर्रोको गुदी, हर्रो, मनशिला, पिप्ला, कालो मरिच र कूटलाई बाख्रीको दूधमा पिसेर अर्क निकाल्नू । यो अर्क हाल्नाले काच (सूर्य, चन्द्रमा, आगो मात्र देखिने र पछि त्यो पनि नदेखिने आँखाको रोग), मोतिबिन्दु, आँखामा मासु पलाउने, अगिल्तिर अँध्यारो देखिने, आँखामा मासु बढ्ने र एक वर्ष पुरानो फुलो पनि निको हुन्छ ।

## कानका रोग



**कर्णशूले कर्णनादे वाधिर्ये क्ष्वेड एव च ।**
**चतुर्ष्वपि च रोगेषु सामान्यं भेषजं स्मृतम् ॥३१॥**

कान दुख्ने, कान कराउने वा बज्ने, बहिरोपना र कानमा प्रतिध्वनी सुनिने गरी चार किसिमका कानका रोगका सामान्य उपचार बताइएको छ ।

## कान दुखेको ओखती

**शृङ्गवेरं सहमधुसैन्धवं तैलमेव च ।**
**कदुष्णङ्कथयार्धार्यमेतत् स्याद्वेदनापहम् ॥३२॥**

अदुवाको रस, मह, सिधेनुन र तिलको तेल मिसाई केही तताएर कानमा हाले कान दुख्न बन्द हुन्छ ।

**तीव्रशूलातुरे कर्ण सशब्दे क्लेदवाहिनि ।**
**छागमूत्रं प्रशंसन्ति कोष्णंसै सन्धव संयुतम् ॥३३॥**

कान धेरै दुखे, झनझन शब्द आइरहे र पीप बगे बोकाको मूत्रमा सिधे नुन मिसाएर केही तातो बनाई यसका थोपा हाल्नू ।

## कानबाट पीप बगेको ओखती

**आम्रजबमूप्रवालानि मधुकस्य वटस्य च ।**
**एभिस्तु साधितं तैलं पूतिकर्णगदं हरेत् ॥३४॥**

आँप, जामुनु, महुवा र बरोंको पात मिसाएर विधिपूर्वक बनाइएको तेल हाल्नाले गनाउने पीप बगिरहने कानको रोग ठिक हुन्छ ।



## आँखामा फुलो परेको (?) ओखती

**गोमूत्रं हरितालं च तथा माहिषगुग्गुलुम् ।**
**सप्ताहं वा दशाहं वा बहुषः परिभावितम् ॥३५॥**
**करञ्जवीजं तद्वर्तिर्दृष्टेः पुष्पं विनाशयेत् ।**

गहुँत, हरिताल र माहिषगुग्गुल (?) सात वा दश दिन ढडयाई कुबेराक्षका गेडा पिसेर हाली सुत्लो बनाउनू । यो सुत्लोले फुलो ठिक गर्दछ ।

## आँखा चिलाउँदाको ओखती

**रसाञ्जनं सर्जरसो जातीपुष्पं मनःशिला ॥३६॥**
**समुद्रफेनं लवणं गैरिकं मरिचं तथा ।**

**एतत्समांशमधुना पिष्टं प्रक्लिन्न वर्त्मनि ॥३७॥**
**अञ्जनं क्लेदकण्डूघ्नं पक्ष्मणां च प्ररोहणम् ।**

रसाञ्जन, सालधूप, चमेलीको फूल, मनशिला, समुद्रको फिँज, सिधे नुन, गेरु र कालो मरिच समान मात्रामा लिई महमा पिसेर आँखाका गाजल लगाउनाले पलक चिलाउन बन्द हुन्छ र नयाँ परेला उम्रन्छन् ।

## आँखाबाट पानी बहने रोगको ओखती

**बब्बूलार्कः क्षौद्रयुक्तो नेत्रस्रावं हरेत्क्षणात् ॥३८॥**

बब्बूल (?) को अर्कमा मह मिसाएर आँखामा हाले आँखाबाट पानी बहन बन्द हुन्छ ।

## आँखाका विभिन्न रोगको ओखती



**पुनर्नवायाः श्वेतायामर्को हन्याद्देदृगामयान् ।**
**दुग्धेन कण्डूं क्षौद्रेण नेत्रस्रावं च सर्पिषा ॥३९॥**
**पुष्पं तैलेन तिमिरं काञ्जिकेन निशान्धताम् ।**

सेतो पुनर्नवाको अर्क हाल्नाले आँखा चिलाउन बन्द हुन्छ । यो अर्कमा मह मिसाएर लगाउनाले आँखाबाट पानी बहन छोड्दछ । घिउमा मिसाएर लगाउनाले फुलो, तेल मिसाएर लगाउनाले अगिल्तिर अँध्यारो देखिने रोग र काँजी मिसाएर लगाउनाले रतन्धो रोग नाश हुन्छ ।

## विभिन्न रोगमा अर्क

**कट्फलं पौष्करं शृङ्गी व्योषं यासश्च कारबी ॥४०॥**
**एतदर्कः शृङ्गवेर रसयुक्तो गदान् हरेत् ।**

**पीनसं स्वरभेदं च तमकं च हलीमकम् ॥४१॥**
**सन्निपातं कफं वातं श्वासं कासं विनाशयेत् ।**

काफल, अरिडको मूल जरो, गुनाभा, त्रिकटु, सिस्नु र कालो जीरा मिसाएर अर्क निकाली अदुवाको रससँग पिउनाले पिनास, स्वर बसेको, दम, हलीमक नामक पाण्डुरोग, सन्निपात, कफविकार, वातविकार, श्वासप्रश्वासका रोग र खोकी निको हुन्छ ।

## नाक गनाउने रोगमा अर्क

**व्याघ्रीदन्तीवचाशिग्रुः सुरसाव्योषसैन्धवैः ॥४२॥**
**सिद्धोऽर्कस्तु नसि क्षिप्तः पूतिनासा गदापहः ।**

ठूलो बिही, अजयपाल, बोझो, सैजन (वा तुलसी), फ्याक्सेकन्द, त्रिकटु र सिधे नुन मिसाएर अर्क निकाली त्यो अर्कको नस लिनाले नाक गनाउने रोग ठिक हुन्छ ।



## नाकका रोगमा अर्क

**शुण्ठी कुष्ठ कणाबिल्वद्राक्षार्कः क्षवथुं हरेत् ॥४३॥**

सुठो, कूट, पिप्ला, बेल र दाख मिसाएर बनाइएको अर्कले हाच्छिउँ आइरहने नाकको रोग ठिक गर्दछ ।

## टाउकाको कफ निकाल्ने अर्क

**मर्दयेत्कट्फलार्कन्तु श्लेष्मनाशाय मस्तके ।**

काफलको फलको अर्क टाउकामा दले टाउकामा जमेको कफ नाश हुन्छ ।

## नाक भित्र मासु पलाउँदाको अर्क

गृहधूमकणादारुनक्ताह्वासैन्धवैः समैः ॥४४॥
अपामार्गेण जातोऽर्को नासार्शोघ्नो दिनत्रयात् ।

घरको आगो बालेर जमेको ध्वाँसो, पिप्ला, देवदारु, हलेदो र सिधे नुन बराबर मात्रामा लिई दतिवन मिसाएर निकालिएको अर्कको नस लिनाले नाकभित्र मासु पलाएको (नासार्श) तीन दिनमै ठिक हुन्छ ।

## निद्रानाशक अर्क

क्षौद्राश्वलाल संयुक्तमारिचार्कस्य चाञ्जनात् ॥४५॥
अतिनिद्रा शमं याति तमः सूर्योदये यथा ।



मह, घोडाको ऱ्याल र कालो मरिच मिसाएर अर्क निकाली आँखामा लगाउनाले निद्रा त्यसरी नै हराउँदछ जसरी सूर्य उदाएपछि अन्धकार हराउँदछ ।

## आँखाका रोगमा अर्क

शिलायां रसकं पिष्ट्वा सम्यगाप्लाव्य वारिणा ॥४६॥
गृह्णीयात्तज्जलं सर्वं त्यजेच्चूर्णमधोगतम् ।
शुष्कं च तज्जलं सर्वं पर्पटीमन्निभं भवेत् ॥४७॥
बिचूर्ण्य भावयेत्सम्यक्त्रिफलार्कैः पुनः पुनः ।
कर्पूरस्य रजस्तत्र दशमांशेन निक्षिपेत् ॥४८॥
अञ्जयेन्नयने तेन नेत्राखिलगदच्छिदः ।

रसक (एक खनिज धातु विशेष, हिन्दीमा खपरिया, मैनशिल) लाई दुङ्गामा घोट्नू र पानीमा हालेर घोल्नू । निथ्रन दिनू । राम्ररी निथ्रिएपछि पानी मात्र बिस्तारै निकाली त्यो जललाई घाममा सुकाउनू । पाप्रा बन्दछ । यसपछि यो पाप्रालाई धुलो बनाएर त्रिफालाको अर्कमा पटकपटक मोल्नू । त्यसपछि यसमा दशौं भाग कपूर मिसाएर आँखामा गाजल लगाउनू । सबै किसिमका आँखाका रोग नाश हुन्छन् ।

## दाँतका किरानाशक अर्क

नील्यर्कः कटुतुम्व्यर्कः काकजङ्घाभवोऽथवा ॥४९॥
मण्डूषकरणैर्हन्याद्दन्तानां कृमिजालकम् ।

नीरको अर्क, लौकाको अर्क अथवा काकजङ्घा नामक बूटीको अर्कले कुल्ला गरे दाँतका किरा मर्दछन् ।



## दाँत बलियो बनाउने अर्क

त्रिफला स्वर्णमाक्षीकं तारमाक्षिकसैन्धवम् ॥५०॥
खदिरो दग्धपूगं च लोहचूर्णं समांशकम् ।
वज्रदन्तीभवेचार्के भावयेद्दिवत्रयम् ॥५१॥
लेप्याः सायं तने दन्ताः सप्ताहाद्दृढवत्तराः ।

त्रिफला, सुनामखी नामक उपधातु, रुपामखी नामक उपधातु, सिधे नुन, खयर, डढेको सुपारी, फलामको धुलो बराबर मात्रामा लिई वज्रदन्तीको अर्कमा तीन दिनसम्म भिजाउनू । यसलाई सात दिनसम्म साँझमा दल्नाले दाँत बलियो हुन्छ ।

## टन्सिलमा अर्क

व्योषक्षाराभयावह्निचूर्णमूर्वार्क भावितम् ॥५२॥
उपजिह्वा प्रशान्त्यर्थं पीडयेदुपजिह्विकाम् ।

त्रिकटु, जवाखार, हर्रो र चितूलाई मरुई लहराको रसमा भिजाउनू र अर्क निकाल्नू । यो अर्क दल्नाले उपजिह्वा (टन्सिल) रोग नाश हुन्छ ।

## दाँतका रोग नाशक अर्क

कटुत्रयं शिवा धात्री यवानी जीरकद्वयम् ॥५३॥
चव्यमौषधवत्तुल्यं भागयुग्मं च सैन्धवम् ।
सप्तवारानम्लवर्गे द्विगुणैश्चित्रकार्ककैः ॥५४॥
भागयित्वा वटी कार्या जिह्वा दन्तरुजापहम् ।

त्रिकटु, हर्रो, अमला, ज्वानु, जीरा, कालोजीरा र चाँभा बराबर मात्रामा र सिधेनुन दोबर लिनू । यसको धूलोलाई अमिलो रसमा सात पटक र अरिडको अर्कमा चौध पटक भिजाउनू । अनि ससाना गोलि बनाउनू । यो गोलि खानाले दाँतका रोग नाश हुन्छ ।



## तालुका रोगमा अर्क

बचा चातिविषा पाठा रास्ना कटुकरोहिणी ॥५५॥
पिचुमर्द्दार्ककवल तालुरोग विनाशनम् ।

बोझो, उतिस, गानेगुर्जो, फ्याक्से कन्द र पिर्रेको धुरो बनाई नीमको अर्कमा मिसाएर कुल्ला गर्नाले वा मुखका लिइ रहनाले तालुका रोग निको हुन्छन् ।

## घाँटीका रोगमा अर्क

गोमुत्राऽतिविषादारुपाठां विषकलिङ्गकाः ॥५६॥
कटुकार्कस्य पानेन कण्ठरोग विनाशनम् ।

गहुँत, उतिस, देवदारु, गानेगुर्जो, कमलका रेसा (?), इन्द्रजौ र कुटकी मिसाएर निकालिएको अर्क पिउनाले घाँटीका रोगहरू नाश हुन्छन् ।

## मुख पाकेकोमा अर्क

जातीपत्रामृता द्राक्षा यासदार्वी फलत्रिकैः ॥५७॥
अर्कः शीतः क्षौद्रयुक्तो गण्डूषोमुखपाकनुत् ।

जाइफल, गुर्जो, दाख, सिस्नु, चुत्रो र त्रिफला मिसाएर निकालिएको अर्क सेलाएपछि मह मिसाएर कुल्ला गर्नाले मुख पाकेको ठिक हुन्छ ।

## मुखको दुर्गन्ध हटाउने अर्क

कृष्णजीरककुष्ठेन्द्रयवजार्कस्य सेवनात् ॥५८॥

त्रिदिनेन व्रणक्लेददौर्गन्ध्यमुपशाम्यति ।

कालो जीरा, कूट र इन्द्रजौको अर्क पिउनाले घाउको गिलोपना र मुखको दुर्गन्ध नाश हुन्छ ।

## ऱ्याल बहन बन्द गर्ने अर्क

नीलोत्पलदलक्लिन्नं त्रिदिनं मधुनायुतम् ॥५९॥
अर्को गण्डूषहो हन्ति लालास्रावं न संशयः ।

नीलकमललाई तीन दिनसम्म महमा भिजाउनू । त्यसपछि यसको अर्क निकालेर कुल्ला गर्नाले मुखबाट ऱ्याल बहन बन्द हुन्छ, कुनै शङ्का गर्नु पर्दैन ।

## स्थावर विषमा अर्क

**स्थवरेणविषेणार्त्तं मदनार्केण वामयेत्॥६०॥**
**शतपत्र्यादिकार्कैस्तु अभिषेकं समाचरेत् ।**
**दद्याच्च मधुसर्पिर्भ्यां मरिचार्कं तु साम्लकम्॥६१॥**

स्थावर विषले असर गरेका मानिसलाई मैनकाँडोको अर्क खुवाई बान्ता गराउनू । सयपत्री आदिको अर्क छर्कनू । त्यसपछि मह, घिउ र मरिचको अर्कमा अमिलो मिसाएर खान दिनू ।

**हेमार्कसाधितैरर्कैर्मर्दयेच्चाविरेचयेत् ।**
**आदौ संस्नेहनं कृत्वा ततो लेपं समाचरेत्॥६२॥**
**मूलत्वक्पत्र पुष्पाणि वीजश्चेति शिरीषतः ।**
**गवांमूत्रेण सम्पिष्टं लेपाद्विषहरं परम्॥६३॥**



धतुरो र आँक मिसाएर निकालिएको अर्क दलि दिनू । दिशा लगाउनू । यस अघि स्नेहन कर्म गराउनू । सिरिसको जरा, बोक्रा, पात, फूल र गेडालाई गहुँतमा पिँधेर दल्नाले पनि विषको असर नाश हुन्छ ।

## सर्पको विषनाशक अर्क

**पिपली धान्यकं मांसी लोध्रमेला सुवर्चला ।**
**स्थूलैला मरिचं बालं तथा कनकगौरिकम्॥६४॥**
**मालत्यर्केण गुटिकां कर्षमात्रां तु भक्षयेत् ।**
**गरुडचर्कस्य पानं तु सर्पाणां विषनाशनम्॥६५॥**

पिप्ला, भनिया, जटामसी, लोध, सुकुमेल, आलस, अलैंची, मरिच, सुगन्धवाल र स्वर्णगेरु मिसाएर चमेलीको अर्कमा पिँधी गोली बनाउनू । यो चार माषा खुवाउनाले हरेक प्रकारका सर्पका विष नाश हुन्छ । भोटे खयरको अर्क पिउनाले पनि सबै खालका सर्पका विष नाश हुन्छ ।

## बिच्छीको विष नाशक अर्क

**सूर्यावर्त्तार्को गन्धस्तु बृश्चिकस्य विषं हरेत् ।**

हुहुरेको अर्कमा गन्धक मिसाएर दल्नाले बिच्छीको विष नाश हुन्छ ।

## कुकुरको विष नाशक अर्क

**अपामार्गजटार्को वा धत्तूरार्कः सदुग्धकः ॥६६॥**

**अङ्कोलार्कोऽथ वंशार्क श्वविषघ्नः पृथक् पृथक् ।**

दतिवनको अथवा धतुरोको अर्क दूधसँग पिउनाले वा अम्फीफलको अर्क अथवा बाँसको अर्क बेग्लाबेग्लै पिउनाले कुकुरको विष नाश हुन्छ ।

## माकुराको विष नाशक अर्क

**रजनीयुग्मपातंग मञ्जिष्ठा नागकेशरम् ॥६७॥**
**गैरिकार्केण शीतेन लेपो लूताविनाशनः ।**

हलेदो, चुत्रो, पतङ्ग (चन्दन विशेष), मजिठो र नागकेशरलाई गेरुको अर्कमा पिसी सेलाएपछि दल्नाले माकुराको विष नाश हुन्छ ।

## मुसाको विष नाशक अर्क

**बिडालमांस्यर्क लेपो मूषकानां विषापहः ॥६८॥**

बिरालोको मासुको अर्क दल्नाले मुसाको विष नाश हुन्छ ।

## कनसुत्लोको विष नाशक अर्क

**तिक्ताजाजीनागरया अर्केण सह पेषिता ।**
**शतावरीहरेत्सद्योशतपद्युद्भवं विषम् ॥६९॥**

कटुकी, जीरा र सुठोको अर्क कुरिलोको रसमा पिँधेर दल्नाले
कनसुत्लोको विष नाश हुन्छ ।



## कमिलाको विष नाशक अर्क

**पिपीलिका विषं हन्याच्छुण्ठयर्कस्तत्र मर्दितः ।**

टोकेका ठाउँमा सुठोको अर्क दल्नाले कमिलाको विष नाश हुन्छ ।

## प्रदर रोगमा अर्क

**सितादुग्धेन संयुक्तमाषार्कस्य पलद्वयम् ॥७०॥**
**घृतदुग्धाशिनी नारी प्रदरात्परिमुच्यते ।**

माषको अर्क दुई पलमा मिस्री र दूध मिसाएर पिउनाले स्त्रीको जननेन्द्रियबाट सेतो पानी बहने रोग ठिक हुन्छ तर ओखती खाने अवधिमा घिउ र दूध मात्र खाने गर्नुपर्दछ ।

**अशोकवल्कार्कश्च घृतंदुग्धं च शीतलम् ॥७१॥**
**यथाबलं पिवेत्प्रातस्तीव्रासृग्दरनाशनम् ।**

अशोक वृक्षको बोक्राको अर्कमा घिउ र दूध मिसाएर सेलाए पछि बल हेरी पिउनाले स्त्रीको रक्तप्रदर रोग ठिक हुन्छ।

**दार्वी रसाञ्जनं वासा किरातश्चार्कपुष्पकम् ॥७२॥**
**रक्तचन्दनविल्वार्कः सक्षौद्रोऽसृग्दरं हरेत् ।**

चुत्रो, रसाञ्जन, असुरो, चिराइतो, आँकको फूल, रक्तचन्दन र बेल मिसाएर निकालिएको अर्क मह मिसाएर पिउनाले प्रदर रोग नाश हुन्छ ।

**कदलीनां फलं पक्वां धात्रीफलरसं मधु ॥७३॥**
**शर्कराभिः कृतं मद्यं सोमरोग विनाशनम् ।**



पाकेको केरा, अमलाको रस र महमा सक्खर मिसाएर बनाइएको अर्क पिउनाले आइमाईको योनिबाट सङ्लो सेतो पानी बग्ने रोग निको हुन्छ ।

## धेरै पिसाब लाग्ने रोगमा अर्क

**चक्रमर्दकमूलं तु सम्पिष्टं तण्डुलाम्बुना ॥७४॥**
**प्रभात समये पीतस्तदर्को बहुमूत्रजित् ।**

ताप्रेको जरा चौलानीमा पिसेर अर्क निकाली बिहान बिहान पिउने गरे धेरै पिसाब लाग्ने रोग निको हुन्छ ।

## रजस्वला हुने अर्क

**ज्योतिष्मतीघनवचाकृष्णिकानिम्बजोऽर्ककः ॥७५॥**
**शीतलः पयसा पीतो नारीणां पुष्पकारकः ।**

मालकागुनु, नागरमोथे, बोझो, रायो र नीम मिसाई अर्क निकालेर शीतल बनाई दूधसँग पिएमा स्त्री रजस्वला हुन्छे ।

## गर्भधारण गराउन मद्दत गर्ने अर्क

**अश्वगन्धाभवार्केण सिद्धं दुग्धं घृतान्वितम् ॥**
**ऋतुस्नाताङ्गना प्रातः पीत्वा गर्भं दधातिहि ॥७६॥**

अश्वगन्धाको अर्कमा दूध र घिउ हालेर ऋतुस्नान गरेपछि (चौथो दिन) बिहान पिउनाले स्त्री गर्भधारण गर्न सक्षम हुन्छे ।



## गर्भधारण नगराउने अर्क

**आरनाल परिपेषितं त्र्यहं या जपाकुसुममत्तिपुष्पिणी ।**
**सा पुराणगुडमिष्टसेविनी सा दधाति नहि गर्भमङ्गना ॥७७॥**

काँजी (साँधिएको दही वा मोही) मा बाह्रमासे फूल पिसेर पुरानो सखर मिसाई परसरेको दिनदेखि तीन दिनसम्म चार चार तोला खानाले स्त्रीमा गर्भ रहँदैन ।

## विलुप्तयोनि नामक रोगमा अर्क

**नतं वार्त्ताकिनी कुष्ठ सैन्धवामरदारुभिः ।**
**तिलतैलं पचेन्नारि पिचुमस्य विधारयेत् ॥७८॥**
**विप्लुतायां सदा योनौ व्यथा तेन प्रशाम्यति ।**

तगरको फूल, सेतो सानो खालको कण्टकारी, कूट, सिधेनुन र देवदारु मिसाएर तिलको तेलमा भिजाई कपास चोपेर त्यो कपास जननेन्द्रियमा राख्ने गर्नाले विलुप्तयोनि (?) नामक योनिरोग ठिक हुन्छ ।

## अन्य योनि रोगको उपचार

वातलां कर्कशां तप्तां मत्तपर्शां तथैव च ॥७९॥
कुम्भीरुष्णैरुपचरेदन्तवेश्मनि संवृते ।
धारयेद्वापिचुं योनां तिल तैलस्य सा सदा ॥८०॥

वातला, कर्कशा, तप्ता र मत्तस्पर्शा (यो वर्गीकरणका बारेमा थाहा पाउन सकिएन) जननेन्द्रिय हुने नारीले घरभित्रको हावा नलाग्ने स्थानमा बसी आफ्नो जननेन्द्रिय तातोपानीले सेक्नू । अथवा तिलको तेलमा भिजाएको कपास सधैं जननेन्द्रियमा राख्ने गर्नू ।



## बाल-छारेरोगमा अर्क

बिल्वं शिरीषस्तुलसीयुग्मपाठा च राजिका ।
श्वेतदूर्वा मरुवको भार्गीकह्लारभूस्तृणम् ॥८१॥
श्वेतवर्वरिका कृष्णावर्वरी कासमर्दकः ।
महानिम्बः कट्फलं तु निर्गुण्डी चापि शल्लकी ॥८२॥
उदुम्बरो वारिवाहो विडङ्ग काकमाचिका ।
बला एलाजटामांसीर्दद्यान्मूत्रष्ठिके त्र्यहम् ॥८३॥
गोऽजाविमहिषश्वानां खरोष्ट्रकरिणां तथा ।
नष्कासयेत्तत्तश्चार्कं शाम्भवं कवचं जपन् ॥८४॥
पक्षमेकं प्रयोक्तव्यं स्कन्दापस्मार शान्तये ।
जातमात्रस्य बालस्य बल्लार्क तु प्रदापयेत् ॥८५॥
तज्जनन्याः पलं देयमजादेर्द्विगुणादिकम् ।

बेल, शिरीष, तुलसी, गुर्जो, गानेगुर्जो, रायो, सेतो दूबो, मैनफल, भारङ्गी, साँझमा फुल्ने सेतो कमल, कुकुरमुते झार, सेतो बाबरी, कालो बाबरी, करौंदी झार, बकाइनु, काफल, नेवारी, साज, डुम्री, नागरमोथे, कालीकाठ, कवई, बलु, अलैंची र जटामसी यी सबैलाई गाई, बाख्री, भेडी, भैंसी, कुकुर, गधा, उँट र हात्तीको गरी आठ थरी मूत्र मिसाइएको मूत्रमा तीन दिनसम्म भिजाउनू । यसपछि शिवकवच पाठगर्दै यसबाट अर्क निकाल्नू । बालकलाई हुने छारेरोग (स्कन्दापस्मार) ठिक गर्न यसलाई पन्ध्र दिनसम्म प्रयोग गर्नू । भर्खर जन्मेको बालककलाई तीन रत्ती र उसकी आमालाई एक पल दिनू । बाख्री आदि पशुलाई दोबर दिनू ।

## वालरोगमा अर्क

**घनकृष्णारुणशृङ्गीजातार्कः क्षौद्रसंयुतः ॥८६॥**
**शिशोर्ज्वरातीसारघ्नः कासंश्वासंवमिं हरेत् ।**

नागरमोथे, पिप्ला, उत्तिस र गुनाभा मिसाई अर्क निकालेर मह मिसाई खुवाउनू । बालकको जरो, अतिसार, खोकी, दम र बान्ता गर्ने रोग ठिक हुन्छ ।

**विडङ्गान्यजमोदा च पिप्पली तण्डुलानि च ॥८७॥**
**एषामर्कः सुखोष्णस्तु वालस्यामातिसारजित् ।**

कालीकाठ, ज्वानु, पिप्ला र चामल मिसाई अर्क निकालेर केही तातो खान दिनाले बालकको आमजन्य अतिसार ठिक हुन्छ ।

**रजनी सरलो दारु बृहती गजपिप्पली ॥८८॥**
**पृष्ठपर्णी शताह्वा च जातोर्को मधुसर्पिषा ।**
**दीपनो ग्रहणीं हन्ति मारुतार्ति सकामलाम् ॥८९॥**
**ज्वरातिसारपाण्डुघ्नो बालानां सर्वरोगनुत् ॥९०॥**

हलेदो, सेतो निशोध, देवदारु, ठूलो बिही, चाभा, सतिबयर र सुप मिसाएर अर्क निकाली घिउसँग खुवाउनाले बालकलाई दीपन हुन्छ, ग्रहणी नाश गर्दछ, वातविकार नाश गर्दछ, कमलपित्त ठिक गर्दछ अनि जरो, अतिसार, पाण्डु आदि सबै रोग ठिक गर्दछ ।

**कणोषणासिताक्षौद्रसूक्ष्मैलासैन्धवैः कृतः ।**
**मूत्रग्रहे प्रयोक्तव्यः शिशूनामर्क उत्तमः ॥९१॥**

पिप्ला, कालो मरिच, मिस्री, मह, सुकुमेल र सिधेनुन मिसाएर निकालिएको अर्क पिसाब बन्द भएका बालकका लागि अति उत्तम ओखती हुन्छ ।

## वीर्य एवं यौनशक्ति वर्धक अर्क

**स्वर्णमाक्षिकलोहं च पारदञ्च शिलाजतु ।**
**पथ्याविडङ्गधत्तूरविजयाजातिपत्रिका ॥९२॥**

**अश्वगन्धा गोक्षुराणामर्कैर्भाव्यं पृथक् पृथक् ।**
**सप्तघस्रं तु वल्लैकं माध्वाजाभ्यां लिहेत्ततः ॥९३॥**

सुनामखी (उपधातु विशेष), फलाम, पारो, शिलाजित, हर्रो, कालीकाठ, धतुरो, गाँजा र जाइफललाई बेग्लाबेग्लै अश्वगन्धा र गाखरुको रसमा भिजाउनू । त्यसपछि यसको धुलोलाई घिउ र महसँग मिसाएर सात दिनसम्म खानू । यो बाजीकरण (वीर्य वा पुरुषत्व बढाउने) ओखती हो ।

**गवां विरूढवत्सानां सिद्ध पयसि पायसम् ।**
**गोधूमचूर्ण च तथा सितामधुघृतान्वितम् ॥९४॥**
**भुक्त्वा हृष्यति जीर्णोपि दशदारान् ब्रजत्यपि ।**
**ब्रह्मचर्यं प्रकर्त्तव्य मेकविंशदिनावधि ॥९५॥**

बिहाएको धेरै दिन भइसकेकी र राम्रा बाच्छाबाच्छी भएकी गाईको दूधमा गहुँको पिठो, मिस्री, मह, र घिउ मिसाई खिर पकाएर खाए बुढो मानिस पनि हृष्टपुष्ट भएर दश वटी स्त्रीसँग ग्राम्यधर्ममा संलग्न हुन सक्दछ । तर एक्काईस दिनसम्म उसले ग्राम्यधर्ममा संलग्न हुनु हुँदैन, ब्रह्मचर्यमा रहनु पर्दछ ।

**अपर्णावीजसंयुक्तमुग्रवीज प्रकल्पयेत् ।**
**तुल्यमुन्मत्तवीजञ्च तदर्केणैव भावितम् ॥९६॥**
**सतैलं भावितं पश्चादम्य बल्लयुगन्नरः ।**
**ससितं भक्षयन् कामाद्रमणीं रमते ध्रुवम् ॥९७॥**

अपर्णावीज (बबुलको गेडा ?), उग्रवीज (सैजनको गेडा ?) र धतुराका गेडा बराबर मात्रा लिई यसलाई तिनै वृक्षको रसमा डुबाएर तेल निकाल्नू । यो तेल छ रत्ती मिस्री मिसाएर खानाले मानिस कामान्ध भएर ग्राम्यधर्ममा संलग्न हुन सक्दछ ।

**स्वच्छवल्कं वबूलस्य निम्बूरस विभावितम् ।**
**श्यामं (सायं) वेदाङ्गुलं दुग्धै क्षाल्यं दुग्धं पिबेत्ततः ॥९८॥**
**बीर्यस्तम्भो भवेल्लेपाद्योनिर्गाढा प्रजायते ।**

बबुलको उत्तम खालको बोक्रा कागतीको रसमा भिजाउनू । त्यसपछि चार अमलको टुक्रा निकाली दूधमा डुबाएर पिउनू (अथवा चार अमलको कपडा त्यहाँ चोपी दुधमा निचोरेर खानू ?) यो खानाले ग्राम्यधर्ममा शीघ्रपतन हुँदैन ।
यो दल्नाले स्त्रीको जननेन्द्रिय बलियो हुन्छ ।

**वब्बलर्क सलवणं पीत्वा तद्वेगरोधनात् ॥९९॥**

बबुलको अर्कमा नुन मिसाएर खाई वेग रोक्न खोजे पनि ग्राम्यधर्ममा शीघ्रपतन हुँदैन ।

**केतक्यर्केण बहुशो गन्धः पाषाण धूपिता दशधा ।**

## तद्युक्तलिङ्गभोगाद्योनिर्लिङ्गः सुगन्धिः स्यात् ॥१००॥

केतकीको अर्क र दशाङ्ग धूपले बास्नदार बनाइएको गन्धक मिसाएर पुरुषले जननेन्द्रियमा दली ग्राम्यधर्ममा संलग्न हुँदा स्त्री-पुरुष दुवैको जननेनिन्द्र सुगन्धित हुन्छ ।

**इति लङ्केश्वर रावण कृतार्कप्रकाशे सप्तमं शतकं संपूर्णम्**

**रावण लिखित अर्कप्रकाश अन्तर्गत सातौं शतकको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो**

## ॥ अथाष्टमं शतकम् ॥

## वशीकरण विधि

**हंसपदी(हंसहेली)जटारंगोरोचनां टङ्कमेव च ।**
**स्वार्कं क्लिन्नस्तदर्कस्तु नार्या वै सारिवा तथा ॥१॥**
**भोज्ये पाने प्रदातव्य उन्माद्यो भूतगन्धया ।**
**भोज्ये पाने येन दत्तः (नीतः) प्रेष्ठस्तेन वशीकृतः ॥२॥**

हँसका खुट्टा जस्ता पहेँला पात हुने लज्जावती झार, रक्तचन्दन र गोरोचन एक एक टङ्क (करिब तीन ग्राम) लिई त्यसैको रसमा भिजाई अर्क निकाल्नू र त्यो अर्क खनायोसँग मिसाएर खानेपिउने कुरामा मिसाई स्त्रीलाई खान दिनू । उ नसामा पर्दछे । यो उन्मत्त गर्ने खालको अर्क बास्नादार बनाएर जसलाई खुवाए पनि उ वशमा पर्दछ । (शब्दार्थको कठिनाइले गर्दा यो विधि खुलेर लेख्न सकिएन) ।



**खवल्लिदलपुष्पजार्कः सप्तहं वासितः स्त्रियैः देयः ।**
**एवं विधिना हितया पुसैदत्तो जगद्वशकृत् ॥३॥**

यिनै ओखती आकाशबेलीका पात र फूलको अर्कमा सात दिनसम्म भिजाएर पुरुषले स्त्रीलाई र स्त्रीले पुरुषलाई खुवाए, ती दम्पतिले संसारलाई वशमा पार्दछन् ।

**सार्द्धमरण्यरजन्या त्रिखादितः स्वान्तसाधितस्नेहम् ।**
**सकलमहीमुग्ललनावशीकरं नागतुल्ये मे ॥४॥**

जो एकान्तस्थलमा यस्तो उन्मादकारी अर्क बनाएर तीन दिनसम्म वनहलेदोसँग खान्छ, हे मन्दोदरी ! उसले सम्पूर्ण पृथ्वीका राजा र रानीलाई वशमा पार्दछ ।

**प्रस्थापितां पितृस्थाने एवमर्कं पिबेत्तु या ।**
**संसेवितो नखाहे न वशीकरण सिद्धिदः ॥५॥**

जो स्त्री पिताका घरमा गएर यो उन्मादी अर्क बीस दिनसम्म नियमपूर्वक पिउँदछे उसले सबैलाई वशमा पार्न सक्दछे किन कि यो अर्क वशीकरण सफल बनाउने अर्क हो ।

**वामिनो मिथुनं ग्राह्यं वियोगं तस्य कारयेत् ।**
**स्मरन्नेत्राग्निना दाह्यगापीडं दृढबन्धनम् ॥६॥**

मदिरा पिउने स्वभावका स्त्रीपुरुषको जोडीलाई छुटयाएर ती दुईलाई यसरी आम्नेसाम्ने राखेर बाँध्नु कि एकअर्कालाई देखेर तिनको कामाग्नि दन्कियोस् । अति नहुँदासम्म तिनको बन्धन नखोल्नू ।

**एवं स्वनिकटे स्थाप्य ततो नार्यै तमर्पयेत् ।**

**ब्रह्मासनं गतो वाऽपि तत्यक्त्वास्याः प्रियो भवेत् ॥७॥**

यसरी नजिकै राखेर पछि त्यो पुरुष उक्त नारीलाई सुम्पनू । यदि ब्रह्मासनमै बसेको भएपनि (तपस्वी नै भएपनि) त्यो छाडी उ उनैको वशमा पर्दछ ।

**आधेयोर्कस्तु साध्योसावधारोऽर्कश्च साधकः ।**
**पीत्वा कर्षयते घस्त्रैश्चतुर्भिश्चतुरां स्त्रियम् ॥८॥**

साध्य अर्क आधेय (कुनै कुराको सहारामा टिकेको वस्तु) हो । जुनु साधक अर्क हुन्छ त्यो आधार हो । यस्तो अर्क कसैले चार दिनसम्म नियमपूर्वक पिउँदछ भने उसले जस्तोसुकै चलाख स्त्रीलाई पनि वशमा पार्दछ ।

**ॐ ताराय कृष्णाय त्रिनेत्राय ईक्षिताय ।**
**आर्याय नमष्टः ठः स्वाहा इति मन्त्र ॥९॥**

**मन्त्रो ह्ययं समुच्चार्यो जपसंख्या क्रमेण वै ।**
**पञ्चसंख्या प्रजापेन समाकर्षयते ध्रुवम् ॥१०॥**

"ॐ ताराय कृष्णाय त्रिनेत्राय ईक्षिताय आर्याय नमष्टः ठः स्वाहा" मन्त्रलाई एक लाख पटक जप गर्नाले सिद्ध हुन्छ । यसपछि आवश्यकता पर्दा केवल पाँच पटक मन्त्र पढ्नाले पनि साध्य नरनारी साधकप्रति आकर्षित हुन्छन् ।

## विद्वेषण विधि

**अहोरात्र्यन्ध पङ्गूनां केशांस्तद्वाहनस्य वा ।**
**निखनेन्निर्गमद्वारि तदर्कं दिक्षु विन्यसेत् ॥११॥**

रतन्धो र पागलको कपाल वा उसका घोडा आदि वाहनका टाउकाका रौं चाहेको व्यक्ति निस्कने ढोकामा गाडी दिनू र माथि बताइएको उन्मादी अर्क चारैतिर छर्कि दिनू ।



**वक्ष्यमाणं महामन्त्रं जपेन्पूर्व विधानतः ।**
**विद्वेषस्तु प्रजायेत त्रिदिनान्नात्र संशयः ॥१२॥**

यदि कोही मानिस अब बताइने मन्त्रलाई पहिले बताइएको विधिले जप गर्दछ भने तीन दिनमै विद्वेष हुन्छ, शङ्का गर्नु नै पर्दैन ।

**हयारिहययो रक्तघृतैर्निर्माय कज्जलम् ।**
**अञ्जित्वा नयने तेन यं पश्येद् द्वेषणो भवेत् ॥१३॥**

घोडा र भैंसीको रगतमा घिउ मिसाई गाजल बनाएर आँखामा लगाई जसलाई हेरिन्छ उसैसँग शत्रूता (विद्वेष) हुन्छ ।

**तारोहं डामरायेति ईश्वरायामुकेन च ।**
**सहद्वषं कुरु कुरु स्वाहा ठष्ठो ह्ययं मनुः ॥१४॥**

ॐ नमो डामराय ईश्वरायामुकेन सह द्वेषं कुरु ठः ठ स्वाहा मन्त्र पढेपछि यसबाट उद्धार हुन्छ ।

**आभ्यान्तर बहिः शुद्धिर्ब्रह्मचर्य यथोदितम् ।**
**अल्पाहारश्चाल्पनिद्रा नियमः सर्वसिद्धिषु ॥१५॥**

शरीरको भित्री बाहिरी शुद्धि, नियमपूर्वकको ब्रह्मचर्य, अल्प आहार, अल्प निद्रा जस्ता नियम पालना गर्दै जपिएको मन्त्र मात्र सफल हुन्छ ।

**महादेवाभरणकं तत्सुतांश्च लघीयसः ।**
**क्षिप्त्वा चाहिवरच्छिद्रे मासमात्रं समुद्धरेत् ॥१६॥**

**साध्यस्य निखनेद् द्वारि किञ्चिच्चैवं तथा पुनः ।**
**अग्निकोणाद्वायुकोणे क्षिपेदेतत्समुच्चरेत् ॥१७॥**
**बलिं गृह्णन्त्विमेभूताः स्थानस्थाः सर्व एव हि ।**
**उच्चाटयन्तु सर्वेऽपि रिपुमेतमहात्रिकात् ॥१८॥**
**तारो नमो भगवते डामरेश्वर मूर्त्तये ।**
**उच्चाटयेति मन्त्रेण कार्यसिद्धिरुदाहृता ॥१९॥**

सर्प र सर्पको बच्चा यिनका शत्रूका लागि मारी सर्पकै दुलोमा गाड्नू ।एक महिना पछि यिमध्ये एउटालाई निकाल्नू । त्यसमध्ये केही चाहेको मान्छे निस्कने ढोकामा गाड्नू । केही लिएर आग्नेय दिशादेखि वायव्य दिशासम्म यो मन्त्र पढ्दै छर्नू । यहाँ बस्ने भूतहरू हो ! तिमीहरू सबै यो बलिलाई ग्रहण गर र यो मेरो शत्रूको मनलाई तीन दिनमै विरक्त पार । “ॐ नमो भगवते डामरेश्वरमूर्तये, अमुकमुच्चाटयोच्चाटय” यो मन्त्रले आफ्नो कार्य सिद्ध गर्नू ।

**ब्रह्मचर्यादि नियमान् धारयेद्विधिपूर्वकम् ।**
**जपेच्च गुरुमार्गेण दीक्षतो मन्त्र सिद्धिदम् ॥२०॥**

ब्रह्मचर्य आदि नियम विधिपूर्वक पालना गरी, गुरुसँग दीक्षा लिएर मन्त्र सिकी जप गर्नू । यसो गर्दा दैवले साथ दिए मन्त्र सिद्ध हुन्छ ।

## स्तम्भन विधि

**अन्तिमपाण्डववल्ली शिखरी सिद्धार्थमार्कवञ्चैव ।**
**श्वेतावचैपामर्कं पीत्वा तेनैव घर्षयेल्लोहम् ॥२१॥**
**पात्रे तच्चन्दनसमं द्विदिनान्ते समुद्धरेत् ।**
**तिलके सर्वशत्रूणां बुद्धिस्तम्भकरं परम् ॥२२॥**
**तारो नमः भगवते विश्वामित्राय वै नमः ।**
**चतुर्दशाक्षरो मन्त्र सिद्धोऽस्मिन्कर्मणिस्मृतः ॥२३॥**



सबभन्दा झाङ्गिएको आकाशबेली (?), दतिवन (?), सेतो सर्सिउँ, भृङ्गिराज र सेतो बोझो मिसाई अर्क निकालेर पहिले आफूले पिउनू । त्यसपछि त्यही रसमा फलाम घोट्नू । चन्दनजस्तो भएपछि त्यसलाई भाँडोबाट झिकी निधारमा लगाउनू, सबै शत्रुको बुद्धि रोकिन्छ । यो अर्कमा "ॐ नमो भगवते विश्वामित्राय नमः" यो चौध अक्षरको मन्त्रले यो विधि सिद्ध हुन्छ । यो मन्त्रलाई एकाग्र मनले जप गर्नू यसले पूर्णरुपमा बुद्धि रोक्दछ ।

**यवनार्कस्तु संघ्निश्च हरितालेन वेष्ठयेत् ।**
**ताम्रपात्रे पुनर्वेष्टर्च सुखस्थं सर्वशत्रुहृत् ॥२४॥**
**पीत्वादा कृकलासार्कयों चामुण्डे भवेति च ।**
**जायत वारुणो मन्त्रों चतुरेकादशाक्षरः ॥२५॥**

अथवा जरा सहितको प्याज वा लसुनको अर्क हरितालसँग तामाको भाँडामा पिसी मुखमा राख्नाले पनि शत्रूलाई पराजित गर्न सकिन्छ । तर यसभन्दा पहिले पीपलको अर्क पिएर "ॐ नमश्चामुण्डार्य नमो नमः" यो एघार अक्षरको वारुण मन्त्र जप गर्नु पर्दछ ।

**लिखेत्पसूनवच्चित्र महिषक्षतजेन च ।**
**दर्पणे तेन सम्मृष्टेऽवलोकेन्महिषा कृतिम् ॥२६॥**

भैंसीको रगतले ऐनामा कुनै फूलको चित्र लेख्नू । फेरी त्यही रगतले ऐनालाई सफा गर्नू । यसपछि ऐनामा हेर्दा आफ्नो अनुसार भैंसीको जस्तो देखिन्छ ।

**ज्वालामुख्यम्लयोरर्कैर्महिषक्षतजेन च ।**
**सम्माज्र्य दर्पणं पश्येत् खराश्वोष्ट्र स्वरूपकम् ॥२७॥**

ज्वालामुखी (?) र अम्लवेत अर्क र भैंसीको रगत मिसाएर ऐना सफा गरी मानिसले आफ्नो अनुहार हेरे गधा, घोडा र उँटको जस्तो रूप देखिन्छ ।



**गोदुग्ध्यर्केञ्जनं पुष्पे सेन्द्रेजालिककज्जलैः ।**
**दर्पणे दृश्यते रूपं पूर्वजन्म समुद्भवम् ॥२८॥**

गोदुग्धी (?) को अर्कमा फूल भिजाएर यसलाई इन्द्रजालरूपी गाजल बनाई ऐना सफा गरेर अनुहार हेरे उसले आफ्नो पूर्वजन्मको रूप देख्दछ ।

**नार्या जरायु धूपेन चित्रमुक्तं प्ररोहति ।**
**पुनर्माहिष धूपेन योगात्स्वस्थं भवेद्ध्रुवम् ॥२९॥**

उपरोक्त पूर्वजन्मको अनुहार हेर्ने क्रममा स्त्रीको नालको धूप बाले उक्त चित्र हाँस्न थाल्दछ, फेरी भैंसीको धूप बाले जस्तातस्तै हुन्छ ।

**नस्येऽञ्जने तदानेन कृतभ्रान्ति निवारणम् ।**
**तत्तुल्या गर्भशय्यायां धूपद्भिन्ना न दृश्यते ॥३०॥**
**प्रकटत्व समायाति स्वर्णमाहिषधूपतः ॥३१॥**

यसैलाई सुँघ्नाले अथवा यसैको गाजल लगाउनाले भएको भ्रान्ति मेटिन्छ । उसैको गर्भाशयमा धूप बाले स्त्रीपुरुष मिलेका जस्ता देखिन्छन् । स्वर्ण माहिष (?) को धूप बाले ती अलग हुन्छन् ।

## मारण विधि

**हलाहलं वत्सनाभं लाङ्गली चित्रमूलकम् ।**
**श्वादजं चोर्णनाभिं च श्वेता च गृहगोधिका ॥३२॥**
**एतदर्केण वस्त्राणि लिप्त्वा यः परिधारयेत् ।**
**विमुक्तर्णं तथैवं वै जायतेऽसौ यमातिथिः ॥३३॥**



हलाहल, वत्सनाभ, हलहले, चितूको जरा, स्वादज (?), माकुरो र सेतो माउसुलीको अर्क कपडामा दलेर जसले लगाउँदछ उ ऋण मुक्त भएजसरी यमराजको आतिथ्यमा पुग्दछ ।

**गोपालादस्योरसस्तु यत्नादर्कं समुद्धरेत् ।**
**पुनर्हालाहलार्केण भावितं तच्च मेलयेत् ॥३४॥**
**महारसश्च देयोऽसौ मालत्यर्कानुपानतः ।**
**पर्याप्तमेकं रमते रमणीभिर्भुनक्ति च ॥३५॥**

बाघको रगतको प्रयत्नपूर्वक अर्क निकाल्नू । यसमा पुनः हलाहल विषको अर्क मिसाउनू । यो महारसलाई चमेलीको अर्कमा मिसाएर जसलाई खुवाइन्छ उसले एकपटक मात्र पत्नीसँग रमण गर्न र खाना खान पाउँदछ ।

**स्तुतिं कुर्वन्ति वैद्यस्य को वा धन्वन्तरिस्त्वयम् ।**
**सोऽथ कुर्वीत वमनं रेचनं च म्रियेत च॥**
**रुधिरच्छार्दि रित्यादिदुष्टदुःखैर्विदूषितः ॥३६॥**

यस्तो रस बनाउने वैद्यलाई सबैले धन्वन्तरी सम्झी स्तुती गर्दछन् । यसको प्रयोग अवश्य नै सफल हुन्छ । जसलाई मार्नु छ त्यो व्यक्ति छाद्दै, छेर्दै, रगत निकाल्दै कष्टसँग देह त्याग गर्दछ ।

## अदृश्य विधि

**बिडालकण्टक क्षौद्रो हलमी नव केशरैः ।**
**योगिन्यर्कोऽञ्जनं चैतदन्धकारै तु मेलयेत्॥३७॥**
**तदीयां गुटिकां कृत्वा क्षिणोत्त्रेधा तु सम्पुटे ।**
**मुखमध्ये स्थिता यस्य सोऽस्य दृश्यः प्रजायते ॥३८॥**



ओदानेकाँडो (?), मह, हलमी (?) र नवकेशरलाई जटामसीको अर्कमा मिसाएर अँध्यारो ठाउँमा खुब घोट्नू । बाक्लो भएपछि ससाना गोलि बनाउनू । यो गोलिलाई तीन पत्रमा बेर्नू र मुखमा हाल्नू, उसलाई कसैले देख्दैन ।

**शिवालये तु कन्यार्कः शिलायां शिलया सह ।**
**ललाटे तिलकं कृत्वाऽदृश्यो भवति तत्क्षणात्॥३९॥**

घिउकुमारीको अर्कमा मैनशिला मिसाएर शिव मन्दिरमा ढुङ्गामा घोटी निधारमा लगाउनाले लगाउने मान्छे त्यही समयमा अदृश्य हुन्छ ।

**स्रोतोञ्जनं सप्तवारं तेन कार्याऽर्क भावना ।**
**शरावं तत्तु तत्कुक्षौ दत्वा पाकगृहे पचेत्॥४०॥**
**पुटपाक विधानेन पचेदेवं महानसे ।**

**तदञ्जनाददृश्यः स्यात्पुनस्तत्स्रंसनात्स्फुटम् ॥४१॥**

घिउकुमारीको अर्कमा स्रोतोञ्जन (गाजल ?) सात पटक भिजाएर कुनै माटाका भाँडामा राख्नू, फेरी यसलाई भान्छामा लगी पुटपाक विधिले पकाएर गाजल बनाउनू । यो गाजल आँखामा लगाउनेलाई कसैले देख्दैन । गाजल पुछेपछि पुनः देखिन्छ ।

**तारानमोडामराया दृश्य सिद्धिं करोतु चेत् ।**
**कालोन्मत्तस्य पञ्चाङ्गं कृष्णसर्पे विनिःसृतम् ॥४२॥**

"ॐ तारो नमो डामरामादृश्यसिद्धि कुरु कुरु स्वाहा" यो मन्त्रलाई एक लाख पटक जपी सिद्ध गर्नु पर्दछ । मन्त्र सिद्ध भएपछि माथि बताइएका वस्तुलाई यो मन्त्रले पाँच पटक मन्त्री अनि प्रयोग गर्नु पर्दछ ।कालो धतुरोको पाँचै अङ्ग र कालो सर्प मिसाएर अर्क निकाली...।



## सम्मोहन विधि

**शम्भोरस्त्राद्भावितस्य धूपो यस्मै प्रदीयते ।**
**सम्मोहन मवाप्नोति नरो वा नरवाहनः ॥४३॥**

शम्भोरस्त्र (?) मा भिजाएर धूप जसलाई दिइन्छ त्यो मानिस वा उसको वाहन सम्मोहित हुन्छ ।

**धत्तूरकस्य बीजानामर्केणैव विभावितम् ।**
**हरितालकन्तु दशधा भक्षणात्सर्वमोहकृत् ॥४४॥**

धतुराका गेडाको अर्कमा हरिताललाई दश पटक भिजाएर त्यो जसलाई खुवाइन्छ त्यही मोहित हुन्छ ।

**गुरुहेली कामफली काकोदुम्बरि भूफली ।**
**कन्याकुमारमूत्रेण सप्तवारेण भावयेत् ॥४५॥**
**शोषयित्वा ततः पिष्ट्वा धत्तूरार्केण गोलिकाम् ।**
**विधाय तिलकेनैव मोहयेद्भुवनत्रयम् ॥४६॥**

गुरुहेली (?), कामफली (?), खोस्रेटो र भूफली (अमला ?) लाई कन्या र कुमारको मूत्रमा सात पटक भिजाएर सुकाउनू । अनि पिँधेर धतुरोको अर्कमा मिसाएर गोलि बनाउनू । यो गोलिको टिका लगाउनाले तीनै लोकलाई मोहित पार्दछ ।

## अग्नि स्तम्भन विधि

**रक्तपाभेकशशिज पाटलार्को जलस्थले ।**
**कृत्वाऽथ पाचयेत्तैलं यथोक्तविधिना ततः ॥४७॥**
**एतत्तैलस्य यो लेपं कारयेत्करपादयोः ।**

**अङ्गाराणामुपरि च नरो भ्रमति भूमिवत् ॥४८॥**

पानी जुका, भ्यागुतो, चन्द्रकमल र पाडरीको फूलको तल जलपात्र राखी यन्त्रविधिले अर्क निकाल्नू । यो अर्क हातगोडामा दल्नाले मनुष्य आगोको भुङ्ग्रामा जमिनमा हिँडे जसरी हिँड्न सक्दछ ।

**सहव्येक्षुभव पीत्वा चर्वयेत्तगरं वचाम् ।**
**तप्त लोहं लिहेत्पश्चात्काचिद्धानिर्न जायते ॥४९॥**

घिउ र उखुको रस पिई त्यसपछि तगर र बोभ्मो चपाउनू । यसपछि तातो फलामको डल्लो चाट्दा पनि कुनै हानी गर्दैन ।

**उच्चटाया रसेनैव सर्वाङ्गे लेपमाचरेत् ।**
**अङ्गाराद्यग्नि मध्ये तु भ्रममाणो न पीड्यते ॥५०॥**

रातीगेडी विशेषको अर्क (रस) शरीर भरी दलेर आगोमा
पसेर घुम्दा पनि आगोले पोल्दैन ।

**तारश्च वज्रकस्यान्ते अमृतं कुरु युग्मकम् ।**
**स्वाहान्तस्थित वर्णोऽयमाग्नस्तम्भे नियोजयेत् ॥५१॥**

तर यसो गर्नु अघि "ॐ तारकेश्वर वज्रस्यामृतं कुरु कुरु स्वाहाः"
मन्त्र सिद्ध गरी जप गर्नुपर्दछ ।

## जलस्तम्भन विधि



**सर्पाक्ष्यास्यस्य रक्तं तु सूर्यचन्द्रातपेधृतम् ।**
**सुखेन जलमध्येऽसौ पर्यटेन्निजगेष्टवत् ॥५२॥**

सर्पको आँखा र मुखको रगत घाम र चन्द्रकिरणमा सुकाउनू । तब यसलाई आफूसँग
राखी पानीमा घरमै हिँडेजसरी आनन्दले हिँडडुल गर्नू ।

**श्वेता मूलं कुसुम्भस्य रसेन परिपेषितम् ।**
**तेनैव रञ्जयेद्वस्त्रन्तेनाङ्गं परिवेष्टयेत् ॥५३॥**
**गम्भीरजलमध्येऽपि यावदिच्छं स तिष्ठतु ।**
**जलस्तम्भस्य सिद्धिस्तु भवेन्मत्स्यार्क भक्षणात् ॥५४॥**

सेतो रातीगेडीको जरालाई कुसुमको रसमा राम्ररी पिँधेर कपडा रङ्गाउनू । त्यो कपडा
लगाई गहिरो जलको बीचमा पनि चाहेसम्म बस्न वा सकिन्छ । तर, जलस्तम्भनको यो
विधि माछाको अर्क खाएर मात्र सिद्ध हुन्छ ।

भैरवीय कपालस्य चूर्णं श्लेष्मान्तकं फलम् ।
पिष्ट्वा तेनाजिनं लिप्त्वा घनन्द्व्यंगुलमानतः ॥५५॥
तच्छुष्कन्निक्षिपेत्तोये तडागे वा नदी तटे ।
तस्योपरि स्थितो योऽसौ न कदाचिन्निमज्जति ॥५६॥

मानव खोपडीको धुलो र लौसी पिँधेर कुनै छालामा दुई अमल बाक्लो हुने गरी दल्नू । यो छाला सुकेपछि यसलाई तलाउ वा नदीको किनारमा राख्नू ।
यसमाथि बस्नाले कहिल्यै डुबिन्न ।

## उन्मत्त विधि

ऊर्णनाभिश्च षड्विन्दुः समांशः कृष्णकण्टकी ।
भावयेतदर्केण शत्रु गात्रे बिनिक्षिपेत् ॥५७॥
स्फोटा भवन्ति सप्ताहान् म्रियते च तया रुजा ।

इन्दीवरमयुराणाम्पिच्छलेपात्सुखी भवेत् ॥५८॥

माकुरो, षड्विन्दु (गोबरमा हुने कीरा विशेष वा बिच्छी ?) लाई बराबर मात्रामा लिई कालो कण्टकारीको अर्कमा भिजाउनू । यसपछि यो अर्क शत्रुका शरीरमा छर्कनू । हप्ता दिनमै शत्रुका शरीरभरी फोका उठ्दछन् । यसको पीडाले उ मर्दछ । नीलकमल र मयुरको प्वाँखको लेप दल्नाले ठिक हुन्छ ।

याम्यभौमे मृतोयस्तु तद्भस्मादाय रक्षयेत् ।
वैरिवर्चस्कसंयुक्तं शरावैः सम्पुटी कृतम् ॥५९॥
मृतक्लेशैस्तदावेष्ट्य शून्यागारे परित्यजेत् ।
यावच्छुष्यति सा विष्ठा तावच्छत्रुर्मृतो भवेत् ॥६०॥
तारो नमो भगवते ॐ डामरेश्वराय च ।
अमुकं मारय मारय ठः ठः एवं मन्त्रमुदीरयेत् ॥६१॥

भरणी नक्षत्र परेको मङ्गलबार मरेका व्यक्तिको खरानी लेराएर जतन गरी राख्नू । यसमा शत्रुको दिसा मिसाएर कुनै भाँडामा हाली बन्द गर्नू । यसलाई कुनै लाशको कपालले बेरी कुनै सुनसान घरमा लगेर राख्नू । जतिबेरमा दिसा सुक्दछ त्यतिबेरमा शत्रु पागल भएर मर्दछ । यो प्रयोग गर्नु अघि "ॐ नमो भगवते ॐ डामरेश्वराय अमुकं (मार्नुपर्नेको नाम) मारय ठः ठः" मन्त्र जपी सिद्ध गर्नुपर्दछ ।

**भावितान्धूर्त्तजार्केण भक्ष्ये पाने प्रदीयते ।**
**उन्मत्तो जायते स्वस्थः सितागोदुग्धपानतः ॥६२॥**

माथि बताइएको भस्मलाई धतुराको अर्कमा भिजाएर खानेकुरामा मिसाई खुवाउनाले शत्रु पागल हुन्छ । मिस्री र गाईको दूध खानाले ठिक हुन्छ ।

**ल(न)वमुखी रुद्राहारः कण्टकी कण्टकैः समम् ।**
**लाङ्गूलद् द्विषो विष्ठा गृहीत्वा दक्षिणाशजाम् ॥६३॥ (?)**



लवमुखी (?), रुद्राहार (?) र काँडा सहितको कण्टकारीलाई जमालगोटाको रसमा पकाउनू । त्यसमा हरिताल मिसाएर सुकाउनू । यसको धूपले शत्रु पागल हुन्छ । कालजिरी (?) को धूपले ठिक हुन्छ ।

**वृकविष्ठां समादाय दक्षिणाशासमुद्भवाम् ।**
**विसृजेच्छयने यस्य सद्यश्शत्रोरपस्मृतिः ॥**
**क्षीरसंघृष्टमुण्डस्य शय्यात्यागेऽप्यपस्मृतिः ॥६४॥**

दक्षिणतिरबाट ब्वाँसोको दिसा लेराई शत्रुका ओछ्यानमा हालि दिँदा अथवा खोपडीलाई दूधमा घोटेर शत्रुका ओछ्यानमा हालि दिँदा शत्रु पागल हुन्छ ।

## परदेश गमन साधन

**शरपुंखी कोकिलाक्षः काकजङ्घा च भृंगकः ।**
**एतदर्कश्चित्रकेण पुष्येऽर्के ज्येष्ठयोद्धरेत् ॥६५॥**
**पीत्वा तदर्कमेतेषां मूलैस्तु कटिबन्धनम् ।**
**वायुवद्भ्रमते पृथ्वीं प्रयासेन विवर्जितः ॥६६॥**

रातो साकिनु, तालमखाना, रातीगेडी र भृङ्गक (?) को अर्क चितू सँग मिसाएर पुष्य नक्षत्रमा सूर्य आउँदा अथवा ज्येष्ठा नक्षत्रमा निकाली पिउनाले र यसको जरा कम्मरमा बाँध्नाले पृथ्वीमा मेहनत नगरी हावा जसरी हिँडडुल गर्न सक्दछ ।

**विशदा काकजङ्घा च तथा कामफलानि च ।**
**कृष्णायाः सुरभेर्दुग्धं पत्रवृक्षस्य बल्कलम् ॥६७॥**
**एतेषां पादलेपेन योजनानां शतं व्रजेत् ।**



पुष्पकासिस (धातु विशेष), रातीगेडी, कामफल (मालदह आँप ?), कालो गाईको दूध र तेजपातको बोक्रा यी सबैलाई पिँधेर गोडामा दल्नाले मानिस सय योजन हिँड्न सक्दछ ।

**श्वेतार्कस्य त मूलन्तु शुक्लवंशस्य रेचिना ॥६८॥**
**अजाया नवनीतेन पुष्यनक्षत्रपाचितैः ।**
**लेपेन पादतलयोर्व्रजेत्कामितमार्गकम् ॥६९॥**

सेतो आँकको जरा, सेतो बाँसको जरा र गोरोचनलाई पुष्य नक्षत्रमा बाख्रीको घिउमा पकाएर पैंतालामा दल्नाले मानिस जति टाढँ जान चाहे पनि जान सक्दछ ।

## बुद्धि भ्रंश विधि

**भ्रामर्यर्कन्तु पीत्वादौ पश्चादाघ्राणमाचरेत् ।**
**प्रतास्यगम्पुरन्त्वत्र धूपितञ्च चिताग्निना ॥७०॥**
**सालनिर्यास धूपेन जगदावेशितं भवेत् ।**

भमराको अर्क पहिले पिएर त्यसपछि सुँघ्नू । त्यसपछि मृतकका मुखमा राखिएको गोकुलधूपलाई चिताको आगोमा हाली त्यसले शरीरलाई धुवाँ दिनू । त्यसपछि सालधूपको धुवाँ दिनू । संसार अचम्मको देखिन थाल्दछ ।

**कृष्णागुरुं तालकञ्च कनकस्य फलानि च ॥७१॥**
**उग्रगन्धाकुक्कुटाण्डः सकलानां मधूपनात् ।**
**धूपेना पेशयेत्सर्वं यावद्देहन्न संशयः ॥७२॥**



पिप्ला, कालो धूपी, हरिताल, धतुराको फल, बोझो र कुखुराको फुल : यी सबै मिसाएर धूप सुँघाउने हो मानिस बुद्धि नाश भई रणभुल्लमा पर्दछ, कुनै शङ्का छैन ।

**मृडप्रिय प्रसूनस्य पञ्चाङ्गानि च भावयेत् ।**
**यमवाहनरक्तेन यावत्प्रकृति संख्यकम् ॥७३॥**
**तदष्टमांसधूपस्तु वत्सनाभेन संयुतः ।**
**चेष्टं हरति सर्वेषां पुरुषश्चायसाकृतिः ॥७४॥**

शिवप्रिय धतुरोको पाँचवटै अङ्ग लेराई भैंसीको रगतमा एक्काइस पटक भिजाउनू । अनि त्यसको आठौं भाग लिई वत्सनाभमा मिसाएर बालिएको धूप सुँघ्नाले सबै मानिसको बुद्धि भ्रष्ट हुन्छ र मानिस फलाम जस्तो जड हुन्छ ।

## सम्भोगसन्धिः (सहवास सन्धिकरण विधि)

सद्यो मृतस्य ग्रीवार्क क्लिन्नवस्त्र करीरके ।
दृढीकृतन्तु कीलेन शय्यायां परिधारयेत् ॥७५॥
युक्तावेतौ प्रजायेतां तदा नारी नरौभृशम् ।
वंशाद्वस्त्रस्य मोक्षेण मुक्तिः स्याच्च तदा तयोः ॥७६॥

भर्खर मरेका मानिसको जिभ्रोको आलो रगत निकाली कपडा भिजाउनू । यसमा बाँसको किला ठोक्नू । यसलाई सहवासमा संलग्न भएका मानिसका ओछ्यानमा कतै राखी दिनू । तब सहवासमा संलग्न हुने स्त्री पुरुष जोडिएका जोडियै हुने छन् । कपडाबाट बाँसको किला निकालेपछि ती छुट्टिन्छन् ।

समुद्रगामिनी नदी तदीयतीरमृत्तिकाम् ।
श्वकेशमस्यरेतसा सुरञ्जयेत्ततो नरः ॥७७॥

एतस्य वटिकां कृत्वा कोलमात्रां ददेतयः ।
सर्वाऽमनानाम्बन्धन्स्तु मोक्षोऽस्यार्कस्य पानतः ॥७८॥

समुद्रसम्म जाने नदी किनाराको माटो र कुकुरको रौं लिनू । अनि त्यही कुकुरको सहवासकालमा झरेको वीर्य र कुकुर्नीको रजमा त्यो रौं भिजाएर माटो मिसाउनू । यसका ससाना बयर जत्रा गोलि बनाउनू । यो गोलि जसलाई खान दिइन्छ त्यसको सहवास आसन खुल्दैन । पछि यसैको अर्क पिएपछि मुक्ति मिल्दछ ।

### भोक बढाउने योग

अग्न्यर्कन्तु समाकृष्य पिवेत्पश्चाद् भुजिञ्चरेत् ।
बृन्तार्कमर्कपुष्पस्य पीत्वा पीठे निषिच्य च ॥७९॥
सोऽति भुङ्क्ते घृतैः सार्द्ध वह्नन्नभीमसेनवत् ।

**गृहीत्वा मन्त्र्यसायन्तु विभीततरुपल्लवान् ॥८०॥**
**आक्रम्य दक्षजङ्घायां विंशत्याहाग्भुग्भवेत् ।**
**अर्कमान्मन्त्र्य सन्ध्यायां शतपुष्पस्य मालिकाम् ॥८१॥**
**शीर्षे भद्ध्वा कृपणतान्त्यक्त्वा भीमवदत्यसौ ।**

चितूको अर्क निकाली पिएर एकछिन पछि खाना खानू । अथवा आँकको फूल भित्रको भेट्नूको अर्क निकाली पिउनू र केही अर्क आसन मुनि छर्कनू । तब त्यो मानिस भीमसेनले जसरी खाने बन्दछ । साँझमा बर्रोको रुखलाई निमन्त्रणा गर्नू वा मन्त्रनू । त्यसपछि भोलिपल्ट गएर त्यसको पात टिपेर लेराउनू । अनि यसलाई दाहिने तिघ्रामा च्यापेर खान बस्दा बीस जना मान्छेले खानेजति खान सक्दछ । साँझमा गएर आँकको रुखलाई मन्त्रनू । भोलिपल्ट बिहान गएर त्यसका सयवटा फूल टिपेर लेराउनू । त्यसको माला उनी टाउकामा बाँध्नू । त्यो मानिसले दरिद्रता त्यागी भीमसेनले जसरी खाना खान्छ । यस बेला "ॐ नमस्ताराय सर्वभूताधिपतये मम ग्रासं शोषय शोषय स्वाहा" मन्त्र सिद्ध गरी जप्नु पर्दछ ।



## भोक हटाउने प्रयोग

**गणेशप्रियमूलन्तु तुरंगाह्वश्च मूलकम् ॥८२॥**
**नीलोत्पलस्य मूलानि कसेरुश्चापि पाचयेत् ।**
**तत्पायसञ्च सत्तृतं भुक्तं मासं क्षुधापहम् ॥८३॥**
**उदुम्बरशमीजम्बुवीजं मूल शिरीषजम् ।**
**बीजन्तु चूर्णितं भुक्तं मासार्द्धं क्षुत्तृषापहम् ॥८४॥**
**कोकिलाक्षस्य वीजन्तु महिषीदुग्धक्षौद्रयुक् ।**
**द्वादशाहं क्षुधां हन्यादेतदर्को न संशयः ॥८५॥**

मुसलिन्डीका जरा (गणेशप्रियमूल), अश्वगन्धा (तुरङ्गाह्व), मूला (मूलकम्), नीलकमलका जरा (नीलोत्पलस्य मूल) र मोथे विशेष (कसेरु) लाई पकाएर खीर जस्तो बनाउनू र घिउसँग खानू । एक महिनासम्म भोक लाग्दैन । डुम्री, शमी, जामुनु, मूला र शिरीषको

बीज मिसाई धुलो बनाएर खाए पन्ध्र दिनसम्म भोक र तिर्खा लाग्दैन । तालमखानाका बीजको अर्क निकाली त्यसमा भैंसीको दूध र मह मिसाएर पिउनाले बाह्र दिनसम्म भोक लाग्दैन, यसमा कुनै शङ्का गर्नु पर्दैन ।

## चोरादि भय निवारण

**टङ्कलोहाश्मरीभेदजातार्केण निषेचयेत् ।**
**सहस्रधा तु तत्पत्रे मन्त्रमेतं लिखेन्नरः ॥८६॥**
**पिशाचिनिनमस्तारे चोरिणीति पदन्तथा ।**
**नखाक्षरो मनुग्यम्भीतिकुष्ठाभ्रभेदकः ॥८७॥**
**एतत्प्रभावतः कोऽपि मेघशब्दं श्रृणोति न ।**

सुहाग, फलाम र पाषाणभेदको अर्क निकाली त्यसले पातलाई हजार पटक सेचन गरी यो मन्त्र लेख्नू । "ॐ तारकाय नमः चोरिणी पिशाचिनी तारां शमय शमय स्वाहा" । यो मन्त्रले भय र कुष्ठ आदि नाश गर्दछ । यो मन्त्रका प्रभावले बादल गर्जेको पनि सुनिदैन ।



**योगनिद्रे विष्णुमाये सर्वान्निद्रय निद्रय ॥८८॥**
**नरस्त्विमं जपेन्मन्त्रं विंशद्वर्णमनुत्तमम् ।**
**विश्वोपकुल्यागुडयोर्बलेर्निद्रयते जगत् ॥८९॥**

"ॐ नमो योगनिद्रे विष्णुमाये सर्वान्निद्रय निद्रय स्वाहा" यो बीस अक्षरको मन्त्र सिद्ध गरी जप गर्नाले तथा सक्खर र पीपलको बलि दिनाले इच्छित मानिसको निद्रा भङ्ग हुँदैन । यसले सारा संसारलाई निद्रामा पार्दछ ।

**पीत्वादौ बृद्धदार्वर्कन्धत्तूरञ्जलभावितम् ।**
**मासमञ्ज्यात्तेन नेत्रे जिताक्षो निशि पश्यति ॥९०॥**

पहिले बाटुलपातेको अर्क पिएर अनि धतुरोलाई पानी भिजाई त्यसलाई महिना दिनसम्म आँखामा छर्कने गरे दृष्टिमाथि विजय प्राप्त गरी रातमा पनि दिनमा जसरी नै देख्दछ ।

**तारो नमो ब्रह्मवेषं परिरक्षद्विष्ठम्मनुः ।**
**मन्वक्षरमिमं सिद्ध्यै पञ्चाङ्गविधिना जपेत् ॥९१॥**

"ॐ तारो नमो ब्रह्मवेषरि रक्ष ठः ठः स्वाहा" मन्त्रलाई पञ्चाङ्ग विधिले (ब्रह्मचर्यादि नियम पालना गरी) जप गर्नू, सिद्धि प्राप्त हुन्छ ।

**गृहीत्वा सप्त पाषाणान्कटयाम्बध्वाव्रजेत्ततः ।**
**मुष्टावादायदुःस्पर्शां लिप्त्वार्कं पादयोस्ततः ॥९२॥**

ससाना ढुङ्गाका सात वटा टुक्रा कम्मरमा पोको पारेर बाँधी, हातमा सिस्नु (वा कण्ठकारी ?) लिई पैंतालामा यसैको अर्क दलेर जहाँ गएपनि कार्य सिद्धि हुन्छ ।



**धत्तूरार्कं पिबेच्छीघ्रं विक्षेपो जातये क्षणात् ।**
**कुर्वन्ति स्वेषु कलहञ्चौराणां स्तम्भने क्षमः ॥९३॥**

धतुरोको अर्क पिएर गए चाँडै नै पागल जस्तो हुन्छ र आपसमा झगडा गर्न थाल्दछ । यो प्रयोग चोरलाई रोक्नका लागि सक्षम हुन्छ ।

**चौरभीत्याङ्कठिल्लास्य ब्रह्मलब्धवरस्य च ।**
**तेषाचौरभयन्नास्ति ये स्मरान्त च नित्यशः ॥९४॥**

चोरको डरबाट आजित भएका देवताले ब्रह्माबाट बरदान पाउका थिए कि "जसले करेलोको अर्क घरमा छर्कन्छ वा राख्दछ, उसलाई चोरको डर हुँदैन" ।

## अथ कौतुकानि

अङ्कोलस्य तु बीजानि निक्षिप्ता तैलमध्यतः ।
धूपं दत्वा तु तत्तैलं सर्वसिद्धिप्रदायकम् ॥९५॥
तडागे निक्षिपेत्पाद्मवीजं तत्तेल संयुतम् ।
तत्क्षणाज्जायते योगिन् तडागात्कमलोद्भवः ॥९६॥
तत्तैलमामवीजे तु निक्षिपेत् विन्दुमात्रतः ।
आम्रवृक्षस्तदुपन्नः क्षणमात्रात्फलान्वितः ॥९७॥

अम्पीफलको गेडालाई त्यसैको तेलमा भिजाएर त्यसको धूप बाल्नाले यसले सबै खालका सिद्धि दिन्छ । जसले कमलका गेडालाई अम्पीफलको तेलमा भिजाएर तलाउमा हाल्नाले तुरुन्त उम्रन्छ । यही तेल एक थोपा आँपको कोयामा हाल्ने हो भने तुरुन्तै आँप उम्रन्छ ।

घूकविष्ठां गृहित्वा त्वैरण्ड तैलेन पेषयेत् ।
यस्याङ्गे विनिक्षिपेद्विन्दुमदृश्यो जायते नरः ॥९८॥
मातुलुङ्गस्यबीजानां तैलं ग्राह्यं प्रयत्नतः ।
लेपयेत् ताम्रपत्रे तं मध्याह्ने च विलोकयेत् ॥९९॥
रथेन सहचाकाशे दृश्यते भास्करो ध्रुवम् ।
विनामन्त्रेण सिद्धिः स्यात् सिद्धयोगः उदाहृतः ॥१००॥

लाटोकोसेरोको विष्ठा लेराई अरिडको तेलमा मिसाएर जसको शरीरमा एक थोपा हालिन्छ उ अदृश्य हुन्छ । बिमिरोको गेडा जम्मा पारी विधिपूर्वक तेल निकाल्नू । यसलाई कुनै तामाको भाँडामा हाल्नू । मध्याह्नमा सूर्यलाई सामुन्ने पारी यो तेल सहितको भाँडो राख्नू र सूर्यलाई हेर्नू । आकाशमा रथमा चढेका सूर्यलाई देखिन्छ । यो बिना मन्त्र सिद्ध हुने सिद्ध योग हो ।

इति लङ्केश्वर रावण कृतार्कप्रकाशे अष्टं शतकं संपूर्णम्

रावण लिखित अर्कप्रकाश अन्तर्गत आठौं शतकको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो

## ॥ अथ नवमं शतकम् ॥

### शिरापोषक गण

तिलपर्णी समुद्रोत्थफलञ्च नवधा तथा ।
समुद्रेस्थितिरेवास्य शिरायाः पोषकोगणः ॥१॥

रक्तचन्दन र समुद्रफल नौ किसिमको हुन्छ । यो समुद्रमा हुन्छ । यी दुवै शिरापोषक गणमा पर्दछन् ।

### वामन गण

ज्योतिष्मती च हेमाह्वा धत्तूरो नागपुष्पिका ।
माक्षिकन्दारुभद्रञ्च गणोऽयं वामनः स्मृतः ॥२॥



मालकागुनु, चाँप, धतुरो, पहेँलो जुही, सुनामखी आदि सात उपधातु र देवदारुलाई वामनगण (बान्ता गराउने वर्ग) भनिन्छ ।

### रञ्जन गण

चतुर्बिधा हरिद्रा तु पतङ्गो रक्तचन्दनम् ।
नीलाकुसुम्भमञ्जिष्ठा लाक्षा मेहन्दि किंशुकः ॥३॥
जलपुष्पञ्चाञ्जनञ्च विमला पारिजातकः ।
पाण्डोः फलम्बीजकश्च गणोऽयं रञ्जनः स्मृतः ॥४॥

चारप्रकारका हरिद्रा (हलेदो, चुत्रो, कपूरहलेदो र वनहलेदो), पतङ्ग (चन्दन विशेष), रक्तचन्दन, नीर, कुसुम, मजिठो, लाहा, मेहन्दि, पलाँस, जलपुष्प (आठ प्रकारका कमल

आदि जलमा हुने फूल), अञ्जन (खनिज पदार्थ वा रुख विशेष), हात्तीकाने, पारिजात, गेरु र विजयसाललाई रञ्जकगण (रङ्गाउने वर्ग) भनिन्छ ।

## नेत्र्य गण

**रसाञ्जनन्द्विधा प्रोक्तन्त्रिफला लोध्रकद्वयम् ।**
**कुमारिका कुलत्था च गणोऽयन्नेत्र्यसञ्ज्ञकः ॥५॥**

दुई प्रकारका रसाञ्जन (पित्तल धातु खार्दा निस्कने किटको पुष्पाञ्जन नामक गाजल र चुत्रोको गाजल), त्रिफला, रातो र सेतो लोध, घिउकुमारी र गहत यी आँखाका लागि लाभदायक नेत्र्यगणका ओखती हुन् ।

## त्वच्य गण



**तैलन्तु नवधा प्रोक्तं वाकुची चक्रमर्दकम् ।**
**स्थौणेयं पर्पटी स्पृक्का त्वच्योऽयं गण उच्यते ॥६॥**

नौ किसिमका तेल (तिल, सर्सिउँ, अरिड आदि), बकुची, ताप्रे, भेडेकुरो, पित्तपापडा र कपुरपाती : यी औषधीको समूहलाई त्वच्यगण (छालाका लागि उपयोगी ओखतीको समूह) भनिन्छ ।

## उपविष गण

**भल्लातकं चातिविषा चतुर्द्धाभङ्ग खाखसम् ।**
**करवीरं द्विधा प्रोक्तमहिफेनं द्विधा मतम् ॥७॥**
**धत्तूरस्तुचतुर्द्धा स्यात् द्विधा गुञ्जा तु निर्विषी ।**
**विषतिन्दुर्लाङ्गली च गणश्चोपविषाभिधः ॥८॥**

भलायो, उत्तिस, चार किसिमका भाङ (?), अफिम, रातो कँडेल, सेतो कँडेल, दुई प्रकारका अफिम (?), चार किसिमका धतुरो, दुई प्रकारका रातीगेडी, निर्विषी, विष (?), तिन्दु र हलहलेको समूहलाई उपविष गण भनिन्छ ।

## जलपुष्प गण

**अष्टधा कमलानि स्युर्जलसी च चतुर्विधा ।**
**जलजीवी कुम्भिका च जलपुष्पगणस्त्वयम् ॥९॥**

आठ प्रकारका कमल (?), चारप्रकारका जलसी (?), जलजीवी (?) र जलकुम्भीलाई जलपुष्प गण भनिन्छ ।

## कन्द गण



**आलूकमष्टधा प्रोक्तं मूलकं त्वष्टधा तथा ।**
**अष्टधा कदलीकन्दी गृञ्जनं द्विविधं मतम् ॥१०॥**
**हस्तकन्दश्च लशुन पलाण्डुर्द्विविधो मतः ।**
**अष्टधा पद्मिनीकन्दो वाराहीकन्दलक्षणः ॥११॥**
**केमुकं मुशलीकन्दो विदारी च कसेरुकः ।**
**शतावरी चाश्वगन्धा बृहत्पाण्डु सुदर्शनः ॥१२॥**
**आर्द्रकं शक्रकन्दश्च कोलकन्दो नगोद्भवः ।**
**मौलिकन्दश्शूरणश्च ज्ञेयः कन्दगणस्त्वयम् ॥१३॥**

आठ प्रकारका आलु, आठ प्रकारका मूला, आठ प्रकारका कदलीकन्द (?), दुई प्रकारका गाजर, तरुल, लसुन, रातो प्याज, सेतो प्याज, कमलकन्द आठ प्रकारका, गिठो, केमुक (?), मुसलीकन्द, कुभिण्डो, बिराले लहरो, सेतो मोथे, कुरिलो, अश्वगन्धा, बृहत्पाण्डु (?), सुदर्शन (?), अदुवा, इन्द्रजौको कन्द (सखरखण्ड ?), तिते गिठो, पर्वते कन्द (?), मौलिककन्द (?) र ओललाई कन्दगण (कन्दमूल वर्ग) भनिन्छ ।

## लवण गण

**शाकम्भरी च सामुद्रं चोद्भिदं विड् सुवर्चलम् ।**
**सैन्धवन्नीलकण्ठं च पङ्गुं लवणमष्टधा ॥१४॥**

साँभर, समुद्री, उद्भिद (वृक्षजन्य), वीरे, सौवर्चल, सिधे, कालो (नीलकण्ठ) र पङ्गु यी आठ प्रकारका नुन हुन् ।

## क्षार गण

**सर्जिक्षारो यवक्षारष्टंकणं च सुवर्चिका ।**
**पलाशवज्र शिखरी क्षार सप्तकमीरितम् ॥१५॥**

सज्जिखार, यवखार, स्वाग, सुवर्चिका (?), पलाश (?), वज्र (?) र शिखरी (?) यी सात क्षारगण हुन् ।



## अम्ल गण

**अम्लवेत स जम्बीर लुङ्गाम्लचणकाम्लकाः ।**
**नागरङ्गं तिन्तिडी च चिञ्चाफलं च निम्बुकम् ॥१६॥**
**चाङ्गेरी करमर्द चैव दाडिमं तथैव च ।**
**एष चाम्लगणः प्रोक्तो वेतसाम्य समायुतः ॥१७॥**

अम्लवेत, ज्यामिर, बिमिरो, चणकाम्ल ( चना ?), सुन्तला, अमिली, चिञ्चाफल (अमिली विशेष), कागती, चरीअमिलो, पनेरु, दारिम र शङ्खेत्रो यी अम्लगण (अमिलो वर्ग) हुन् ।

## फल गण

आम्रं तु त्रिविध प्रोक्त द्विधाम्रातकमुच्यते ।
राजाम्रं चैव कोशाम्रं पनसस्त्रिविधो मतः ॥१८॥
कदली त्वष्टधा प्रोक्ता लकुचं चिर्भिटं द्विधा ।
त्रिधा तु नारिकेर स्यात्कालिन्दं द्विविधं मतम् ॥१९॥
द्विविधं खजूरकं स्यात्पञ्चधा कर्कटी भवेत् ।
पूगीफलं चतुर्धा स्याद् द्विधा तालफलं भवेत् ॥२०॥
बिल्वं कपित्थ नारङ्गं तिन्दुकं स्याच्चतुर्विधम् ।
राजाम्रोंऽप्यथ जम्बूश्च वदरं चक्रमर्दकः ॥२१॥
द्विधा चैतानि चत्वारि विंशकं तु पियालकम् ।
क्षीरिका पद्मबीजं च माखान्नं श्रृङ्गाटकं परम् ॥२२॥
परूषकं मधुकश्च दाडिमं स्याच्चतुर्विधम् ।
द्विधा गौरीफलं कोलं शृङ्गारीमिष्टबीजकम् ॥२३॥

बहुवारश्च कतकं सुलेमानी वदामकः ।
द्राक्षा खर्जूरिका द्वेधा वादामोऽक्षोटपीलुकम् ॥२४॥
मिष्टनिम्बू फलं सेवं शिलीन्ध्रं कट्फलानि च ।
आतंका तामृतफलं प्रोक्तः फलगणस्त्वयम् ॥२५॥

तीन किसिमका आँप, दुई किसिमका अमारो, कलमी गरिएको आँप, बिज्जु आँप (?), तीन किसिमका कटहर, आठ प्रकारका केरा, बडहर, दुई किसिमका मेवा, तीन किसिमका नरिवल, दुई किसिमका तरबुजो, दुई किसिमका खजुर, पाँच किसिमका काँक्रा, चार प्रकारका सुपारी, दुई किसिमको तालफल, बेल, कैथ, सुन्तला, चार किसिमका तिन्दु; राजाम्र, जामुनु, बयर र ताप्रे दुई दुई किसिमका; बीस किसिमका चिरौंजी, खिर्नी, कमलका बीज, माखान्न (मखाना ?), सिँगडा, चार प्रकारका फाल्सा, महुवा र दारिम; दुई किसिमका गौरीफल (?), कोल (बयर विशेष), शृङ्गारी (?), मिष्टबीज (?), लप्सी, निर्मली, सुलेमानी (?), बदम, अङ्गूर, खजुर, ओखर र कुचिला यी सबै दुई दुई किसिमका; मौसम वा जुनार, स्याउ, शिलीन्ध्र (च्याउ ?), काफल, आतंका (?) र अमला यी सबै फलगण हुन् ।

## शालि गण

रक्तशालिः कलमः पाण्डुकः शकुनाहृतः ।
सुगन्धकः कर्दमको महाशालिश्च दूषकः ॥२६॥
पुष्पाण्डकः पुण्डरीकस्तथा महिषमस्तकः ।
दीर्घशूकः काञ्चनको हायनोलोध्रपुष्पकः ॥२७॥
षष्टिकोऽनसुमालश्च पार्वतीयश्च भिंभणः ।
हकुवाराजभोगश्च प्रोक्तः शालिगणस्त्वयम् ॥२८॥

रक्तशालि, कलम, पाण्डुक, शकुनाहृत, सुगन्धक, कर्दमक, महाशालि, दूषक, पुष्पाण्डक, पुण्डरीक, महिषमस्तक, दीर्घशूक, काञ्चनक, हायन, लोध्रपुष्पक, सठिया, अनसुमाल, पार्वतीय, भिंभण, हकुवा र राजभोग यी सबै शालिधान्य गण हुन् ।

## शिम्बीधान्य गण



त्रिधा यवश्च गोधूमो मुद्गः षड्विध ईरितः ।
त्रिविधः प्रोच्यते माषो राजमाषस्त्रिधा मतः ॥२९॥
मकुष्ठस्तुवरी त्रेधा निष्पावश्च मसूरकः ।
त्रिधा चणकमुद्दिष्टं कलायस्त्रिविधः स्मृतः ॥३०॥
सर्षपस्त्रिविध प्रोक्तः तिलस्तुत्रिविधस्मृतः ।
अतसी तुवरी राजी शिंवीधान्यगणस्त्वयम् ॥३१॥

जौ तीन प्रकारका, तीन प्रकारका गहुँ र छ प्रकारका मुगी हुन्छन् । तीन प्रकारका माष र तीन प्रकारका राज्मा हुन्छन् । वनमुगी तीन थरीका, रहर तीन थरीका, तीन किसिमका सिमी, तीन किसिमका मसुरो र तीन किसिमका चना हुन्छन् । तीन प्रकारका केराउ, तीन प्रकारका सर्सिउँ र तीन प्रकारका तिल हुन्छन् । यी र आलस, तुवरी (?) अनि रायोलाई शिम्बीधान्य गण भनिन्छ ।

## क्षुद्रान्न गण

कंगुश्चतुर्विधः प्रोक्तः स्यामाकः कंगुवद्गुणः ।
कोद्रवो द्विविधः प्रोक्तो वंशबीजं शरोद्भवम् ॥३२॥
कुसुम्भबीजं नीवारः पवनश्च गवेधुका ।
यवनाले बाजरी च क्षुद्रधान्यगणस्त्वयम् ॥३३॥

चार किसिमका कागुनु, कागुनु जस्तै गुणको सामाधान, दुई प्रकारका कोदो, बाँसका बीज, खसका बीज, कुसुमका बीज, नाभो अन्न, पहेँलो भृङ्गराज, नागबला, जुनेलो र बाजुरा (?) यी क्षुद्रान्न गण हुन् ।

## पत्र शाक गण

द्विर्वास्तुकं पोतकी द्विर्द्विर्माषस्तण्डुलीयकः ।

द्विधा पालक्यपि त्रेधा नाडिकं कालशाककम् ॥३४॥
कलम्बी च बृहल्लोणी चिञ्चुश्चाङ्गेरिचुक्रिका ।
सुनिषण्णश्च गोजिह्वा द्रोणपुष्पी पटोलकम् ॥३५॥
शतपुष्पा मेथिका च कुञ्जरा तीक्ष्णकण्टका ।
धान्यकं चक्रमर्दश्च जीवन्ती काकमाचिका ॥३६॥
पर्पटः कासमर्दश्च द्विधा राजीगरी ततः ।
लिङ्गदण्डो द्विधा कोष्ठ पत्रशाकगणस्त्वयम् ॥३७॥

दुई किसिमका बेथेका साग, दुई किसिमका पवैका साग, दुई प्रकारका माषको साग, लुँडेका साग, दुई किसिमको पालुङ्गो, तीन प्रकारका नरिचो, करमको साग, कलम्बी (करमको एक जात) को साग, बृहल्लोणी (?), चमसुर, चरीअमिलो, चरीअमिलो विशेष, सेतो पुनर्नवा, जिभ्रे, गुम्पाती, परबर, सुप, मेथी, धयँरो (?), करीर, धनिया, ताप्रे, जिरी, कवइ, पित्तपापडा, करौंदी, दुई किसिमका रायो, दुईप्रकारका लिङ्गदण्ड (?) र कोष्ठ (?) यी पत्रशाक गण हुन् ।

## पुष्प शाक गण

**काञ्चानारो द्विधा रास्ना खदिरस्शाल्मली द्विधा ।**
**चतुः सौभाञ्जनेऽगस्तिः पुष्पशाकगणस्त्वयम् ॥३८॥**

कोइरालो, दुई प्रकारका फ्याक्सेकन्द, खयर, दुई प्रकाका सिमल, चार प्रकारका सैजन र अगस्ति : यी पुष्प शाक गण हुन् ।

## फल शाक गण

**द्विः कूष्माडं त्रिधाऽलाबूः करसी द्विश्च डिण्डिशः ।**
**द्विः कारवेल्लं वृन्ताकं चतुः कर्कोटकी द्विधा ॥३९॥**
**त्रिधा कोशातकी बिम्बी द्विधा शिम्बी त्रिधा भवेत् ।**
**दक्षिणां पञ्चधा डोडी कण्टकारि फलं द्विधा ॥४०॥**
**पिण्डारकं च गोविन्दं द्विधा चैलं तथैव च ।**
**श्लेष्मान्तकं काकतिन्दु फलं शाकगणस्त्वयम् ॥४१॥**

कुभिण्डो दुई किसिमका, लौका तीन किसिमका, करसी (?), दुई किसिमका डिण्डिश ( गोलो लौका विशेष), दुई किसिमका करेला, चार प्रकारका भण्टा, दुई प्रकारका वनतोरियाँ, तीन किसिमका घिरौंला, दुई किसिमका गोलकाँक्री, तीन प्रकारका राजमा, दक्षिणा पाँच थरी (?), डोडी (?), दुई प्रकारका कण्टकारी, पिँडालु, गोविन्द (?), दुई थरी चैल (?), लप्सी र कुचिला : यी फल शाक गण हुन् ।

## जाङ्गल गण

**हरिणैण कुरङ्गर्ष्य पृषत न्यंकु शम्बराः ।**
**राजीवोऽपिच मुण्डीचे त्याद्याजाङ्गल संज्ञकाः ॥४२॥**

हरिण, कृष्णसार, फिका तामा रङको कृष्णसार, ऋष्य (मृगविशेष), जरायो, न्यंकु (जरायो विशेष), साँभर मृग, आङमा धर्साजस्ता रेखा हुने एकजातको मृग (राजीव) र मुडुलीमृगलाई जाङ्गल गण भनिन्छ ।

## बिलेशय गण

**गोधा शश भुजङ्गाखु शल्लकाद्या विलेशयाः ।**

गोहोरो, खरायो, सर्प, मुसा, दुम्सी आदिलाई बिलेशय गण भनिन्छ ।

## गुहाशय गण

**सिंह व्याघ्र वृकाऋक्षा हरिहाद्वीपिनस्तथा ॥४३॥**
**बभ्रु जम्बूकमार्जारा इत्याद्याः स्युर्गुहाशयाः ।**



सिंह, बाघ, ब्वाँसो, भालु, चितुवा, चितुवा विशेष, न्याउरीमुसो, स्याल, वनबिरालो आदि गुहाशय गणमा पर्दछन् ।

## पर्णमृग गण

**वनौकोवृक्षमार्जारो वृक्षमर्कटिकादयः ॥४४॥**
**एते पर्णमृगाः प्रोक्ताः शुश्रुताद्यैर्महर्षिभिः ।**

बाँदर, रुखबिरालो, लोखर्के आदिलाई सुश्रुत आदि महर्षिले पर्णमृग गण भनी बताएका छन् ।

## विष्किर गण

**वर्त्तकालाववर्त्तीर कपिञ्जलक तित्तिरा ॥४५॥**
**पादयुधः कुलिङ्गश्च चकोराद्यास्तु विष्किराः ।**

बट्टाई, लाभे, वर्त्तीर (बट्टाई विशेष), सेतो तित्रो, तित्रो, पादयुध (?), भँगेरो, चकोर आदिलाई विष्किर गण भनिन्छ ।

## प्रतुद गण

**हारीतोधवलः पाण्डुश्चित्रपक्षीबृहच्छुकः ॥४६॥**
**पारावतः खञ्जरीटः पिकाद्याः प्रतुदाः स्मृताः ।**

रातो सुँगा, धवल (?), ढुकुर, कुर्ले ढुकुर, ठुलो सुँगा, परेवा, खञ्जन, मुजुर आदि प्रतुद गण हुन् ।



## प्रसह गण

**काको गृध्र उलुकश्च चिल्लश्च शशघातकः ॥४७॥**
**चाषोभासश्च कुरर इत्याद्याः प्रसहाः स्मृताः ।**

काग, गिद्ध, लाटोकोसेरो, चिल, बाज, ठेउवा, भास (गिद्ध विशेष), कन्याङकुरुङ आदि प्रसह गण हुन् ।

## ग्राम्य जीव

**छाग मेष वृषाश्वश्वा ग्राम्याः प्रोक्तामहर्षिभिः ॥४८॥**

बोका, भेडो, साँढे, घोडा आदि ग्राम्य जीव हुन् ।

## कूलेचर जीव

**लुलाय गण्ड वाराह चमरी वारणादयः ।**
**एते कूलचराः प्रोक्ता यतः कूलेचरन्त्यपाम् ।।४९।।**

रँगो, गैंडा, बँदेल, चौंरी, हात्ती आदि पानीका नजिकै बस्ने कूलेचर जीव हुन् ।

## प्लव जीव

**हंस सारस कारण्ड वकक्रौञ्च शरारिकाः ।**
**नन्दीमुखी स कादम्बा बलाकाद्याः प्लवाः स्मृताः ।।५०।।**

हाँस, सारस, सानो घरेलु हाँस, बकुल्लो, कऱ्याङकुरुङ, चाँचर, माख्लो चुच्चो सारो र बाटुलो हुने चरा, राजहाँस, बकुल्लो विशेष आदिलाई प्लव जीव भनिन्छ ।



## कोशस्थ जीव

**शङ्खः शङ्खनखश्चापि शुक्ति शम्बूककर्कटाः ।**
**जीवा एवं विधाश्चान्ये कोशस्थाः परिकीर्त्तिता ।।५१।।**

शङ्ख, सानो शङ्ख, सिपी, शम्बूक (जलजन्तू विशेष), गँगटो, जीवा (?) आदि कोशस्थ ( खोलभित्र हुने) जीव हुन् ।

## पादीन जीव

**कुम्भीरं कूर्म नक्राश्च गोध मकर शङ्कवः ।**
**घण्टिकः शिशुमारश्चेत्यादयः पादिनः स्मृताः ।।५२।।**

नाव जातको गोही, कछुवा, नाक जातको गोही, गोहोरो, मगर जातको गोही, सकुची जातको माछा, घण्टिक (?), सोंस आदि पादिन गण हुन् ।

## माछा

**भक्कुरो रोहितश्चैव प्रोष्ठी पाठीन मोचिका ।**
**श्रृङ्गील्लसश्शष्कुली च कवक्येरङ्गिमगुरी ॥५३॥**

भक्कुर, रहु, प्राष्ठी, पाठीन, मोचिका, सिङ्गे, शष्कुली, कवकी,अरङ्गी, मगुरी आदि माछाका जात हुन् ।

## विरेचन गण

**आरग्वधश्च कम्पिल्लः कटुक्वङ्कोटवारुणी ।**
**शिवलिङ्गी नागपुष्पी द्विधादन्ती त्रिधात्रिवृत् ॥५४॥**
**सन्नाहमाक्षिकन्द्वधा रेचनीचेन्द्रवारुणी ।**
**जयपाल सुगन्धा च विरेचनगणस्त्वयम् ॥५५॥**



राजवृक्ष, कम्पिल्लक, कुटकी, अम्फीफल, ऐरेलु, शिवलिङ्गी (लहरो विशेष), तीतेपाती, दुई थरी अजयपाल, तीन थरी निशोध, सन्नाह (?), दुई थरी सोनामखी, सिँदुरे, ऐरेलु, अजयपाल र फ्याक्सेकन्द : यी विरेचन गण (दिसा, पिसाब खुलाउने) हुन् ।

## पाचक गण

**पाषाणभेदो मरिचं यवानीजलशीर्षकम् ।**
**शुण्ठी चव्य गज कणा शृंग्यादिः पाचकोगणाः ॥५६॥**

पाषाणभेद, मरिच, ज्वानु, जलशीर्षक (?), सुठो, चाँभा, चाँभा विशेष र र गुनाभा : यी पाचक गण हुन् ।

## उष्ण गण

त्रिविधा पिप्पली तस्या मूलस्तुम्बुरुकस्त्रिधा ।
तेजोह्वायाः फलं भार्गी पौष्करादिकमुष्णकृत् ।।५७।।

तीन थरीका पिप्ला, ती तीन थरी पिप्लाको जरा, तीन थरीका धनिया, चाभाका फल, भारङ्गी र अरिडको मूल जरो आदि उष्ण गण हुन् ।

## दीपन गण

द्विविधश्चित्रको धान्यं अजमोदा च जीरकम् ।

त्रिविधं हवुषा द्वेधा गणोऽयं दीपनः स्मृतः ।।५८।।

दुई किसिमका चितू, धनिया, ज्वानो विशेष, तीन थरी जीरा र दुई थरी हाउबेर (?) : यी दीपन गण हुन् ।

## पौष्टिक गण

चतुर्विधस्तुगाक्षीरी चन्द्रशूरोष्टवर्गकः ।
द्वीपान्तरवचा चैव त्वक्पत्रन्नागकेशरम् ।।५९।।
तालीशपत्रन्त्वक्क्षीरी त्वचा च गुरुरोहिणी ।
कपिकच्छू तोयवद्धं भूफलं पौष्टिको गणः ।।६०।।

चार थरीका वंशलोचन, चमसुर, अष्टवर्ग, द्वीपान्तर वचा, दालचिनी, नागकेसर, लोठसल्ला, त्वक्क्षीरी (वंशलोचन ?), तेजपा, गुरुरोहिणी, काउछो, तोयवद्ध (?) र हरियो मुगी : यी पौष्टक गण हुन् ।

## वातनाशक गण

**महानिम्बश्च कार्पासी द्विधैरण्डो वचा द्विधा ।**
**निर्गुण्डी द्विधा हिंगु गणोऽयं वातहारकः ॥६१॥**

बकाइनु, कपास, दुई थरी अरिड, दुई थरी बोझो, नेवारी दुई थरी र हिङ : यी वातनाशक गण हुन् ।

## कृमिनाशक गण



**बिडंगं नागभिन्ना च पारसीकयवानिका ।**
**द्विधाकरञ्जष्टङ्कारी कौटजः कृमिहागणः ॥६२॥**

वायुविडङ्ग, फ्याक्सेकन्द, पारसिक ज्वानु, दुई थरी कुबेराक्ष, टङ्कारी (?) र ठूलो कुरा : यी कृमिनाशक गण हुन् ।

## तृण गण

**त्रिधा वंश कुशः कासस्त्रिधा दूर्वा तथानलः ।**
**गुन्द्रो मुञ्जो गुन्द्रमूलप्रोक्तस्तृणगणस्त्वयम् ॥६३॥**

तीन प्रकारका बाँस, कुश, काँस, तीन थरी दूबो, निगालो, मूँज र मोथे : यी तृण गण हुन् ।

## प्रसर गण

**प्रसारिणी द्वयं मुण्डी लज्जालुश्च पुनर्नवा ।**
**द्विशारिवा भृङ्गराजः पञ्चधा छिक्किका द्विधा ॥६४॥**
**ब्राह्मीद्वयं अलम्बूषा शङ्खपुष्पी च शातला ।**
**पातालगरुडी षड्धा गणः प्रसर संज्ञकः ॥६५॥**

दुई थरी बिरी, भुस विशेष, लज्जावती, पुनर्नवा, दुई थरी खनायो, पाँच थरी भृङ्गिराज, दुई थरी छिउँके झार, दुई थरी ब्राह्मी, गोरखमुण्डी, शङ्खपुष्पी, हात्तीकाने र छ थरीका भोटे खयर : यी प्रसर गण हुन् ।

## वृक्ष गण

**गम्भारी तिन्दुकः सालश्शणपर्णी च शाल्मली ।**

**शिंशपा ककुभो नन्दी रोही च खदिर त्रयम् ॥६६॥**
**बन्धूकः पुत्रजीवश्च अरिष्टश्चेंगुद जिङ्गिनी ।**
**तुन्नको भूर्जपत्रश्च धवोधन्वङ्गमोक्षकः ॥६७॥**
**भूमीसहः सप्तपर्णश्शाखोटो वरुणश्शमी ।**
**कटभीतिनिशश्चैव विल्वो वृक्षगणस्त्वयम् ॥६८॥**

खमारी, तिन्दु, साल, अपराजिता, सिमल, सिसौ, खरी, टुनी, रोही (?), तीन प्रकार खयर, दोपहरिया, पुत्रजीव (?), नीम, चिउरी, जिङ्गिनी (?), भोजपात, धँयेरो, दबदबे रुख (?, धन्वङ्ग), लोध विशेष, भूमिसह (?), छतिवन, पाते खाक्सी, सिप्लिकान, शमी, मालकागुनु, साधन, बेल : यी वृक्षगण हुन् ।

## गुल्म गण

**बला चतुष्टयं पर्णी पञ्चकं चाग्निमन्थकः ।**
**पाठा यवासो वार्त्ताकी कोकिलाक्षोऽसनो द्विधा ॥६९॥**
**अपामार्ग द्वयं मूर्वा त्रायन्ती शरपुङ्खिका ।**
**काकनासा काकजङ्घ मेषशृङ्गी च वन्दकम् ॥७०॥**
**बन्ध्या कर्कोटकी त्रेधा वर्वरी तुलसी द्विधा ।**
**वज्रदन्ती द्विधाऽजाजी त्रिधा गुल्मगणस्त्वयम् ॥७१॥**

चार थरीका बला (बला, अतिबला, नागबला र महाबला), पाँच थरी पर्णी (साकिनु (शालपर्णी), वनमुगी (मुद्गपर्णी), सतिबयर (पृष्ठपर्णी), वनमाष (माषपर्णी), घोडताप्रे (मण्डूकपर्णी); अरणी, गानेगुर्जो, सेतो सानो बिही, तालमखाना, दुई किसिमका अपराजिता, दतिवन दुई थरी, मुँज, मुँडिलो, रातो साकिनु, कौवाठोरी, वनमुगी विशेष, मेषश्रृङ्गी, वन्दक (?), जटामसी, तीन थरी वनतोरियाँ, बाबरी, दुई थरी तुलसी, दुई थरी वज्रदन्ती र तीन थरी जीरा : यी गुल्मगण हुन् ।



## लता गण

**गुडूचिका नागवल्ली सोमवल्ल्यपराजिता ।**
**स्वर्णवल्ल्यस्थिसंहारी श्वदंष्ट्राकाशवल्लरी ॥७२॥**
**वटपत्री हिंगुपत्री वंशपत्री बृहन्नटा ।**
**अर्कपुष्पी च सर्पाक्षी द्रोणा मूषककर्णिका ॥७३॥**
**चिरपोटा मयूराह्व शिखाबन्धन वल्लिका ।**
**कनकाह्वा च वासन्ती मनोदेति लतागणाः ॥७४॥**

गुर्जो, पान, बकुची, अपराजिता, जिरी, हडचूर, ओदाने काँडो, आकाशवेली, पाषाणभेद, जिम्बु, बाँसपाते झार, बृहन्नटा (?), अर्कपुष्पी (दुधेझार विशेष), फ्याक्सेकन्द, गुम्पाती, मुसलिन्डी, चिरपोटा (?), मयूराह्व (?), शिखाबन्धन (?), लहरा (?), नागकेसर, वासन्ती र मनोद (?) : यी लता गण हुन् ।

## पुष्प गण

**जात्यम्बष्ठा कैरविका शिववल्ली कदम्बकः ।**
**चाम्पेयो माधवी चैव मल्लिका केतकी तथा ॥७५॥**
**नैपाली कुब्जकश्चैव मुचुकुन्दश्च कुन्दकम् ।**
**किङ्किरातः कर्णिकारो ह्यशोकोबणपुष्पकम् ॥७६॥**
**मारुत्तको वर्वरी च तिलकः कटसारिका ।**
**बन्धूस्तु चतुर्द्धास्यान्सिन्दूरी द्विविधा जपा ॥७७॥**
**अगस्तिर्मुनिपुत्रश्च खरपुष्पः कुठेरकः ।**
**पाटला द्विविधा सूर्यमुखी पुष्पगणस्त्वयम् ॥७८॥**

चमेली, सेतो जुही, सेतो चन्द्रकमल, मौलसिरी, कदम, चाँप, वासन्ती, लहरे बेली, क्यात्तुके, नीलो सिमाली (वा नेवारी ?), मुचुकुन्द (?), कुन्द, किङ्किरात (?), काठे चाँप, अशोक, बणपुष्प (?), मारुत्तक (?), बाबरी, चूवा, कटसरैया, चार थरी दोपहरिया, दुई थरी  बाह्रमास, । अगस्ति, दमना, खरपुष्प (?), बालो पाते बाबरी, दुई थरी पाडरी र सूर्यमुखी : यी पुष्पगण हुन् ।

## दुग्धवृक्ष गण

**द्विधार्कः पञ्चधा वज्रीं शातला दुग्धिका द्विधा ।**
**वटस्त्रि पिप्पलः प्लक्षोदुम्बरश्च पयोगणः ॥७९॥**

दुई थरी आँक, पाँच थरी सिउँडी, हात्तीकाने, दुई थरी रुदिलो, तीन थरी बर्रो, पिप्पल, पाखरी र डुम्री : यी दूग्धवृक्ष गण हुन् ।

## धूप गण

**द्विधागुरुर्देवदारुर्गन्धपाषाणकस्त्रिधा ।**
**गुग्गुलुः पीतवृक्षश्च शालनिर्यास एव च ॥८०॥**
**पद्माह्वयश्च तगरं मोचकः शल्लकीरसः ।**
**रालं नैपालकश्चेति गणोऽयं धूप संज्ञकः ॥८१॥**

दुई थरी धूपी, देवदारु, तीन थरी गन्धक, गोकुल धूप, पैयुँ, सालको खोटो, ल्वाङ, तगर, सैजन, साजको खोटो, सालधूप र नेवारी (वा नीलो सिमाली) : यी धूप गण हुन् ।

## सुगन्ध गण

**द्वि कर्पूर स्त्रि कस्तूरि लताकस्तूरिकाऽण्डजः ।**
**सिह्लको जातिकोशश्च जातीपत्री लवङ्गकम् ॥८२॥**
**द्विधैला रोचना द्वेधा पञ्चधा कुंकुमं तथा ।**
**गौडपत्रीविधासश्च सुगन्धाह्व गणस्त्वयम् ॥८३॥**

दुई थरी कपूर, तीन थरी कस्तूरी, लताकस्तूरी, मृगकस्तूरी, जाइफल, जातीपत्री (?), ल्वाङ, सुकुमेल, अलैंची, दुई थरी गोरोचन, पाँच थरी केसर, गौडपत्री (?) र विधास (?) : यी सुगन्ध गण हुन् ।

## दोश्रो थरी सुगन्ध गण

**बालकं वीरणं मांसी द्विनखं चन्दनस्त्रिधा ।**
**शैलेयं द्विविधं मुस्तं मुरा गन्धपलाशिका ॥८४॥**
**द्विकर्चुरः प्रियंगुश्च रेणुका गन्धमालती ।**
**ग्रन्थिपर्णा त्रिधा स्पृक्का कङ्कोलाख्यं च तालीसम् ॥८५॥**

सुगन्धवाल, खस, जटामसी, दुई थरी नखी, तीन थरी चन्दन, शिलाजित, दुई थरी मोथे, कालो जटामसी, गन्धपलाश, दुई थरी कपुरहलेदो, दहिगुयेंलो, शीतलचिनी, गन्धमालती (?), तीन थरीका भेडेकुरो, कपुरपाती, फलकपुर र लोठसल्लो : यी दोश्रो थरी सुगन्ध गण हुन् ।

## दुग्ध आदि गण

गावो दशधा महिषी त्रिविधाऽजास्तथामताः ।
मृग्य एकविधा मेषी त्रिधोष्ट्री दशधा हयी ॥८६॥
पञ्चधा करिणी नारी दशधा शुकरी द्विधा ।
व्याघ्रीशुनीतु द्विविधा रासभी पञ्चधा पृथक् ॥८७॥
त्रिधा वृक्धष्टधा मत्स्यी गवयीखङ्गिनीकिरिः ।
दुग्धं घृतञ्च तक्रञ्च दधिताभ्यः प्रजायते ॥८८॥



दश थरीका गाई, तीन प्रकारका भैंसी, तीन थरीका बाख्रा, एक थरीको हरिण, एक थरीको भेडी, ती थरीका उँट, दश प्रकारका घोडी, पाँच प्रकारका ढोइ, दश प्रकारका नारी, दुई थरी सुँगुर्नी, दुई थरीका बघिनी, दुई प्रकारका कुकुर्नी, पाँच प्रकारका गधा, तीन प्रकारका ब्वाँसा, आठ थरीका माछा, नीलगाई, गैंडा र बँदेल : यी दूध, घिउ, तक्र, दही आदिका लागि जन्मिएका हुन्छन् ।

## धातु वर्ग

तिथिधा धातु सुवर्णं स्यात्पञ्चधा रजतं भवेत् ।
पञ्चप्रकारकं ताम्रं वङ्गं तु द्विविधस्मृतम् ॥८९॥
जसदं त्रिविधं प्रोक्तं मवेन्नागस्तुषड्विधाः ।
अष्टधा लोहमुद्दिष्टमेतवै सप्तधातवः ॥९०॥

सुन पन्ध्र किसिमको (कुनै प्रतिमा तीन किसिमको बताइएको छ) , चाँदी पाँच किसिमको, तामा पाँच किसिमको, राङ दुई किसिमको, जस्ता तीन किसिमको, सिसा छ किसिमको र फलाम आठ किसिमको हुन्छ । यी सात धातु हुन् ।

## उपधातु वर्ग

स्वर्णजं स्वर्णमाक्षिकं तारजं तारमाक्षिकम् ।
तुत्यं ताम्रभवं ज्ञेयं कसकं वंगसम्भवम् ॥९१॥
रीतिश्चायसदोद्भूता सिन्दूरो नागसम्भवः ।
शिलाजत्वद्रि सम्भूतमेतं सप्तोपधातवः ॥९२॥

सुनबाट सुनामखी, चाँदीबाट रुपामखी, तामाबाट नीलोतुथो, राङबाट काँस, जस्ताबाट पारो, सिसाबाट सिन्दुर र पहाडबाट शिलाजित गरी सात उपधातु निस्कने गर्दछन् ।



## रस गण

सूतश्चतुर्धा गन्धश्च तालं तु द्विविधं मतम् ।
द्विधाञ्जञ्च काशीसं गैरिकं च रसा इमे ॥९३॥

चार थरी पारो, चार थरी गन्धक, दुई थरी हरिताल, दुई किसिमका गाजल, फलामको विकार खिया ?) र गेरु : यी रस गण हुन् ।

## उपरस गण

पारदाद्दरदो जातष्टङ्कणो गन्धकात्तथा ।
स्फटिकाऽभ्रकतोजानो हरितालां मनःशिला ॥९४॥
अञ्जनाच्छुक्ति शङ्खाद्याः काशीसाच्छंख मूर्वकः ।

**गौरिकान्मृत्तिका जाता तस्मादुपरसा इमे ॥९५॥**

पारोबाट दरद, गन्धकबाट सुहागा, अभ्रखबाट फिटकिरी,, हरितालबाट मैनसिल, गाजलबाट सीपी-शङ्ख, फलामको विकारबाट मूर्वक, गेरुबाट माटो उत्पन्न हुन्छ । त्यसैले यिनलाई उपरस भनिन्छ ।

## रत्न वर्ग

**मुक्ताफलं हीरकञ्चैव वैडूर्यं पद्मरागकम् ।**
**पुष्परागं च गोमेदं नीलङ्गारुत्मतं तथा ॥९६॥**
**प्रवालयुक्तान्येतानि यहारत्नानि वै नव ॥९७॥**

मोती, हिरा, वैदूर्यमणि, पद्मराग, पुष्पराग, गोमेद, नीलमणि, पन्ना र मुगा यी नौ महारत्न हुन् ।



## उपरत्न वर्ग

**उपरत्नानि काचश्च कर्पूरश्मा तथैव च ।**
**मुक्तशुक्तिस्तथा शङ्खइत्यादीनि बहून्यपि ॥९८॥**

काँच, कपूर, पत्थर, मोतिको सिपी, शङ्ख आदि धेरै उपरत्न हुन्छन् ।

**वैक्रान्तो मौक्तिकी शुक्तिः रक्षोमरकतं लक्षुः ।**
**लाजागरुडजन्मा च स्फटिकारत्न जातयः ॥९९॥**

विक्रान्त, मोतिको सिपी, रक्ष, मरकतमणि, लहसुन, लाहा, गारुडमणि र स्फटिक पनि उपरत्न हुन् ।

**एवं बहुगुणाः प्रोक्ता मया मन्दोदरि प्रिये ।**
**पुरा शिवेन सम्प्रोक्ता जगत्कल्याण हेतवे ॥१००॥**

हे प्रिय मन्दोदरी ! यसरी मैले धेरै थरी गणका बारेमा बताएँ जो जगतको भलाइका लागि शिव भगवान्‌ले बताउनु भएको थियो ।

**इति लङ्केश्वर रावण कृतार्कप्रकाशे नवमं शतकं संपूर्णम्**

**रावण लिखित अर्कप्रकाश अन्तर्गत नवौं शतकको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो**

## ॥ अथ दशकं शतकम् ॥

### उत्तम सुनका लक्षण

दाहे रक्तं सितं छेदे निषेके कुङ्कुमप्रभम् ।
तारशुल्बोज्झितं स्निग्धं कोमलं गुरु हेम सत् ॥१॥

पोल्दा रातो, प्वाल पार्दा वा पिट्दा सेतो र सेलाउँदा केसर जस्तो रङ देखिने; मिसावट (चाँदी वा तामा) नभएको, चिल्लो, नरम र गह्रौं सुन सबभन्दा उत्तम सुन हुन्छ ।

### धातु शुद्धिकरण

पत्तली कृत पत्राणि वह्नौ तानि प्रतापयेत् ।
वेष्टनैस्तै समावेष्टय तैले चैव विनिक्षिपेत् ॥२॥

पृथक् पृथक् च दशधा तक्रवर्गे तथैव च ।
धान्यक्वाथे मूत्रवर्गे मद्यवर्गे कट्वद्भवे ॥३॥
अम्लवर्गे पुष्पवर्गे रक्तवर्गे फलोद्भवे ।
क्षीरवर्गे ह्यर्कवर्गे निर्वाप्यास्ते समन्ततः ॥४॥
कृत्रिमा धातुसंमिश्रा ये च नो कार्यसाधकाः ।
जायन्ते दग्धदोषास्तु धातवो गाङ्गवारिवत् ॥५॥

शुद्ध पानुपर्ने धातुलाई पातलो पाता बनाई आगोमा सेक्नू । तल बताइएका कुराले बेरी तेलमा हाल्नू । बेग्लाबेग्लै दश पटक तक्रमा, काँजीमा, मूत्रमा, मदिरामा, पिरा वस्तुमा, अमिलो पदार्थमा, फूलको रसमा, रगतमा, फलको रसमा, दूधमा र अर्कमा डुबाउनू । जुन धातु कृत्रिम अथवा मिसावट गरिएको हुन्छ त्यसले काम गर्दैन । उल्लेखित विधिबाट शुद्ध पारेपछि सबै दोष नाश भई त्यो धातु गङ्गाजल समान शुद्ध हुन्छ ।

**गैरिकं सर्जिकाक्षारो विड्लवणङ्काच सम्भवम् ।**
**नवसादरकः कन्या गुञ्जा स्वर्णादि वेष्टनम् ॥६॥**
**दद्यात्पत्राणि धान्याम्बुन्यथ तानि समुद्धरेत् ।**
**गोमुत्रकेऽथवा तानि दत्वा वारत्रयं तथा ॥७॥**
**पत्रेषु सर्वधातूनां दत्वा तत्तुल्य कज्जलम् ।**
**दत्वाऽनलान्तरे तानि वालुकायन्त्रके पचेत् ॥८॥**
**पृथक् पृथक् सूर्यदण्डैर्वह्निभिर्दीपनादिभिः ।**
**विशोध्यत पुनस्तांश्च यथेच्छत्पुटतः पचेत् ॥९॥**

गेरु, सज्जिखार, विड्नुन, काँच, नौसादर, घिउकुमारी र रातीगेडी : यी सुन आदि धातु बेर्ने कुराहरू हुन् । ती धातुका पातालाई काँजी वा गहुँतमा तीन पटक चोपलेर निकाल्नू । त्यसपछि ती पाता समानको गाजलमा बेर्नू र आगोमा तताई बालूका-यन्त्रमा पकाउनू । यसपछि यी धातुलाई पहिलो शतकमा बताइएको दीपन आदि अग्निले क्रमैले बाह्र घडीसम्म तताउनू । यो धातु शुद्ध पार्ने दोश्रो तरिका हो । यसरी सबै धातु शुद्ध हुन्छन् । यी धातुलाई अन्य ग्रन्थमा बताइए जसरी पुट गरी भस्म गर्नू (भस्म निकाल्नू) ।



## स्वर्णभस्मको गुण

**योगेन मत्स्यपित्तायाः स्वर्णं तत्काल दाहहृत् ।**
**भङ्गायोगाच्च तद् बृष्यं दुग्धयोगाद् बलप्रदम् ॥१०॥**
**नेत्र्य पुनर्नवायोगाद् घृतयोगाद्रसायनम् ।**
**स्मृत्यासिकृद्वचायोगात्कान्तिकृत्कुङ्कुमेन च ॥११॥**
**पयसा राजयक्ष्माणं निर्विष्या च विषं हरेत् ।**
**शुण्ठीलवङ्गमरिचैस्त्रिदोषोन्मादहृत्परम् ॥१२॥**

स्वर्णभस्मलाई कुटकीसँग खाए तुरुन्त डाह नाश हुन्छ, भाङसँग खानाले शरीरमा वीर्य बढ्दछ, दूधसँग खाए बल बढ्दछ, पुनर्नवासँग खाए आँखाका लागि फाइदा गर्दछ, घिउसँग खाए बुढ्यौली नाश गर्दछ, बोझोसँग खाने गरे सम्झनाशक्ति बढ्दछ, केसरसँग

खाए कान्ति बढ्दछ, दूधसँग खाए क्षयरोग नाश हुन्छ, निर्विषीसँग खाए विषको असर नाश हुन्छ तथा सुठो, ल्वाङ र मरिचसँग खाए त्रिदोषजन्य पागलपन नाश गर्दछ ।

## काँचो (अशुद्ध) स्वर्णभस्मबाट हुने हानी

**असम्यङ्मारित स्वर्ण बलं वीर्यं च नाशयेत् ।**
**करोति रोगान्मृत्यं च तद्धन्यद्यत्नतस्ततः ॥१३॥**

राम्ररी भस्म नभएको स्वर्णभस्मले बल र वीर्य नाश गर्दछ , अनेक रोग जन्माउँदछ र अन्तमा मार्दछ । यसैले सुनलाई राम्ररी भस्म गर्नू ।

## उत्तम चाँदीका लक्षण

**गुरु स्निग्धं मृदु श्वेत दाहच्छेद धनक्षयम् ।**
**वर्णाढ्यं चन्द्रवत्स्वच्छं तारन्नवगुणं शुभम् ॥१४॥**



गह्रौं, चिल्लो, नरम, सेतो, तताउँदा र काट्दा हथौडाको चोट सहन सक्ने, उत्तम वर्णको, चन्द्रमाझैं स्वच्छ र शुभ : यी नौ गुण भएको चाँदी उत्तम हुन्छ ।

## रजतभस्मबाट हुने लाभ र हानी

सितया हन्ति दाहाद्यं वातपित्तं फलत्रिकैः ।
त्रिसुगन्धैः प्रमेहादि रजतं शन्त्यसंशयम् ॥१५॥
विड्वीर्ययोर्वन्धनं च वृष्यं संक्षयजित्परम् ।
कृशत्वं रोगमज्ञातं कुरुते तदशोधितम् ॥१६॥

रतजभस्मलाई मिस्रीसँग खाए डाह आदि नाश गर्दछ । त्रिफलासँग खाए वातविकार र कफविकार नाश गर्दछ । त्रिसुगन्ध (दालचिनी, अलैंची र तेजपात) सँग खाए प्रमेह आदि ठिक गर्दछ । यसले मल र वीर्यलाई रोक्दछ, वीर्यवर्धक हुन्छ र विशेषतः क्षयरोगलाई ठिक गर्दछ । अशुद्ध रतजभस्म सेवन गर्नाले कमजोर बनाउनुका साथै अनेकौं रोगलाई जन्माउँदछ ।

## उत्तम तामाका गुण

जपाकुसुमसङ्काशं स्निग्ध मृदु घनक्षयम् ।
लोहनागोज्झितं ताम्रं मारणाय प्रशस्यते ॥१७॥

बाह्रमासे फूलजस्तो रातो, चिल्लो, नरम, घनको चोट सहन सक्ने तथा फलाम र सिसा नमिसाइएको तामा प्रयोग गर्नका लागि योग्य हुन्छ ।



## ताम्रभस्मका लाभ

दुग्धसन्नायखण्डैर्यस्ताम्रं रक्तिद्वयोन्मितम् ।
पिबेत्तस्य विरेकेण प्राप्तास्ते निर्ययुर्गदाः ॥१८॥
कुष्ठकासश्वासपित्तं हरेच्छ्लेष्मोदरामयान् ।
ज्वराम्लपित्तपाण्ड्वर्शः शूलशोथकृमीनपि ॥१९॥

दूध, पनीर र मिस्रीसँग दुई रत्ती ताम्रभस्म खाने गरे धेरै रोगहरू दिसा मार्फत निस्केर नाश हुन्छन् । कुष्ठ, खोकी, दम, पित्तविकार, कफविकार, पेटका रोग, जरो, अम्लपित्त, पाण्डु, अल्काई, शूल, सुजन, र पेटका कीरा पनि ताम्रभस्मले नाश गर्दछ ।

## काँचो (अशुद्ध) ताम्रभस्मबाट हुने हानी

एको दोषो विषे ताम्रे त्वसम्यङ्मारिते पुनः ।
दाहः स्वेदोऽरुचिमूर्छाक्लेदो रेको वमिर्भ्रमः ॥२०॥

विषमा एउटै दोष हुन्छ तर राम्ररी भस्म नगरिएको ताम्रभस्ममा धेरै दोष हुन्छन् । विषले एक पटक मार्दछ यसले पटकपटक मार्दछ । यस्तो भस्मले डाह, पसिना निकाल्ने रोग, अरुची, बेहोसी, दु:ख, छेरपटी, बान्ता र भ्रम गराउँदछ ।

## उत्तम राङका गुण

**शीघ्रद्रावी सशब्दं वा स्फुटनं चन्द्रसन्निभम् ।**
**तथैव मलहीनं यन्दालितं वङ्गमुत्तमम् ॥२१॥**

जुन राङ चाँडै पग्लिने, आवाज निकाल्दै फुट्ने, पग्लेपछि चन्द्रमा जस्तै चमकिलो देखिने, मिसावट नभएको त्यो उत्तम राङ हुन्छ ।

## राङभस्मका गुण



**सर्व मेहान्सितादुग्धैः सतालं यच्च मारितम् ।**
**हन्त्यष्टादश कुष्ठानि रजनीक्वाथसंयुतम् ॥२२॥**

हरितालसँगै भस्म गरिएको राङ मिस्री र दूधसँग खानाले सबै किसिमका प्रमेह रोग नाश हुन्छ । वेसारको काँढापानीसँग राङभस्म खाए अठार प्रकारका कुष्ठरोग निको हुन्छ ।

## अशुद्ध राङभस्म सेवनका बेफाइदा

**अशुद्ध वङ्ग कुरुते शूलगुल्मं त्वचाङ्घ्रिजम् ।**
**वातशोथं प्रमेहञ्च पाण्डुरोगं भगन्दरम् ॥२३॥**

अशुद्ध वा राम्ररी भस्म नगरिएको राङभस्म खानाले शूल, गुल्म, छाला र गोडामा वातजन्य सुजन, प्रमेह, पाण्डु र भगन्दर रोग गराउँदछ ।

## उत्तम जस्ताका गुण

यसदन्दर्पणाभासं घनच्छायं सितप्रभम् ।
निकषे यद्रजतवद्दाहेच्छेदे च तालवत् ॥२४॥

ऐना जस्तो निर्मल, खँदिलो, छाया सहितको, सेतो कसौटीमा चाँदीसमान देखिने तथा गलाउँदा वा काट्दा हरिताल समान देखिने जस्ता उत्तम हुन्छ ।

## जस्ताभस्मका गुण

प्राचीन गोघृतैर्नेत्र्यं ताम्बूलेन प्रमेहजित् ।
अग्निमन्थेनाग्निकारि त्रिसुगन्धैस्त्रिदोषजित् ॥२५॥

गाईको पुरानो घिउसँग जस्ताभस्म खानाले आँखालाई फाइदा गर्दछ । पानसँग खानाले प्रमेह नाश गर्दछ । अरणीसँग खानाले जठराग्निलाई बढाउँदछ । त्रिसुगन्ध (दालचिनी, अलैंची र तेजपात) सँग खानाले त्रिदोष नाश गर्दछ ।



## अशुद्ध जस्ताभस्मका अवगुण

अशुद्धं यसदं कुर्याद्रक्तपित्तञ्च शीतलम् ।
मन्दतां जठराग्नेश्च धातुनाशं ज्वरादिकम् ॥२६॥

अशुद्ध जस्ताभस्मले रक्तपित्त गर्दछ, शीतल हुन्छ, जठराग्निलाई कमजोर पार्दछ, धातुनाश गर्दछ र जरो आदि उत्पन्न गर्दछ ।

## उत्तम सिसाका लक्षण

**विकीर्णं दृश्यते श्वेतं गलितं गगनोपमम् ।**
**दर्शने नागवत्तच्च सन्नागं शमिवत्कषे ॥२७॥**

काट्दा सेतो, गाल्दा आकाश समान नीलो, हेर्दा जस्ताजस्तो र कसौटीमा घोट्दा शमीको काठ जस्तो देखिने सिसा उत्तम हुन्छ ।

## सीसाभस्मका गुण

**नागस्तु नागशततुल्यबलं ददाति व्याधिं विना शयति जीवनमातनोति ।**
**वह्निं प्रदीपयति कामबलं करोति मृत्युं च नाशयति सन्ततसवितः सः ॥२८॥**

सिसाभस्म नियमित सधैं सेवन गर्नाले सय वटा हात्तीको जस्तो बल प्राप्त हुन्छ, रोगहरू नाश हुन्छन्, आयु बढ्दछ, जठराग्निलाई बाल्दछ, रतिइच्छा बढाउँदछ र मृत्युलाई भगाउँदछ ।



## अशुद्ध सिसाभस्मका अवगुण

**मन्दाग्निमामशूलं च कुष्ठमेहादि रुग्व्रजम् ।**
**अशुद्धनागः कुरुते प्राणानपि निहन्ति च ॥२९॥**

अशुद्ध सिसाभस्म खानाले पाचकाग्नि कमजोर हुन्छ, आमजन्य शूल हुन्छ, कुष्ठ एवं प्रमेह आदि रोग उत्पन्न हुन्छ र अन्तमा ज्यानै समेत जान्छ ।

## फलाम शुद्ध पार्ने विधि

**सर्वलोहानि तप्तानि कदलीमूल वारिणा ।**
**सप्तधाभि निषिक्तानि शुद्धिमायान्त्यथोत्तमम् ॥३०॥**

सबै किसिमका फलाम तातो न तातो बनाएर केराको जराको रसमा सात पटक डुबाउनू, शुद्ध हुन्छ, यो अती सरल उपाय हो ।

## लोहभस्म निकाल्ने विधि

**शुद्धलोहभवश्चूर्णं पातालगरुडीरसैः ।**
**मर्दयित्वा पुटेद्वह्नौ दद्यादेवं पुटत्रयम् ॥३१॥**
**पुटत्रय कुमार्याश्च कुठारच्छिन्निकारसैः ।**
**पुटषट्कं ततो दद्यादेवं तीक्ष्णमृतिर्भवेत् ॥३२॥**

**क्षिपेद् द्वादशमांशेन दरदं तीक्ष्णचूर्णतः ।**
**मर्दयेत्कन्यकाद्रावैर्यामयुग्मं ततः पुटेत् ॥**
**एवं सप्तपुटैर्मृत्युं लोहचुर्णमवाप्नुयात् ॥३३॥**

शुद्ध फलामको धुलोलाई भोटे खयरको रसमा मोलेर बिर्कोले छोपी तीन पटक आगोमा तताउनू । फेरी घिउकुमारीको रसमा मोलेर छ पटक यसैगरी तताउनू । यसपछि कुठारच्छिन्निका (?) को रसमा घोटेर छ पटक तताउनू । यो उत्तम लोहभस्म हुन्छ । लोहभस्म बनाउने अर्को तरिका-जति फलाम हुन्छ त्यसको बाह्रौं भाग हिङ्ग मिसाई घिउकुमारीको रसमा दुई प्रहरसम्म खार्नू । फेरी सातपटक पुट विधिले तताउनू लोहाभस्म तयार हुन्छ ।

## लोहभस्म खाने तरिका

शुण्ठीवाते सितापित्त कफे कृष्णात्रिजातकम् ।
सन्धिरोगे बलापाण्डौ प्रोक्तं लोहानुपानकम् ॥३४॥

वातरोगमा सुठोसँग, पित्तरोगमा मिस्रीसँग, कफरोगमा पिप्लासँग, जोर्नीका रोगमा त्रिजातक (दालचिनी, अलैंची र तेजपात) सँग र पाण्डुरोगमा बलुसँग लोहभस्म खानू पर्दछ ।

## अशुद्ध लोहभस्मका अवगुण

त्वक्षु कण्ठे च हृद्रोग शूल हृल्लासमश्मरीम् ।
नानारोगान् प्रकुरुते चूर्ण लोहमशोधितम् ॥३५॥



अशुद्ध लोहभस्म खानाले छालाका रोग, घाँटीका रोग, मुटुका रोग, शूल, जीउ दुख्ने र पत्थरी हुने गर्दछ ।

## उपधातु शुद्धीकरण

पादांशं सैन्धव दत्वा उपधातून्विमर्दयेत् ।
दशधा चाम्लवर्गेण कटाहे लोहसम्भवे ॥३६॥
घर्षयेल्लोहदण्डेन प्रत्येकं च मुहूर्तकम् ।
यथा सिन्दूरवर्णत्वं धातूनां सम्प्रजायते ॥३७॥
अथवा दोषशान्त्यर्थं त्रिकट्वर्कबलार्कके ।
विभावयेद् द्वादशधा ततस्तान्पुटतः पचेत् ॥३८॥
कपोतोत्वोर्विष्ठया वा लिम्वा तांस्तु विनिक्षिपेत् ।
अजामूत्रेऽथ तप्तांस्तान्क्वाथे कौलत्थजे तथा ॥३९॥

मधुनाऽभ्यज्य तैलेन मर्दसयत्वा पृथक् पृथक् ।
दशांशं टङ्कणं दत्वा पचेल्लघुपुटे ततः ॥४०॥

जति धातु छ त्यसको एक चौथाई सिधेनुन मिसाई प्रत्येकलाई फलामको कराहीमा हालेर दश पटकसम्म अमिलो मिसाउँदै फलामकै पन्यूले एक एक घडीसम्म घोट्नू । अनि चुलोमा बसाली धातुको रङ सिन्दूर जस्तो नहुँदासम्म घोटी रहनू । तब यसलाई उत्तम भस्म ठानी चुलोबाट निकाल्नू । अथवा दोष हटाउन त्रिकटु र बलुको अर्कमा बाह्र बाह्र पटक भिजाउनू र पुटपाकका विधिले भस्म बनाउनू । अथवा धातुलाई परेबा र बिरालोको विष्ठामा लिपेर तातो पारी बाख्रीको मूत्र र गहतको काँढापानीमा ढुबाउनू । अनि मह र तेलमा मोली दशौं भाग सुहागा मिसाएर लघुपुटमा भस्म बनाउनू ।

## उपधातुको प्रयोग

दत्वा वह्निं दृढतरमुपधातून्सुधीः पचेत् ।

अभावे मुख्यधातूनां प्रयोज्या उपधातवः ॥४१॥

बुद्धिमान् वैद्यले धातुको अभावमा अत्यन्त कडा आगोमा यी उपधातुलाई पकाई भस्म निकाल्नु पर्दछ ।

## सिन्दूरको ओखतीमा प्रयोग गर्ने विधि

न कुर्वन्ति गुणांस्तेऽपि प्रायः कुत्सित शोधिताः ।
कुर्वन्ति दोषां भुक्तास्ते सिन्दूरं यदि भक्षयेद् ॥
अशुद्धं वाऽथ शुद्धं वा विना मन्त्र गुरूक्तिभिः ॥४२॥
विना तेन भवेच्छीघ्रं स्वरभङ्गोमृतिस्तथा ।
राक्षसी मस्तके लग्नं दृष्ट्वा शप्तो हनूमता ॥४३॥
आदिवाराह कल्पे तु कृता तस्य च निष्कृतिः ।
तेनैव वानरेन्द्रेण श्रृणु मन्त्रं यथोदितम् ॥४४॥

तार सिन्दूर पायेति सिस्थाने सम्प्रयोजयेत् ।
सिन्दूरं हलको देव चालयेति पदं वदेत् ॥४५॥
री तु प्रोक्ता खलभली जी तथा कलवलीति च ।
मन्त्रः शावरमन्त्राणां शिखामणिरयं स्मृतः ॥४६॥
गुरुतो वेश्वरोपास्याद्गृहीत्वा मन्त्रमुत्तमम् ।
तं जपित्वा सहस्रं तु तद्दशांशं तु होमयेत् ॥४७॥
सिन्दूरं तैलवटकैः पूजयेत्करवीरकैः ।
दूर्वाभिर्मार्जनं कार्यं पायसैर्ब्रह्मभोजनम् ॥४८॥
ततः सिद्धो भवेन्मन्त्रं शम्बरासुरभाषितः ।
अनेना मन्त्र्य सिन्दूरं षण्मासं यं तु भक्षयेत् ॥४९॥
विमुक्तः क्रोधलोभाभ्यां तृष्णापाशात्तथैव च ।
युक्तस्स नियमैश्शान्त्यादिभिश्चापि जितेन्द्रियः ॥५०॥
ब्रह्मचर्यपरस्यास्य बिन्दुरूर्ध्वा प्रजायते ।
महारात्रौ तु यो नग्नो जपेन्मन्त्रमनुत्तमम् ॥५१॥
क्रियते येन सुधिया जपता मन्त्रमुत्तमम् ।
वानराणां च सप्तानां प्रसरं तिलकाह्वयम् ॥५२॥
मोहयेत्सकलं विश्वं रणे जयति निश्चितम् ।
ललाटे तिलकं यावत्तावदीशः स एव हि ॥५३॥

जुन् धातु उत्तम तरिकाले शुद्ध गरिएको छैन ती प्रायः गुणकारी हुँदैनन् । यस्ता धातुले दोष उत्पन्न गर्दछन् । जसले शुद्ध वा अशुद्ध सिन्दूर गुरूले बताएका मन्त्र नपढी खान्छ उसलाई तुरुन्त स्वर बस्ने रोग हुन्छ, मृत्यु समेत हुन सक्दछ । एक ताका राक्षसनी निधारमा सिन्दूर लगाएको देखेर हनुमानले श्राप दिएका दिए । तर उनै हनुमानले आदि वाराह कल्पमा यसबाट पार हुने उपाय पनि बताएका थिए । जुन् मन्त्र उनले बताएका थिए त्यो मन्त्र सुन । “ॐ तार सिन्दूरया खलभलित्वकल चलिन् कालवली सिन्दूर हलकादेव चालय” । यो शावरमन्त्रको शिखामणि मन्त्र हो । गुरुबाट वा शिवका कुनै उपासकबाट यो उत्तम मन्त्र दीक्षा लिई एक हजार पटक जप गर्नू । यसपछि एक सय पटक यो मन्त्रले होम गर्नू । सिन्दूरलाई तेलमा पकाइएका पातला रोटी र करवीरको फूलले पूजा गर्नू ।

दूबोले पुछ्नू । ब्राह्मणहरूलाई खिर खुवाउनू । त्यसपछि यो शम्बरासुरले बताएको मन्त्र सिद्ध हुन्छ । यसपछि यो मन्त्रले मन्त्री छ महिनासम्म सिन्दूर जसले खान्छ, त्यो मानिस काम, क्रोध र लोभको बन्धनबाट मुक्त भई इन्द्रिय नियन्त्रक वा विजितेन्द्रिय हुन पुग्दछ । ब्रह्मचर्यमा रहेको मानिसले यो सिन्दूर खाए उसको वीर्य माथितिर सर्दछ अर्थात वीर्य पतन हुँदैन । महारात्रीमा नाङ्गै भई जसले यो उत्तम मन्त्र जप गर्दछ, अनि यो मन्त्र जप्दै सात वटा बाँदरका निधारमा यो सिन्दूरको टिका लगाउँदछ, अनि आफू टिका लगाउँदछ, उसले विश्वलाई नै मोहित पार्दछ, युद्धमा विजय प्राप्त गर्दछ । उसका निधारका जबसम्म यस्तो सिन्दूरको टिका हुन्छ तबसम्म उ संसारकै मालिक भएर बस्दछ ।

## पारो

उन्मत्त विजयार्के वा काञ्जिके सूतधावने ।
हालाहलेन तुल्येन दरदोत्थं विमर्दयेत् ॥५४॥
नष्टपिष्टं रसं कृत्वा भावयेत् पद्मिनीदलः ।
गोधूमराशौ संस्थाप्य मासमेकं ततः पुनः ॥५५॥
निष्कास्य क्षालयित्वा तु अहिफेनेन मर्दयेत् ।
कुर्याच्च पूर्ववत् पश्चान्नवसारेण मर्दयेत् ॥५६॥
कमलस्य रसेनापि कृष्णोन्मत्तरसेन च ।
हिंगुना गन्धपाषाणासत्वेनाथ विमृद्य च ॥५७॥
षण्मासां तु ततः स्थाप्यस्सूरणस्योदरे रसः ।
एवं वर्षेण शुद्धः स्याद्रसराट्चेति निश्चितम् ॥५८॥
दृश्यते चुर्णसंकाशो जीवनाख्या रसोत्तमः ।
एक गुञ्जो द्वि गुञ्जा वा दृष्ट्वा दोष बलाबलम् ॥५९॥
दृष्ट्वौषध गुणं चापि देयश्चासो रसोत्तमः ।
सेवनात् स्वस्थतानस्यात्तं ब्रह्मापि न जीवयेत् ॥६०॥

धतुरो र भाङको अर्कमा वा काँजीमा पारोलाई हलाहलसँग बराबर मात्रा मिसाएर खूब घोट्नू । बाक्लो भएपछि कमलको पातको अर्कमा भिजाएर गहुँको थुप्रोमा एक महिनासम्म

घुसारेर राख्नू । अनि निकाली शुद्ध पानीले धुनू । फेरी अफिमसँग मिसाएर धेरैबेर घोट्नू । पुनः एक महिनासम्म गहुँको थुप्रोमा घुसारेर राख्नू । फेरी निकालेर पहिले नवसार (?) र त्यसपछि कमलको अर्कमा घोट्नू । अनि कालो धतुरोको रस, हिङ र गन्धपाषाणको रसमा मिसाएर बेग्लाबेग्लै घोट्नू । त्यसपछि छ महिनासम्म ओलभित्र राख्नू । यसो गर्नाले रसराज पारो एक वर्षमा शुद्ध हुन्छ । जीवनदायी यो श्रेष्ठ रस यसपछि धुलो जस्तो देखिन्छ । यो धुलो एक वा दुई रत्ती खुवाउनू ।  उत्तम योगमा दिइएको यो पारोले अत्यधिक गुण प्रकट गर्दछ । यदि यो खुवाउँदा रोगीलाई सञ्चो भएन भने उसलाई ब्रह्माले पनि बचाउन सक्दैनन् भनी थाहा पाउनू ।

## दरद (हिङ्गुल) शुद्धीकरण

**चणकाभानि खण्डानि दरदस्य तु कारयेत् ।**
**ताम्रजे वायसे पात्रे स्थापयित्वा धमेद् दृढम् ॥६१॥**
**जातायामुष्णतायाञ्च तदातस्मिन्विनिक्षिपेत् ।**

**तत्तुल्यं तु द्रवद्रव्यमेषा स्याद्वह्निभावना ॥६२॥**
**मेषीक्षीरेण दशधा दशधा क्षीरिजार्ककैः ।**
**दीप्तिवर्गेण दशधा विरेक्यर्केण पञ्चधा ॥६३॥**
**पञ्चधा दुग्धवर्गेण दशाधाम्लस्य भावना ।**
**पञ्चशद्भावितोम्लेच्छो नानारोग विनाशनः ॥६४॥**
**नेत्र्यः क्षुन्मदकृच्चैव दरदः कथ्यते बुधैः ।**

हिङ्गुललाई चनाका आकारमा टुक्रा पारी तामा वा फलामको भाँडामा भरेर बेस्सरी तताउनू । तातो भएपछि त्यसमा पानी जस्तो पातलो कुरा निस्कन्छ यसलाई “बह्नि भावना” भनिन्छ । द्रव द्रव्य दरदसँग बराबर हुनु पर्दछ । यो मिश्रणलाई भेडीको दूधमा दश पटक, दूधिलो रुखको रसमा दश पटक,  दीपनगणको रसमा दश पटक, रेचनगणको रसमा पाँच पटक, दुग्धवर्गमा पाँच पटक र अमिलोवर्गको रसमा दश पटक गरी जम्मा पचास पटक भिजाउनू । यसरी तयार पारिएको दरदले सबै खालका रोग निको पार्दछ । यसले आँखाका लागि फाइदा गर्दछ, भोक बढाउँदछ र मद बढाउँदछ भनी बुद्धिमानहरूले बताएका छन् ।

## गन्धक शोधन

गन्धकं भूमिलवणं सममेकत्र चूणयेत्॥६५॥
अनातपेमतूरस्य तोयः पात्रे विनिक्षिपेत्।
निष्कास्य तज्जलं प्रातः सममम्लेन मर्दयेत्॥६६॥
पुनर्दत्वा जलं क्षिप्त्वा शतवारं समाचरेत्।
जायते गन्धको दिव्यः श्वेतोगन्ध विवर्जितः॥६७॥
शतधा भावयेत्तं तु कदलकिाण्डजैर्जलैः।
दीप्तो न जायते वह्निस्तत्संयोगात्कदाचन॥६८॥
सुगन्धार्केण भाव्योऽसौ नखबारं प्रयत्नतः।
को वा तस्य गुणं वक्तुं भुवि शक्तो हि मानवः॥६९॥
हन्ति कुष्ठदिका रोगान् पामादीनां तु का कथा।

गन्धक र खारा नुन बराबर मिसाई पिँध्नू। यसपछि मसुरोको पानीमा हाली शीतलमा राख्नू। बिहान पानी निथारेर अमिलो रस हाली मोल्नू। फेरी मसुरोको रसमा हाली छायामा राख्नू। बिहान पानी निथारेर अमिलोसँग घोट्नू। यस्तो सय पटक गर्नू। यसो गर्नाले गन्धक दिव्य, सेतो र नगनाउने हुन्छ। त्यसपछि यो गन्धकलाई केराको जराको पानीमा सय पटक भिजाउनू। यसपछि यो हाल्दा आगो पनि नबल्ने हुन्छ। अनि यसलाई पुनः फ्याक्सेकन्दको अर्कमा बीस पटक भिजाउनू। अब यो गन्धकको गुणको वर्णन पृथ्वीको कुन मानिसले गर्न सक्ला र ? यसले कुष्ठ आदि रोगलाई समेत नाश गर्दछ भने लुतो आदिका के कुरा गर्नु ?

## अभ्रख

यदभ्रकं गजपुटे यत्नतश्च पुटीकृतम्॥७०॥
सहस्राभ्रन्तदाख्यातं वयसः स्थापनं परम्।
त्रिदोषं हरतं कुष्ठमेहप्लीहब्रणकृमीन्॥७१॥

जुन अभ्रख दुई हात लामो, दुई हात चौडा र दुई हात गहिरो इँटले बनाएको खाल्टोमा गुइँठा बालेर एक हजार पटक पुटपाक (गजपुट) गरिन्छ त्यसलाई सहस्राभ्रख भनिन्छ । यसले आयु बढाउँदछ, त्रिदोष नाश गर्दछ, कुष्ठ, प्रमेह, फियोका रोग र घाउका किरा नाश गर्दछ ।

## हरिताल शोधन

हरितालं द्विधा प्रोक्तं पत्राख्यं पिण्ड संज्ञकम् ।
तदभावे तु पत्राख्यं तस्य पत्राणि कारयेत् ॥७२॥
यामं यामं तु तन्मर्द्य द्रव्येषु नवसु क्रमात् ।
तिलतैले बलाक्वाथे चूर्णतोये कुलत्थजे ॥७३॥
काञ्जिके कदलीतोये दुग्धे कूष्माण्डज द्रवे ।
अजादुग्धे च तत्तालं संशुद्धं दोषवार्जितम् ॥७४॥

अशीतिकर्षञ्चिञ्चाया ग्राह्यं पत्रं सुशोधितम् ।
त्रिशत्कर्षं हण्डिकायां दृढायां तं निवेशयेत् ॥७५॥
आस्तीर्य तालपत्राणि कर्षद्वयमितानि च ।
त्रिंशत्कर्षं पुनः पत्र स्थापयेत्तालकोपरि ॥७६॥
सम्पूज्य भैरवादींश्च हण्डीञ्चुल्लयान्निवेशयेत् ।
यामं यामं क्रमादग्नि संकुर्यात्पञ्चयामकम् ॥७७॥
पश्येत्तदैकचित्तस्तु कुत्र धूमोऽस्य गच्छति ।
गच्छन्तं धूममालोक्य भस्मना चावरोधयेत् ॥७८॥
एवं तु पञ्चभिर्यामैस्तत्तालं तु मृतं भवेत् ।
तत्रोपरिस्थं युक्त्या च गृह्णीयाद्रविसन्निभम् ॥७९॥
तस्मिन् भाण्डे तु चुर्णानि पत्राण्यन्यानि निक्षिपेत् ।
पुटं दद्यात्पूर्ववच्च एवञ्चार्क दिनावधि ॥८०॥
तत्तालं जायते दिव्यं सर्वं रोग निकृन्तनम् ।

रक्तिकायाः सप्त मात्रा तालकस्य सुसंमितिः ॥८१॥

हरिताल पत्राख्य र पिण्ड गरी दुई किसिमको हुन्छ । पिण्ड नभेटिए पत्राख्य हरिताल लेराई त्यसका पत्र अलग अलग गर्नू । यसलाई तिलको तेल, बलुको काँढापानी, चूनपानी, गहतको काँढापानी, काँजी, कराको जराको पानी, दूध, कुभिण्डाको पानी, र बाख्रीको दूधमा क्रमैले एक एक प्रहरसम्म भिजाउनू । यसो गर्नाले हरिताल शुद्ध र दोषरहित हुन्छ । यसपछि अस्सी कर्ष अमिलीको पात लेराई चालीस कर्ष हाँडीको तल राख्नू । त्यसमाथि दुई कर्ष शूद्ध पारिएको हरिताल राख्नू । अनि त्यसमाथि चालीस कर्ष अमिलीको पात राख्नू । यसपछि भैरव आदिको पूजा गरी हाँडीलाई अगेनामा बसाल्नू । अनि क्रमैले एक एक प्रहरसम्म पाँच किसिमका आगो बाल्नू । यसपछि एकाग्र भई हाँडीतिर हेरी रहनू । जताबाट धुवाँ निस्कन्छ त्यता को मुख खरानीले बन्द गर्नू । यसरी पाँच प्रहरमा हरिताल भस्म हुन्छ । यसपछि पात माथि राखिएको सूर्याकार हरितालको चक्कीलाई होशियारपूर्वक निकाल्नू र नयाँ पात ओछ्याएर हरितालल‍ाई त्यसमाथि राख्नू । अनि पहिले जस्तै पुट दिनू । यो क्रम बाह्र दिनसम्म गर्नू । यसपछि यो हरिताल दिव्य र सबै रोग नाश गर्ने बन्दछ । यस्तो हरिताल एक रत्ति खानु पर्दछ ।



## हरिताल सेवन विधि

प्रियेऽधुनैव वच्येहं तालकम्यानुपानकम् ।
हरिताले तु संसिद्धे हरिणा किं प्रयोजनम् ॥८२॥
सर्वरक्तविकारेषु देयमाम्रहरिद्रया ।
अल्पक्ष्वेडाजाजिकाभ्यामपस्मार विनाशनम् ॥८३॥
समुद्रफलयोगेन जलोदर विनाशनम् ।
देवदार्वीरसैर्युक्तं भगन्दरहरं स्मृतम् ॥८४॥

हे प्रिये ! अब म हरिताल खाने विधि बताउँदछु । हरिताल सिद्ध भएपछि हरि भगवानको के काम छ र ? यसलाई सबै खालका रक्तविकारमा आलो हलेदोसँग खानू । अलिकति

कमलनाल र जीरासँग खाए अपस्मार नाश हुन्छ । समुद्रफलसँग खाए जलोदर रोग नाश हुन्छ । देवदारुको अर्कसँग खाए भगन्दर रोग ठिक हुन्छ ।

## मनशिला शोधन

**पचेत्त्र्यहमजामूत्रे दोलायन्त्रे मनःशिलाम् ।**
**भावयेत्सप्तधा पित्तैरजायाः सा विशुद्ध्यति ॥८५॥**
**घृतयुक्ता वृणं हन्ति मलञ्च त्रिफलायुता ।**
**वंशानुपानाद्धरते कफञ्चापि मनःशिला ॥८६॥**

मनशिलालाई एउटा कपडामा बाँधी हाँडीमा बाख्राको मूतमा तीन दिनसम्म पकाउनू । यसरी पकाउँदा त्यो पोको डुबिरहने गरी बाँधिनु पर्दछ । यसपछि यसलाई बाख्रीको पित्तमा सात पटक भिजाउनू तब शुद्ध हुन्छ । यो मनशिला घिउसँग खानाले घाउ निको हुन्छ । त्रिफलासँग खानाले दिसा ठिक गर्दछ । बाँसको अर्कसँग खानाले कफ नाश हुन्छ ।



## खपरिया (एक खनिज विशेष)

**दोलायन्त्रेण सप्ताह मूत्रवर्गे रसं पचेत् ।**
**तच्छुद्धं नेत्ररोगाणां नाशकं त्रिफलायुतम् ॥८७॥**

मूत्रमा सात दिनसम्म दोलायन्त्रमा पकाउनू (श्लोक ८६ मा बताए अनुसार) । शुद्ध हुन्छ । शुद्ध खपरियालाई त्रिफलासँग खानाले सबै खालका आँखाका रोग नाश हुन्छन् ।

## उपरस शोधन

**त्रिक्षारैर्लवणैर्भाव्या अम्लवर्गैस्ततः पचेत् ।**
**दिनं तूपरसाः शुद्धा जायन्ते दोषवर्जिताः ॥८८॥**

रसाभावे प्रदातव्या उक्ता उपरसा इमे ।
सेविता बहुकालं ते सर्वतः कुरुते गुणम् ॥८९॥

पहिले तीन प्रकारका खारलाई पाँचै प्रकारका नुनमा भिजाई अनि अमिलो रसमा एक दिन दोलायन्त्रमा पकाउनाले सबै उपरस शुद्ध हुन्छन् । रस नपाउँदा उपरसको प्रयोग गर्नुपर्दछ । लामो समय खानाले यी पनि गुणशाली हुन्छन् ।

## हिरा शोधन

हिंगुसैन्धवसंयुक्ते क्षिपेन्क्वाथे कुलत्थजे ।
तप्ततप्तं पुनर्वज्रं भवेच्छुद्धं त्रिसप्तधा ॥९०॥
श्रेष्ठं वज्रं ततो हीन गुणमन्यच्च कीर्तितम् ।
सेवितं सर्वरोगघ्नं बलपुष्टिविवर्धनम् ॥९१॥



हिरालाई तताई तताई हिङ र सिधेनुन मिसाइएको गहतको काँढापानीमा एक्काईस पटक डुबाउनाले यो शुद्ध हुन्छ । यसरी नै अरु रत्नको पनि शुद्धी जान्नू । हीरा सबै रत्नमा उत्तम हुन्छ, अरु सबै रत्नका गुण कम हुन्छन् । हीराले सबै रोग नाश गर्दछ र बल पुष्टि बढाउँदछ ।

## विष शोधन

गोमूत्रे त्रिदिनं स्थाप्यं विषं तेन विशुद्ध्यति ।
रक्तसर्षपतैलाक्ते तथा धार्यञ्चवाससि ॥९२॥
ये गुणा गरले प्रोक्तास्ते स्युर्हीना विशोधनात् ।
तस्माद्विषं प्रयोगेषु शोधयित्वा प्रयोजयेत् ॥९३॥

विषलाई तीन दिनसम्म गहुँतमा भिजाई त्यसपछि रातो सर्सिउँको तेलले भिजेको कपडामा पोको पारी तीन दिनसम्म राख्नाले शुद्ध हुन्छ । विषका जे गुण बताइएका छन्, ती गुण यसरी शोधन गरिएपछि नाश हुन्छन् । यसैले विषलाई शुद्ध गरेर मात्र प्रयोग गर्नू ।

## उपविष शोधन

पञ्चगव्येषु शुद्धानि देयान्युपविषाणि च ।
विषाभावे प्रयोज्यानि विषकार्यकराणि च ॥९४॥

सबै उपविषलाई पञ्चगव्यमा शुद्ध गरी विषको स्थानमा प्रयोग गर्नू, यो विष सरह नै प्रभावकारी हुन्छ ।

## अजयपालको शोधन



न विषं विषमित्याहुर्जेपालो विषमुच्यते ।
शोधितोऽयं विरेकेषु चमत्कृतिकरः परः ॥९५॥
पञ्चगव्येषु संशोध्य दूरीकुर्याच्च वल्कलम् ।
ततोऽम्लवर्गे दशधा क्षारवर्गे त्रिधा पुनः ॥९६॥
कन्यादैवेचाम्ल भस्म जले चैवं विशोधयेत् ।
एवं शुद्धस्तु जेपालो वान्तिदाहविवर्जितः ॥९७॥

विषलाई विष नभन्दा नि हुन्छ किन कि अशुद्ध अजयपाल नै विष हुन्छ । अनि शोधन गरिएको यही अजयपालले दिसा खुलाउनु पर्दा चमत्कार नै देखाउने गर्दछ । अजयपाललाई पञ्चगव्यमा शुद्ध पारी यसका बोक्रा निकाल्नू । अनि यसलाई अमिलोमा दश पटक, क्षारवर्गमा तीन पटक तथा घिउकुमारी र अमिलीको खरानीको रसमा एक एक पटक भिजाउनू । यसरी शुद्ध पारिएको अजयपालमा बान्ता र डाह गर्ने गुण हुँदैन ।

# उपसंहार

मन्दोदरि तवाख्यातं यन्मया शिवतः श्रुतम् ।
एतज्ज्ञात्वा वल्लभया त्वया यत्नो विधीयताम् ॥९८॥
एवमुक्त्वा तु भैषज्य रहस्यं स दशाननः ।
सायं सन्ध्याविधिं कर्तुमुत्थितो मन्दिरं ययौ ॥९९॥
सुयोग्यं निजगेहस्य सुखकार्यं कुरु प्रिये ।
अहं सन्ध्याविधानार्थं त्वथयामि नदीतटम् ॥१००॥

रावण भन्दछन्-"हे मन्दोदरि ! जेजति मैले शिवका मुखबाट सुनेको थिएँ त्यो सबै तिम्रा सामु वर्णन गरें । हे प्रिया ! तिमी यी सबै कुरा बुझी व्यवहारमा उतार" । यसरी औषधीका रहस्यका बारेमा बताएपछि "हे प्रिया ! आफ्नो योग्य घरका काम गर । म सन्ध्यावन्धनका लागि नदीका किनारतिर जान्छु" भन्दै रावण आफ्ना महलतिर लागे ।



इति लङ्केश्वर रावण कृतार्कप्रकाशे दशमं शतकं संपूर्णम्

✷

रावण लिखित अर्कप्रकाश अन्तर्गत दशौं शतकको मोहन प्रसाद सापकोटाद्वारा
गरिएको नेपाली भावानुवाद पूर्ण भयो

✷

इति रावण कृतार्कप्रकाशं संपूर्णम्

✷

बागमती अञ्चल, काभ्रेपलाञ्चोक जिल्ला, अनैकोट गा.वि.स., वडा नं.३ चारघर टोलमा जन्म भई हाल सोही अञ्चल, काठमाडौं जिल्ला, गोकर्णेश्व न.पा., वडा नं.७, दक्षिणढोकामा बसोवास गर्ने, केदारनाथका नाती तथा माधवप्रसादका छोरा म मोहन प्रसाद सापकोटाद्वारा गरिएको रावण लिखित अर्कप्रकाशको
नेपाली भावानुवाद पूर्ण भयो

✷

## सबैको सधैं कल्याण होस् !

## केही शब्दका अर्थ

अतिसार :- खाएका कुरा नपची पातलो दुर्गन्धी दिसा भइरहने रोग; आउँको रोग । यसका कफजन्य, वातजन्य, पित्तजन्य, आमजन्य, सन्निपातजन्य र शोकजन्य गरी छ किसिम हुन्छ । यो रोगमा सामान्यतः आमाशय सुन्निएर खाएको कुरा नपची पातलो दिसा र डकार आइरहन्छ, अमन हुन्छ र शरीर लखतरान भएर गल्दछ ।

अधा :- आधा टाउको दुख्ने रोग, अर्धभेदक, अर्धावभेदक ।

अनुपान :- खाना वा ओखती खाएपछि त्यसलाई पचाउन लगत्तै पिइने पेय पदार्थ ।

अनुलोमन :- कब्जियत भएर पेटभित्र रहेको मल वा रोकिएको मूत्रलाई खुकुलो बनाई आन्द्राभुँडी सफा गर्दै तलतिर धकेलेर दिसापिसाब मार्फत बाहिर निकाल्ने औषधी । जस्तै : हर्रो ।

अपची :- घाँटीमा माला लगाए जसरी खटिरा आई फोका उठेर पीप बन्ने रोग, गण्डमाला रोगको एक प्रकार ।

अपतन्त्र :- वायुविकारबाट हुने रोग । यो रोग हुँदा शरीर टेढो हुने, टाउको र कञ्चट दुख्ने, गला बज्ने, आँखा तन्कने र सास फेर्न कठिनाई हुने गर्दछ ।

अपतानक :- आइमाईमा गर्भपात हुँदा र पुरुषमा ठूलो चोटपटक लाग्दा वा धेरै रगत जाँदा हुने रोग । यसमा पटकपटक बेहोस हुने, कफले गर्दा घाँटीबाट घ्यारघ्यार आवाज आउने गर्दछ ।

अभिष्यन्द :- पोल्ने, रातो हुने तथा आँशु झरिरहने र चिप्रा ागिरहने आँखाको रोग ।

अभिष्यन्दी :- थलथले गुणले गरुङ्गोपनबाट रस निकाल्ने चौबीस थरी शिरा नामका नसाहरू थुनेर शरीरलाई भारी (गरुङ्गो) बनाउने द्रव्यलाई अभिष्यन्दी द्रव्य भनिन्छ । जस्तैः रातको दही

अम्फीफल (अङ्कुल):- काफ्राका जस्ता पात हुने, ससाना पहेँला रङ्का फूल फुल्ने र राता रङ्मा सेता धर्सा भएका फल फल्ने काँडादार एक वृक्ष, त्यसैको फल । अङ्कोट, अङ्कोटक, अङ्कोल, अङ्कोलक, निकोचक ।

अर्दित :- मुखको कुनै भाग वातदोषले गर्दा नचल्ने हुने एक रोग विशेष (फेसियल प्यारालाइसिस) ।

अलसक :- एक प्रकारको अजीर्ण रोग ।

अल्काई (रोग) :- गुदद्वारको भित्रपट्टि खटिरो आई रगत बग्ने रोग । अर्श, अलकाई, गदगुदज, गुदाङ्कुर, दुर्नामक, दुर्नाम, हर्सा ।

अष्ठीला :- मूत्राशयमा गाँठा पलाएर मूत्रत्यागमा अवरोध हुने एक रोग (प्रोस्टेट ग्ल्याण्ड) ।

असुरो :- अटरूष, अट्टरूषक, वाजिदन्तक, वासक, वासा, वाशिका, वासिका, वैद्यमातृ, वृष, सिंहास्य,सिंहिका, सिंही ।

### आ

आध्मान :- पेट फुल्ने एक रोग, अपानवायु रोकिनाले छालाको थैलो फुले जसरी पेट फुल्ने रोग ।

आनाह :- पचेर अथवा नपची दूषित भएको मलमूत्र पेटमा रोकिएर हुने रोग ।

आम :- खाएपिएका कुरा पचेपछि बन्ने रस । सामान्यतः “आम” पनि रसै हो तर आहार राम्ररी नपाकी वा नपची बनेको रस हो (शार्ङ्गधर) ।

आमदोष :- कमजोर पाचनशक्तिका कारण शरीरमा नपचेका खानेकुरा सडेर बन्ने विषालु तत्व ।

आस्थापन वस्ति :- विभिन्न औषधीको काँढापानी बनाई त्यो काँढापानीलाई छदाउन वा दिसा पिसाब गराउन प्रयोग गर्ने विधि ।

### इ

इन्द्रलुप्त :- रौंको जरामा रहने रगत खराब भएर रौं झारिदिने र फेरी रौं पलाउन नदिने रोग (के.यन.स्वामि), कपाल झर्ने रोग विशेष (च.सं.) । तालुखुइलने रोग ।

### उ

उदावर्त :- अपानवायु माथितिर सरी मलमूत्रलाई पनि माथिमाथि तान्ने पेटको रोग । अपानवायु, दिसा, पिसाब, हाई आँसु, हाच्छिउँ, डकार, बान्ता, शुक्र, भोक, तिर्खा, निःश्वास र निद्रा आउन लाग्दा जबरजस्ती रोक्ने गरे यो रोग लाग्दछ । रोग लागिसकेपछि दिसा, पिसा र अपानवायु बन्द हुन्छ । पेट कराउने गर्दछ । शरीर कमजोर भई दुख्न थाल्दछ ।

उन्माद :- पागलपन, कडा रिस, मानसिक रोग ।

### ऊ

ऊरुस्तम्भ :- तिघ्रा शिथिल हुने रोग ।

### क

कण्डेउलो :- कमरमुनिको फिलाको हाड जुन् तीन भागको हुन्छ । त्रिक, त्रिकस्थि ।

कब्जियत :- पेटमा मल रोकिएर बस्ने रोग विशेष (आनाह) ।
कम्पिल्लक :- एक प्रकारको औषधीमा प्रयोग हुने वृक्ष ।
करम :- गर्मी प्रदेशमा पोखरी वा तलाउमा उम्रने, सखरखण्डको जस्तो पात, खोक्रो डाँठ र सेतो फूल हुने एक साग; करमी । कलम्बिका, कलम्बी, कालशाक ।
कला :- धातु भित्र रहने हँडिदो (हल्का हरियो रङ तथा अमिलो र उग्लिएको स्वादको पदार्थ) जो शरीरको तातोले पच्ने गर्दछ, त्यसलाई कला भनिन्छ ।
काम्बलिक :- फलको रसलाई अमिला फल वा कन्दमूल हाली (प्रायः तिलको छोप र अनारदाना) तयार पारिने अमिलो पेय पदार्थ ।
कालकूट :- भारतको श्रृङ्गवेर, कोंकण, मलयाचल पहाडतिर हुने पीपलको रुखको जस्तो चोप आउने नौथरी कन्दविषमध्येको एक विष ।
कुटकी :- झुप्पा झुप्पा पात लाग्ने, नीलो फूल फुल्ने र कालो फल फल्ने एक भुइँझार वा त्यसको डाँठ अथवा जरा, कटु, कटुक, तिक्ता, मत्स्यपित्त ।
कुरङ्ग :- फिका तामा रङको कृष्णसार मृग ।
कोठी :- छालामा आउने कोठी, तिलकालक ।
क्लम :- कुनै परिश्रम नगर्दा पनि शरीर थाकेर मन खिन्न हुनु ।
क्रव्याद :- काँचो मासु खाने प्राणी ।
क्रोष्टशीर्ष :- क्रोष्टशीर्षक, क्रोष्टुशीर्षक, वायु र रगत बिग्रेर घुँडाको बीचमा स्यालको टाउको जस्तो खुब ठूलो र मोटो अत्यन्त दुख्ने गरी सुन्निने रोग वा रोगी ।
क्षतक्षीण :- धेरै परिश्रम वा मैथुनका कारण छाती भित्रको रस वा मासु सुक्ने रोग ।
क्षवथु :- हाच्छिउँ आइरहने एकप्रकारको नाकको रोग ।

ग

ग्रहणीः- जठराग्निको आधार भएकी नाइटोभन्दा केही माथि ग्रहणी (खानपिन ग्रहण गर्ने) एउटा नाडी हुन्छे । यिनको काम नपचेको कुरा पचाई मलमूत्र मनाएर शरीर बाहिर निकाल्नु हो । यो नाडीमा कुनै विकार भई खाएपिएको नपची बाहिर निस्कने वा पचेपनि पटकपटक गरेर बाहिर निस्कने रोगलाई ग्रहणी भनिन्छ । अन्य अर्थ : खाएको चिजमा बोसे आन्द्रोले गर्नुपर्ने काम गर्न नसक्दा हुन जाने पेटको रोग । यसले पेट फुल्ने, दुख्ने, दिसा लागिरहने र भोक नलाग्ने समस्या हुन्छ ।
गानुगोला (रोग):- गुल्म । (क) नसा सुन्निएर गाँठो पर्नु । (ख) वात आदि दोषले छाती वा पेटमा हुने हावाको गोला पर्ने रोग ।
गुनाभाः- ऋषभ, वृष, शृङ्गी । हिमालयतिर पाइने लसुनको जस्तो कन्दहुने, निर्बलिया ससाना पात हुने गोरुको सिङजस्तो बोट हुने बुटी विशेष ।
गुनाभा (कर्कटशृङ्गी विशेष)-कूर्चशीर्ष, जीवक, मधुरक, शङ्ग, शिखरी, शृङ्ग, ह्रस्वाङ्ग । हिमालयतिर पाइने लसुनको जस्तो कन्दहुने, निर्बलिया ससाना पात हुने कुचोजस्तो बोट हुने बुटी विशेष ।
गृध्रसी :- कम्मरको जोर्नी, कम्मर, ढाड र गोडा निदाई सियाले घोचेझैं दुख्ने र काम्ने, वाय वा पित्त विकारले हुने एक रोग ।
ग्राहीः- जुन औषधीले पेटभित्रको अग्निलाई बाल्दछ, "आम" आदिलाई पचाउँदछ, गर्मीकारक हुनाले गर्दा जलले पैदा गर्ने कफ आदि दोष, धातु र मललाई सोस्दछ त्यसलाई वा त्यस्तो गुणलाई "ग्राही" भनिन्छ । जस्तै : सुठो, जीरा, चाभा आदि ।
ग्लानि :- थकाइ, सुस्तता, अरुचि, घिन, पछुतो, मानसिक कष्टबाट हुने लाचारीको दुःख ।

छ

छेदन :- जुन औषधीले एक आपसमा मिली जमेर बसेको कफ आदि दोषलाई आफ्नो तागतले अलग गरी फोर्दछ (तर बाहिर निकाल्न सक्ने क्षमता हुन्न) त्यसलाई "छेदन" भनिन्छ । जस्तै : यवक्षार, मरिच, शिलाजित आदि ।

ज

जठराग्नि :- आयुर्वेद अनुसार तीन थरी अग्निमध्ये नाइटो र मुटुको बीचमा रही पित्तरूपले खाएको कुरा पचाउने अग्नि ।

झ

झिर वा सुइरोमा उनेरपकाइने मासु आदि-भटित्र, शूलाकृत, शूल्य ।

त

तक्रारिष्ट :- मोही, हर्रो, अमलाको धुलो आदि हालेर बनाइएको अरिष्ट ।
त्रिकटु :- सुठो, मरिच र पिप्पला बराबर मिसाई तयार पारिएको धुलो । फलत्रिकम्, व्योष ।
त्रिदोष :- वात, पित्त र कफ यी तीन दोष वा यी तीन दोषबाट हुने रोग ।
त्रिफला :- हर्रो बर्रो र अमला; फलत्रिकम्, वरा ।

द

दीपन :- जुन औषधीले आम (खाएको कुरा पचेर बनेको रस) लाई पचाउँदैन तर पाचकाग्निलाई बाल्दछ त्यस्ता औषधीलाई "दीपन" भनिन्छ । जस्तैः सुप ।
दीपनपाचन :- जुन औषधीले पाचकाग्निलाई पनि बाल्दछ र आमलाई पनि पचाउँदछ त्यस्ता औषधीलाई "दीपनपाचन" भनिन्छ । जस्तै : चितु, अरिड ।
दूषीविष :- शरीरका धातुलाई बिगार्ने खालका विष ।

प

पक्वातिसार :- गाढा पहेंलो र पातलो दिसा हुने रोग (ब्लोस डाएरिया) ।
पक्वाशय :- आन्द्रासँग जोडिएको भुँडिको तल्लो भाग, पाकाशय ।
पचाउन कठिन- गुरु, सर ।
पञ्चकोल :- पिप्ला, पिप्लाको जरा, चाँभो, चितु र सुठो ।
पथ्य :- रोग नभड्काउने, रोगीलाई हित गर्ने, फाइदा गर्ने, योग्य, उचित ।
पाक्य :- पाक्न लायक वा पकाउन योग्य ।
पाचन :- जुन औषधीले आमलाई पचाउँदछ तर पाचकाग्निलाई बाल्दैन त्यस्ता औषधीलाई "पाचन" भनिन्छ । जस्तै : नागकेसर ।
पाण्डु :- सम्पूर्ण शरीर र रौं सेतो हुने एक रोग; श्वेतकुष्ठ; सेतो कोढ ।
पूतिनासा :- नाक गनाउने रोग विशेष ।
प्रतुद :- ठुँगेर आहारा खाने चराहरूको वर्ग ।
प्रदर :- स्त्री-जननेन्द्रियबाट सेतो पानी बग्ने रोग ।
प्रदीपक :- नौथरी विषहरूमध्ये एक, जसलाई सुँघ्दा मानिस मर्दछ । यो समुद्री किनारमा पाइन्छ । आगाको भुङ्ग्रो जस्तो राता रङ र खजुरको जस्तो पात हुन्छ (शार्ङ्गधरसंहिता) ।
प्रदेह :- फोका वा खटिरामा लगाइने लेप
प्रमाथि :- जुन द्रव्य आफ्नो शक्तिले कान, मुख, नाक आदि प्वालबाट वा अरु प्वालबाट शरीरभित्र सञ्चित कफ आदि दोष र गढेका रोगलाई बाहिर निकाल्दछ त्यसलाई वा त्यस्तो गुणलाई "प्रमाथि" भनिन्छ । जस्तै : मरिच, बोझो आदि ।
प्रमेह :- पिसाबसँग मिसिई वीर्य अथवा शरीरका अरू धातु पातलिएर जाने विभिन्न रोगहरू ।
प्रवाहिकाः- कुपित भएको वायुले गर्दा सञ्चित भएको कफ मलसहित भई गुदद्वारबाट धेरै पटकपटक गरी निस्कने रोग ।
प्रसह :- लुछेर वा चिथोरेर मासु खाने पशुपंक्षीको वर्ग ।
प्रसेकः- मुखबाट र्‍याल वा योनिबाट पानी बहने रोग । बमन, मुखबाट पानी र नाकबाट सिङान झरिरहने रोग, एक निको पार्न कठिन हुने रोग ।
प्लीह :- कलेजो वा यसमा हुने रोग ।

ब

बृंहण-शरीर वर्धक ।

भ

भगन्दर :- गुदद्वार र अण्डकोशको मध्यमा आउने खटिरा विशेष ।
भस्मक :- जति खाएपिए पनि पच्ने र खाएपिएको कुरा पचाउन नपाउँदा शरीरका धातुलाई तानेर पचाउने रोग ।
भिरिङ्गी रोग :- रक्तविकारले जननेन्द्रियमा खटिरा आउने एक सङ्क्रामक रोग, उपदंश, फिरङ्ग ।
भुजापात :- चर्मिन्, भूर्ज, मृदुत्वच् ।
भुटेको हरियो जौ, मकै, चना आदि :- अभ्युष, अभ्यूष, अभ्योष, आपक्व, पौलि ।

**भेदन :-** वात आदि दोषले पेटभित्र अड्किएका वा गोटा परेर बसेका मलमूत्रलाई टुक्राटुक्रा पारी मलद्वार वा मूत्रनली मार्फत बाहिर निकाल्ने औषधी वा गुण । जस्तै : कटुकी ।

**मण्डल :-** यो शब्दको अर्थ आयुर्वेदका पुस्तकमा आठ दिनदेखि अठचालीस दिनसम्म लगाएको पाइन्छ ।

**मण्डलकुष्ठ :-** सेतो, रातो, सारो, नरम र चिल्लो छाँटको कोढ रोग, जसको आकार एक अर्कोसँग मिल्दोजुल्दो हुन्छ ।

**मदकारी :-** जे कुरा (खानपिन गर्दा) ले बुद्धिलाई लोप गराउँदछ त्यसलाई "मदकारी" भनिन्छ । यस्ता कुरामा तमोगुण बढी हुन्छ । जस्तै : सुरा, मद्य आदि ।

**मदात्ययः-** मात लाग्ने खालका खानपिन वा व्यवहार बढी गरेका कारण हुने रोग ।

**मलमूत्र बन्द हुने रोग :-** आनाह, विबन्ध ।

**मशक :-** छालामा आउने कालो वा रातो ससाना मासुका दाना (मुसा) ।

**मूत्रकृच्छ्र :-** पिसाबले च्याप्ने तर गर्न खोज्दा थोपा थोपा मात्र हुने रोग ।

**मूत्राघात :-** पिसाब बन्द हुने बाह्र थरीको रोग ।

**मृगाङ्क :-** क्षयरोगको विशेष औषधी (शब्दकल्पद्रुमः) ।

**मोह :-** अज्ञान, भ्रम, बेहोसी, चित्तको अशान्ति ।

## य

**यवागू :-** चामल आदि भन्दा छ गुना बढी पानीमा पकाइने खाद्य वस्तु ।

**यूष :-** दलहन आदिलाई रुमालमा पोको पारी अठार गुना बढी पानीमा उमालेर पकाउने, आधा पानी बाँकी भएपछि पोको निकाल्ने । यस्तो रसलाई यूष भनिन्छ ।

**योगवाही :-** शरीर भित्र गर्मी गर्ने पदार्थसँग मिलेर अति गर्मी गर्ने र ठण्डी गर्ने पदार्थसँग मिली अति ठण्डी गर्ने औषधी वा त्यस्तो गुण ।

## र

**रक्तपित्त :-** मुख, कान, आँखा, नाक, गुदद्वार तथा मूत्रद्वारबाट रगत बहने रोग ।

**रक्तप्रमेह :-** पुरुषका पिसाबबाट गनाउने खालको रगत बहने एक रोग ।



**रसाञ्जन :-** चुत्राको काँडा, बोक्रा वा जराको रसमा त्यति नै दूध मिसाएर एक चौथाई बाँकी हुने गरी पकाइएको ओखती । तार्क्ष्यज ।

**रसायनी :-** बुढ्यौली आउन नदिने वा बूढालाई तन्नेरी गराउने ओखती वा गुण । जुन औषधीले शरीरको बुढ्यौली (सत्तरी वर्ष पछि) मा हुने रोग र (सबै उमेरका) जरो आदि रोगलाई निको पार्दछ त्यसलाई वा त्यस्तो गुणलाई "रसायन" भनिन्छ । जस्तै : गुर्जो, रुदन्ती (हिमाली सागजातको बूटी विशेष), गोकुलधूप, हर्रो आदि ।

**राजीव :-** आङमा धर्साजस्ता रेखा हुने एकजातको मृग ।

**रेचन :-** पेटमा रहेका राम्ररी पचेका वा केही नपचेका खाएका कुरालाई पातलो बनाई मलद्वारतिर धकेल्ने औषधी वा गुण । जस्तै : सेतो निशोध ।

**रेतस :-** पुरुषको शरीरमा रहेको शुक्र धातुलाई सक्रिय (चैतन्य) बनाउने वा उत्पन्न गर्ने खालका औषधीलाई वा गुणलाई "रेतस" भनिन्छ । जस्तै : दूध, माष, भलायोको फलको गुदी, अमला आदि ।

## ल

**लेखन :-** जुन औषधीले रस आदि धातु वा वात आदि दोषलाई (भित्रभित्रै) सुकाएर (वा घटाएर) शरीरबाट बाहिर निकाली दिन्छ त्यसलाई वा त्यस्तो गुणलाई "लेखन" भनिन्छ । जस्तै : ठूलो बिही, तातो पानी, बोझो, जौ आदि ।

## व

**वमन :-** जुन औषधीले नपचेका तर पित्त र कफ बनेर पेटभित्र अड्किएका कुरालाई बलपूर्वक मुख मार्फत (बान्ता गराई) निकाल्दछ त्यसलाई वा औषधीमा हुने त्यस्तो गुणलाई "वमन" भनिन्छ । जस्तै : मैनफल ।

**वाजीकर :-** जुन औषधीले पुरुषको धातु बढाई त्यस मार्फत स्त्रीमा रोमाञ्च सहितको शक्ति सञ्चार (मैथुन सुख) पैदा गर्दछ त्यसलाई "वाजीकरम्" भनिन्छ । जस्तैः गुनालु (एकजातको बलु झार), जाइफल, कुरिलो, दूध, सखर, काउसोका गेडा आदि ।

**वातरक्त :-** हातगोडाका औंला वा अरु भागका जोर्नी सुनिई दुख्ने रोग

**विकाशि :-** जुन औषधीले (नपच्दै) शरीरका सबै बन्धनलाई खुकुलो पार्दछ र रसादि धातुका तेजलाई त्यो धातुबाट सोस्दछ त्यसलाई वा त्यस्तो गुणलाई "विकाशि" भनिन्छ । जस्तै : सुपारी, कोदो ।

**विचर्चिका :-** खोप लगाउँदा देखिने जसरी छालामा केही सुन्निएर रातो टाटा देखिने र पछि त्यसमाथि सेतो र चम्किलो पाप्रा देखिने र त्यो उप्किएपछि रगत आउने दादजस्तै एक प्रकारको छालाको रोग ।

**विद्रधि (रोग) :-** गुदद्वार, वस्ति, नाभि, कोखा, तिघ्राका जोर्नी, मिर्गौला, मुटु, कलेजो, फियोमा पैदा भएर कालान्तरमा फुट्ने खटिरा विशेष ।

**विदाह :-** पित्तप्रकोपले हात, गोडा, छाती आदि पोल्नु ।

**विलेपी :-** चामलभन्दा चार गुना बढी पानी हालेर पकाइने खाद्य वस्तु ।

**विष्टम्भ :-** दिसा रोकिएर पेट फुल्ने रोग विशेष ।

**विष्टम्भी :-** मलमूत्र अवरोध गर्ने, विष्टिम्भि ।

**विष (गरविष) :-** दुई वा दुईभन्दा बढी द्रव्यको संयोगले पैदा हुने विष ।

**विषमज्वर :-** कहिले चिसो कहिले तातो, कहिले मन्द र कहिले तीव्र भएर अनियमित रूपले आउने जरो; कामजरो ।

**विषाद :-** चाहना पूरा नहुँदा मनमा हुने दुःख, शारीरिक शिथिलतावा निश्चेष्टता, डिप्रेशन ।

**विष्किर :-** खुट्टाले खोस्रेर अनि फेरी चुच्चाले एकएक गरी टिपेर आहारा खाने खालका चराको वर्ग ।

**विष्टम्भी :-** दिसा रोक्ने वा कब्जियत गर्ने ।

**विसर्प :-** शरीरमा ससाना फोका उठी जरो आउने छालाको एक रोग । सुके लुतो ।

**विस्फोट :-** छाला काला, रातो र पातलो हुने एक प्रकारको कुष्ठरोग, विष्फोटक ।

**विस्रम् :-** काँचो मासुको गन्ध आउने ।

**वेसवार :-** उपस्कर, वेशवार, वेषवार, वेसवार । हिङ, अदुवा, मरीच्, जिरा, हलेदो र धनिया क्रमशः दोब्बर हालेर बनाइएको मसलालाई वेसवार भनिन्छ ।

**व्यवायि :-** नपाकेको तर खाएपछि शरीर भरी फैलिने र मदिरा वा विष जसरी पच्ने (र असर गर्ने) औषधीलाई वा गुणलाई "व्यवायि" भनिन्छ । जस्तै : भाँग, अफिम आदि ।

## श

**शमन :-** मानिसले खाएपिएको कुरासँग विद्वेष नगरी ती शरीरभित्र जहाँ छन् त्यहीँ गई ती कुरासँग मिसिएर तिनको दोष नष्ट गर्ने (वान्ता वा दिसा नलगाई रोग ठिक गर्ने) औषधी वा गुण । जस्तैः अमला ।



**शालाक्यतन्त्र :-** नाक, कान, मुख, आँखा आदिको चिकित्सा गर्ने शास्त्र ।

**शुक्रल :-** जुन औषधीले शुक्र वृद्धि गर्दछ त्यसलाई वा त्यस्तो गुणलाई "शुक्रल" भनिन्छ । जस्तै : अश्वगन्धा, मुसलीकन्द, सखर, कुरिलो आदि ।

**शूकदोष :-** जननेन्द्रिय बढाउन प्रयोग गरिएका ओखती दल्नाले पुरुषलाई हुने रोग ।

**शूल : -** (क) टाउको, हात, गोडा आदि कुनै पनि अङ्गमा हुने ज्यादा दुखाइ । (ख) वायुप्रकोपले हुने पेटको ज्यादा दुखाइ । (ग) वातरोग । गानु, गानो, गानुगोला, गोला ।

**शोधन :-** जुन औषधीले वात दोषका कारण शरीरभित्र कतै जमेर बसेका मललाई फोरफार गरी माथि नाकमुखबाट वा तल मलमूत्रद्वारबाट बाहिर निकाल्दछ, त्यसलाई वा त्यस्तो गुणलाई "संशोधन" भनिन्छ । जस्तैः देवदार ।

**शोफ :-** शरीरको कुनै अङ्ग सुन्निनु ।

**शोष :-** शरीर सुक्नु, छ किसिमका क्षयरोग ।

**श्वास :-** दम; कमजोरी, रोग, परिश्रम आदिले छिटोछिटो चल्ने सास; धक्ने रोग; धम्कीको रोग ।

## स

**सूक्ष्म :-** जुन औषधी रौंका प्वालप्वालमा छिर्दछ त्यसलाई व त्यस्तो गुणलाई "सूक्ष्म" भनिन्छ । जस्तै : सिधेनुन, ठूलो कण्टकारी, नीम वा अडिरको तेल आदि ।

**सूर्यावर्त :-** जति जति घाम माथि आयो उतीउती टाउको दुख्दै जाने र घाम अस्ताउँदै गएपछि कम हुँदै जाने रोग ।

**सोमरोग :-** आइमाईको योनिबाट सड्लो सेतो पानी बग्ने रोग ।

**सौराष्ट्रिक :-** सौराष्ट्र देशमा पाइने कछुवाको टाउको जस्तो मोटो, कालो गानो र पलाशका जस्तो पात हुने नौ थरी विषमध्येको एक विष ।

**सौवर्चल :-** प्राचीनकालमा सुवर्चल नामको देशमा हुने नुन विशेष ।

**संस्रन :-** पछी पच्ने सम्भावना रहेका तर वात आदि दोषले गर्दा कतै पेटभित्र अड्किएका खाएको कुरालाई नपच्दै तल्लो भागमा लेराई मलद्वार मार्फत निकाल्ने खालका औषधी वा गुण । जस्तै : राजवृक्ष फलको गुदी ।

**स्तम्भन :-** (क) रुखो, शीतल टर्रो र चाँडै पच्ने अवस्थाकम र वायुलाई उल्टो गतिमा हिँडाउने ओखती वा गुण । (ख) वीर्य आदि धातु वा दिसा रोक्ने ओखती वा गुण । (ग) शरीरको कुनै अङ्ग वा पूरै शरीर चल्न चरपटाउन नसक्ने स्थिति

वा अवस्था । जुन औषधी रुखो, ठण्डीग र्ने र टर्रो स्वादका हुनाका कारण पाकेपछि हलुका हुन्छन् र वातदोष जन्माउँदछन् तिनलाई वा त्यस्तो गुणलाई "स्तम्भन" भनिन्छ । जस्तै : ठूलो कुरो, टटेलो आदि ।

**स्तैमित्य :-** इन्द्रियले काम नगर्ने वा जड हुने अवस्था ।

**स्फिच् :-** कमरमा लागेको मासु ।

**स्वर बस्नु :-** स्वरभेद ।

ह

**हलाहल :-** नौ प्रकारका मुख्य विषहरूमध्ये ताडका जस्ता निला पात, गाईको थुनजस्तो लामो र सेतो फल, गाईको कानजस्तो गानो, दाखजस्ता फूल, झुप्पा भएर फल लाग्ने तथा यो उम्रेको ठाउँ नजिकै अरु रुख विरुवा नहुने विष ।